जब मन्दराचल पर्वत समुद्रमा डुब्न थाल्यो तब भगवान्ले कूर्मावतार लिएर आफ्नो पिठ्यूँमा त्यसलाई धारण गर्नुभयो।

आफ्नो मनलाई तिमी भगवान्को कुनै पनि स्वरूप स्थिर गरेर राख। मनको स्वभाव साकार वस्तुमा मात्र दर्शन गर्न खोज्छ। सगुणको साक्षात्कार जबसम्म राम्ररी हुँदैन, तबसम्म निर्गुणमा दृष्टि स्थिर हुन पाउँदैन। भगवान्को सगुण स्वरूपमा स्थिर भएको मन उनको निर्गुण स्वरूपमा स्थिर हुन सक्छ।

निराधार मन संसारसागरमा डुब्छ। मनरूपी मन्दराचल आधारविना स्थिर रहन पाउँदैन। उसलाई भगवतस्वरूप, भगवन्नामको आवश्यकता छ। उसले त्यो आधार पायो भने तब ऊ संसार समुद्रमा कहिल्यै डुब्नेछैन।

अनेक औषधिहरूलाई समुद्रमा विसर्जित गरेर समुद्रको मन्थन गरेको छ।

औषधिको एउटा अर्थ हो ओखती र दोस्रो अर्थ हो अन्न। जल र अन्न औषधि हुन्। यी दुवै आवश्यकतानुसार शरीरलाई दिनुपर्छ, भोक र तिर्खालाई रोग मान र तिनलाई सहने बानी गर। जस्ता प्रकारले रोग निको पार्नका निमित्त ओखती खाइन्छ सोही प्रकार अन्न-जलको पनि प्रमाणानुसार सेवन गर। शरीर हलुको भयो भने भजन राम्ररी हुन्छ।

समुद्रभित्रबाट पहिले विष निस्किएको थियो र पछिबाट अमृत।

मनलाई स्थिर गरेर प्रभुका पछि लाग्यौ भने उहाँले पहिले विष दिनुहुनेछ। त्यसलाई सह्यौ भने अमृत पनि दिनु हुनेछ। महापुरुषहरूले विविध कष्टरूपी विषपान गरेका थिए, दुःखहरूलाई सहेका थिए, त्यसकारण उनले ज्ञानामृत पाए।

जीवनमन्थनको प्रारम्भमा विष मात्र पाइएला। मन्थन यौवनबाटै आरम्भ हुन्छ। पहिले विषय पाइनेछ र विषय विषजस्तै हो।

निन्दा र कर्कश वाणी पनि विष सरह हो। निन्दा र नरक एउटै हो। निन्दारूपी विष सह्यौभने तब अमृत पाइने छ। प्रतिकूल परिस्थिति पनि विष हो। दुःख पनि विष हो।

विषको दुर्गन्ध देवहरूले सहन सकेनन्, तब प्रभुले विषपानका निमित्त शङ्करलाई बोलाउनुभयो।

जसका शिरमा ज्ञानगङ्गा हुन्छ, त्यसले विष पचाउन सक्छ। यस संसारको विषले सबैलाई पोल्दछ, तर ज्ञानगङ्गाधारीलाई पोल्न सक्दैन। शङ्कर भगवान्को जस्तै ज्ञानगङ्गालाई शिरमा राख्यौ भने तब विष सहन सकिने छ। शिवजीको पूजाले विष सहने शक्ति दिन्छ। शिवजी दान दिनुहुन्छ, त्यसकारण विष सहने शक्ति पाइन्छ।

निन्दा शब्दरूप हुनुको कारण त्यसको सत्यको सम्बन्ध आकाशका साथ हुन्छ, आत्मासँग हुँदैन, यस्तो मानेर निन्दा सहनुपर्छ।

देवहरूले शिवजीलाई विष पिउन प्रार्थना गरे। उहाँले पार्वतीसँग आज्ञा माग्नुभयो। पार्वतीले भन्नुभयो यी सबै स्वार्थी हुन् विष पिएर यदि तपाईंलाई केही भइगयो भने ?

शिवजी—'यदि सबैको कल्याण हुनसक्छ भने तब मैले कष्ट सहनु परे पनि के भो र?

अरूलाई सुखी तुल्याउन जो स्वयं दुःख सहन्छ त्यो शिव हो। स्वयंलाई सुखी तुल्याउन जो अरूलाई कष्ट दिन्छ त्यो जीव हो। अरूको हित गर्नका निमित्त जो आफ्नो स्वार्थ पनि छोड्छ त्यो शिव हो र आफ्नो स्वार्थका निमित्त अरूको काम बिगार्छ त्यो जीव हो।

शिवजीले भगवत् स्मरण गर्दै विषपान गर्नुभो।

विषलाई घाँटीमै राख्नुपर्छ, पेटभित्रसम्म पुऱ्याउने होइन, कसैलाई कठोर शब्द सुनाउने इच्छा भयो भने उसले घाँटीमै रोकिलिनू, मुखभित्र पुग्न नदिनु। विषलाई घाँटीमा राखिन्छ। यसलाई न बाहिर निकाल्नु छ न पेटभित्रै पुऱ्याउनु छ। निन्दातर्फ ध्यानै दिनुपर्दैन। कुनै द्वेषलाई संझना नगर।

विषलाई पेटभित्र कहिल्यै नराख। कर्कश-वाणी विषसमान हो। शिवजीले विषलाई घाँटीमै राख्नुभएको छ।

भागवतमा होइन तर कुनै महात्माले भनेका छन् कि जब शिवजी विषपान गरिरहनुभएको थियो तब केही छिटा तल खसेछ र त्यो विषको छिटा केही जीवहरूको आँखामा र पेटमा पर्न गएको थियो।

विषको डाह धेरै भयो भने भगवान्‌को नाउँको कीर्तन गर। भगवान्‌को नाउँले विषलाई पनि अमृत बनाइदिन्छ। शिवजीले पनि भगवान्‌को नाउँ लिएर विषपान गर्नुभएको थियो।

संसारमा विष पनि छ अमृत पनि। जसले विषलाई पचाउन सक्ला त्यसले अमृत पाउला। कृष्ण-कीर्तन अमृत हो।

सोह्र वर्षदेखि जीवनमा मन्थन शुरू हुन्छ, मनमा वासनाको विष उत्पन्न हुन्छ। त्यसवेला मनलाई मन्दराचलजस्तो स्थिर गर्नु अनि त्यस मनोमन्थनबाट, संसारमध्येबाट भक्ति र ज्ञानरूपी अमृत प्राप्त हुनेछ, फेरि मानव अमर भइहाल्ने छ। यस किसिमबाट जसले भक्ति र ज्ञान प्राप्त गर्ला, त्यसको मृत्यु हुने छैन।

शङ्कराचार्य, बल्लभाचार्य, मीराबाई, तुकाराम आदि र अरू पनि असंख्य कति सन्त-साधु-भक्तहरूलाई कुनै भूल पाइएको छैन। ती सबै अमर छन्। उनलाई सबै संझना गर्छन्।

भगवान् पहिले विष दिनुहुन्छ अनि फेरि अमृत। जो उहाँका पछि लाग्छन् उनको उहाँ परीक्षा गर्नुहुन्छ।

जगत्‌को कल्याणका निमित्त, असलका निमित्त शङ्करले विषपान गर्नुभयो। साधु पुरुषहरूको यस्तै व्यवहार हुन्छ। सज्जन पुरुष आफ्नो प्राणको बलिदान दिएर पनि अरूका प्राणको रक्षा गर्छन्। यता संसारका मानव मोहमायासँग लटपटिएर पारस्परिक वैर-भावना बढाउँदै रहन्छन्।

परोपकारी सज्जन प्रजाको दुःख दूर गर्नका निमित्त स्वयं दुःख सहन गर्छन्। उनीहरू भन्छन्— 'सबैका निमित्त म दुःख सहिलिउँला, तर आफ्ना निमित्त कसैलाई पनि दुःख सहन दिनेछैन।' साधु पुरुष अरूहरूको दुःखबाट दुःखी हुन्छन् तर यो दुःख होइन। यो तर सबैको हृदयमा राज भएका परमात्माको आराधना हो।

साधुपुरुष कस्ता हुन्छन्, त्यो तुलसीदासको वाणीबाट सुनौं—

**संत हृदय नवनीत समाना, कहा कविन्ह पर कहै न जाना।**
**निज परिताप द्रवइ नवनीता, परदुःख द्रवइ संत सुपुनीता॥**
**परहित सरिस धर्म नहिं भाई।**
**परपीड़ा सम नहिं अधमाई॥**

मन्थन गर्दा-गर्दा गौमाता कामधेनु प्राप्त भइन्। गौमाता कामधेनुको दान ऋषिमुनिहरूलाई दिइयो।

जो सम्पत्ति पहिले पाइएला त्यसलाई परोपकारमा उपयोग गर।

कामधेनु सन्तोषको प्रतीक हो। सन्तोष कामधेनुको स्वरूप हो। जसको आँगनमा सन्तोषरूपी गाई छ, त्यो ब्राह्मण मात्र ब्रह्मनिष्ठ हो। असन्तोषी मनुष्य पाप गर्दछ। ब्राह्मणको जीवन अति सात्त्विक हुनुपर्छ।

त्यसपछि उच्चैःश्रवा नाउँको घोड़ा प्राप्त भयो, यसलाई देखेर दैत्यहरूको मन लोभिएकाले उनीहरूलाई दिइयो।

श्रवको अर्थ हो कीर्ति। उच्चैःश्रवा कीर्तिको प्रतीक हो। मनलाई जो पर्वतजस्तो स्थिर गर्न सक्ला त्यसलाई जगत्मा कीर्ति प्राप्त हुनेछ र लक्ष्मी पनि। जसको मन कीर्तिमा फँस्दछ, त्यसलाई अमृत पाईंदैन।

साधनको आरम्भमा कीर्ति पाइन्छ। मन यदि यसैमा फँस्न गयो भने भगवान् पाइनुहुन्न। मान धेरै पाउनेहरूको पुण्य क्षय हुन्छ। जुन जीवलाई मानको मोह छैन र जो आर्द्रभावले प्रभुको प्रार्थना गर्छ त्यस जीवलाई परमात्माले आफूजस्तै बनाउनुहुन्छ।

विष्णु सहस्रनामावलीमा 'अमानी मानदो' भनेको छ। भगवान् स्वयं अमानी हुनुहुन्छ, तर जीवलाई भने मान दिनुहुन्छ।

जसको मन उच्चैःश्रवा अर्थात् कीर्तिको मोहमा भुलेको छ भने त्यसलाई अमृत पाईंदैन। दैत्यहरूले उच्चैःश्रवालाई लिइसकेका हुनाले उनीहरूले अमृत पाएनन्।

विना परीक्षा परमात्माले कृपा गर्नुहुन्न। जो कीर्ति र प्रसिद्धिमा फँस्दछ त्यसले अमृत पाउँदैन।

यसपछि समुद्र मंथनबाट जब ऐरावत हात्ती निस्किएको थियो दैत्यहरू घोड़ा लिएको कारणले पछुताउ गर्न थाले।

हात्ती सूक्ष्म दृष्टिको प्रतीक हो। हात्तीका आँखा साना-साना हुन्छन्। देवहरूलाई यो हात्ती दिइयो।

स्थूल दृष्टि देहदृष्टि हो। सूक्ष्मदृष्टि आत्मदृष्टि हो। सूक्ष्मदृष्टिवालालाई अमृत पाइन्छ। सूक्ष्मदृष्टिवालालाई कामदेवले सताउन सक्दैन।

त्यसपछि समुद्रमंथनबाट अप्सरा प्राप्त भइन्। दैत्यहरूलाई देवहरूले भने—'यसपछि जे निस्किएला त्यो हामी लिनेछौं। पारिजात र अप्सरा देवहरूले पाए।'

अब समुद्रमा लक्ष्मीजी प्रकट हुनुभयो। यी चाहिँ साक्षात् जगदम्बा महामाया हुनुहुन्छ। यिनलाई हामीले पाए हुन्थ्यो भनी दैत्यहरूले सोच गर्न लागे। तर माग्नेलाई लक्ष्मी पाइँदैन।

लक्ष्मीजीलाई सिंहासनमा बसालियो। यस जगत्‌मा लक्ष्मीनन्दहरूलाई सबै मान गर्छन्।

लक्ष्मीजी विचार गर्न लाग्नुभयो कसको घाँटीमा वरमाला लाइदिऊँ। सर्वगुण सम्पन्न पुरुषको खोजीमा निस्कनुभयो।

उहाँलाई ऋषिहरूको मण्डपमा ल्याए। यी ऋषिहरू ज्ञानी पनि छन् र तपस्वी पनि तर क्रोधी धेरै छन्।

तप गर्नाले मात्र केही फल पाइँदैन। तपलाई भक्तिको पनि साथ हुनुपर्छ। तप गर्नाले शक्ति बढ्दछ र यसबाट क्रोध पनि बढ्न जान्छ। तप र ज्ञानबाट शक्ति बढ्दछ तर त्यो उम्लिन थाल्छ। त्यसकारण ज्ञानका साथ भक्ति पनि हुनुपर्छ। भक्ति दीनता, नम्रताको सिंहासनमा राज हुन्छ।

लक्ष्मीको मन मानेन। अगाड़ि देवगणहरू पनि बसिरहेका थिए। तिनीहरू क्रोधी थिएनन् तर अति कामी थिए।

शास्त्रले क्रोधको रातो, लोभको पहेंलो र कामको कालो रङ्ग भनेको छ।

देव महान् भएर पनि कामी हुन्। त्यसकारण लक्ष्मी अगाड़ि बढ्नुभो। अगाड़ि बसिरहेका थिए परशुरामजी। उनी जितेन्द्रिय छन्, कामी र क्रोधी छैनन् तर निष्ठुर छन्। क्षत्रियहरूका सानासाना बालकहरूलाई पनि मार्दछन्, त्यसकारण लक्ष्मीलाई मन परेनन्।

त्योभन्दा अगाड़ि मारकण्डेय ऋषि बसिरहेका थिए। उनी सुन्दर पनि छन्, दीर्घायुषी पनि छन्, तर भरिसभामा आँखा चिम्लेर बस्दछन्। लक्ष्मीजीतर्फ उनले हेर्दै हेरेनन्। लक्ष्मीजीले सोच्नुभयो 'यी महात्मा अनासक्त छन्। मेरातर्फ हेर्दा पनि हेर्दैनन्। म यिनलाई बरौं भने शायद भविष्यमा मेरातर्फ ध्यान नदिने होलान्।'

मार्कण्डेयले भने—'तिमीलाई कसरी सुन्दर मानूँ ? तिमीभन्दा कृष्ण ज्यादै सुन्दर लाग्छ। जबसम्म उनले तिमीलाई आफ्नो गराउँदैनन्, म तिम्रो दर्शन गर्ने छैन। मलाई लक्ष्मीको मोहै छैन।'

जब लक्ष्मीको मोह छुट्‌दछ, तब प्रभुभक्तिको प्रारम्भ हुन्छ।

तुकारामजीको गरीबीलाई देखेर शिवजीले उनका निमित्त सुवर्ण भरिएको एउटा थाल पठाइदिए। तुकारामजीले भने—'जब म लक्ष्मीको पछि लागेर दगुरिरहेको थिएँ, तब उनीसँग मेरो भेट भएन। जब मेरो मन भगवान्‌सँग मिलिसकेको छ, तब उनी बाधा दिन भनी आइरहेछिन्।' उनले त्यो सुवर्णले भरिएको थाल फर्काइदिए।

सारा दिन भजन गर्नेवाला र केही पनि उद्यम नगर्नेलाई लक्ष्मीजी भेटिनुहुन्न।

अगाड़ि बढ्‌दा त्यहाँ शङ्कर भगवान् राज भएको थियो। लक्ष्मीजी आफ्ना सखीहरूका साथ त्यहाँ आउनुभो। शङ्कर कामी पनि हुनुहुन्न र क्रोधी पनि हुनुहुन्न। लक्ष्मीजीले शङ्कर भगवान्‌लाई देख्नुभयो। शिवको स्वभाव मङ्गल छ तर वेश अमङ्गल छ र चेष्टा भयानक, उहाँ भोला पनि धेरै।

शङ्करको नजिकै नारायण बसिरहनुभएको थियो। लक्ष्मीजीले सोच्नुभयो 'उहाँ मात्र उत्तम हुनुहुन्छ।' जसको हृदय कोमल र मृदु हुन्छ उसकै पछि लक्ष्मी जान्छिन्। उहाँले नारायणलाई वरमाला लगाइदिनुभो। लक्ष्मीनारायण की जय !

अहिलेसम्म नारायणको दृष्टि पृथ्वीतर्फ थियो। लक्ष्मीजीले उहाँलाई वरमाला लगाइदिएपछि तब उहाँ यताउता हेर्न थाल्नुभयो।

जोसँग लक्ष्मी हुन्छिन् उसले आफ्ना वरपरकालाई पनि हेर्नुपर्छ। सामान्यतः धन पाएपछि मानिस चारैतर्फ देख्दैन। म, मेरी पत्नी र पुत्र बस् यति, यो कुरा ठीक भएन। धनीमानीहरूले चारैतर्फ हेरेर सबै दीन-दुःखीहरूको दुःखलाई दूर गरिदिनुपर्छ।

अब समुद्रमन्थनको काम अघि बढ्‌न थाल्यो। दैत्यहरूले सोचे एक पटक घोड़ा पाइएको हो, तर अरू सबै देवताहरूले पाए। अब जे निस्किएला ती सबै हामी लिने। यस पटक रक्सी निस्कियो। दैत्यहरूले रक्सी पाए। खाऊ, खाऊ बस यति मात्र।

मन्थनको काम अगाड़ि बढ़ेपछि भगवान् धन्वन्तरी अमृत-कुम्भ लिएर प्रकट हुनुभयो। दैत्यहरूले जब त्यो घड़ा खोसेर लगे तब देवगण दुःखी भए र भगवान्‌का शरणमा गए। भगवान्‌ले भन्नुभयो—'अब शक्तिले होइन, युक्तिले काम लिनुपर्छ।'

जुन दैत्यका हातमा सबभन्दा पहिले अमृतकुम्भ परेको थियो, उसले भन्न थाल्यो 'म पहिले पिउँछु' उसको दाजुले पनि 'म पहिले पिउँछु' भन्यो र फेरि सबै दैत्यहरू यस कुरालाई लिएर एक अर्कासँग झगड़ा गर्न थाले। आपस्तको झगड़ाले गर्दा अमृत कसैले पनि पाएनन्।

जसका घरमा यी दैत्यहरूको जस्तै गृहकलह हुन्छ, त्यस घरभित्रबाट कसैलाई पनि ज्ञानामृत र भक्ति-अमृत पाइन सक्दैन।

झगड़ा गरिरहेका दैत्यहरूको समूहको बीचबाट भगवान् मोहिनीको रूप लिएर प्रकट हुनुभयो। मोहिनीको सौन्दर्य देखेर दैत्यहरू अकमकाए। अहा, कति सौन्दर्य छ !

मोहिनी मोहकै स्वरूप हो। जो मोहिनीमा आसक्त हुन्छ, त्यसले अमृत पाउँदैन। संसारको प्रत्येक वस्तुमा माया छ। सौन्दर्य कल्पना मात्र हो। एउटा वस्तु तिमीलाई राम्रो लाग्छ भने, त्यही वस्तु संभवतः कसैलाई राम्रो नलागोस्। सौन्दर्य आँखामा छ। वस्तुमा मनुष्य सौन्दर्यको आरोपण गर्छ सुन्दर तर श्रीकृष्ण मात्र हुनुहुन्छ। जगत्‌मा जे-जति सुन्दर देखिन्छ त्यो सबै श्रीकृष्णका सुन्दरताको कारणले सुन्दर भएको छ।

जसलाई मोहिनीको मोह लागिहाल्छ उसलाई अमृत-भक्तिरूपी अमृत पाइँदैन। जो संसारको मोहिनीमा, सौन्दर्य र विषयहरूको मोहमा फँस्दछ, त्यसलाई अमृत पाइँदैन, तर जसको मन मनमोहन श्रीकृष्णमा फँस्दछ उसले अमृत पाउँछ।

जबसम्म सांसारिक मोहिनीको मोह छ, भगवान् पाइनुहुन्न। सांसारिक पदार्थहरूमा जसरी मन फँसेको छ सोही किसिमबाट श्रीकृष्णको स्वरूपमा नफँसेसम्म भक्ति फलवती हुँदैन र भक्तिको सिद्धिविना भगवान् भेटिनुहुन्न। स्वरूप-आसक्तिविना भक्ति सिद्धि हुन पाउँदैन।

सांसारिक विषयहरूको मोह छोड्यौ भने भक्ति हुन सक्ला। जसै-जसै प्रभुमा प्रेम बढ्दै जान्छ सोही क्रमले विषयहरू तर्फ अरुचि हुँदै जानेछ। समुद्रको ज्वार र भाटा परस्परविरोधी हुन्। यस्तै प्रकारले प्रभुमा प्रेम बढ़ेपछि विषयासक्ति घट्दै जानेछ। आँखामा कामलाई राखेर जगत्‌लाई हेर्‍यौ भने मोह उत्पन्न हुन्छ र आँखामा ईश्वरलाई राख्यौ भने मोहको नाश हुन्छ।

सांसारिक स्वरूपमा आसक्ति माया हो, ईश्वरको स्वरूपमा जसको मन फँस्न जान्छ, त्यही दैत्य हो। जो परस्त्रीको चिन्तन गर्छ त्यो राक्षस हो।

कामातुर दैत्यहरूले मोहिनीलाई घेरेर सोध्न लागे, 'देवी ! तिमी कहाँबाट आएकी हौ ? तिम्रो गाउँ कुन हो ? तिम्रो विवाह भएको छ वा छैन ? मोहिनीको मायामा दैत्यहरूको शुद्धिबुद्धि हराइसकेको थियो।'

भगवान् सोचिरहनुभएको थियो यी दैत्यहरूलाई अमृत नदिनुमै कल्याण छ। यिनले अमृत भेट्टाए भने अमरता प्राप्त गरेर अभिमानी भई पाप धैरै गर्ने छन्।

मोहिनीले हाँस्दै भनिन्—म तपाईंहरूको कल्याणका निमित्त आएकी छु। मेरो कुनै एउटा घर छैन। मेरा धेरैवटा घर छन्। जो पुरुष मसँग प्रेम गर्छ म त्यसको घर जान्छु।

म तुकारामका घरमा पनि जान्छु र नरसिंह मेहताको घरमा पनि जान्छु।

वैष्णवका जति पनि घर हुन्छन् सबैमा भगवान्‌को पनि भयो।

दैत्य मूर्ख थिए, त्यसकारण मोहिनीका वचनहरूको गूढ़ार्थ बुझ्न सकेनन्। जुन दैत्यको हातमा अमृतकुम्भ थियो त्यसले मोहिनीलाई लोभिने आँखाले हेरिरहेको थियो। त्यसले भन्यो—

'म यो कुम्भ तिमीलाई चढ़ाउँछु।' उसले विचार गऱ्यो यसबाट प्रसन्न भएर मोहिनी उसको घरमा आउलिन्। मोहिनीले उसलाई सोधिन्—यस गाग्रोमा के छ? उसले जवाफ दियो अमृत छ।

सौन्दर्य कुनै जड़ वस्तुमा छैन। जसलाई हेरेर विकार जाग्छ त्यो सौन्दर्य होइन।

दैत्यले त्यो घड़ा मोहिनीको हातमा दियो र भन्यो—देवीजी, बाँड्नुहोस्। हामी शान्तिसाथ पिउने छौं। हात जोड़ेर बस्ने छौं, झगड़ा गर्ने छैनौं।

मोहिनी देवीले देव र दानवहरूलाई भिन्ना-भिन्नै दुइ पंक्तिमा बसालिन् र पहिले दैत्यहरूका नजिक गएर उनीहरूलाई भनिन्—'म तपाईंको कल्याण गर्न चाहन्छु, तर मास्तिरको अमृत पानीजस्तो छ, त्यसकारण त्यसलाई देवहरूलाई ख्वाइदिऊँ र तल्तिरको जो राम्रो अमृत छ त्यो तपाईंलाई ख्वाउनेछु। यो कुरा ठीक होइन?'

बिचरा मोहान्ध दैत्य, तिनीहरूले भने—हुन्छ, हुन्छ। हामी तल्तिरको भाग पिउँला। तपाईंको हातबाट एक थोपा पाए पनि बहुतै हो। तिनीहरूले मोहान्ध भएर बुद्धि गुमाइसकेका थिए। अन्यथा एउटै, गाग्रोमा अमृत दुइ प्रकारको कसरी हुन सक्छ?

दैत्यहरूले भने—'देवीजी तपाईंलाई जो ठीक लाग्छ त्यही गर्नुहोस्।'

मोहिनी देवीले देवहरूलाई अमृत पिलाउन थालिन्। कही बेरपछि दैत्य आत्तिएर सोच्न थाले यस कुरामा छल देखिन्छ। दैत्य राहूले सोच्यो यसमा केही कपट छ। यस नारीको विश्वास गरेर हामीले बहुतै ठूलो भूल गऱ्यौं। यस्तो सोच्तै त्यो आफ्नै भाग नगुमाउनलाई देव पक्षमा गएर बस्यो। राहू देवहरूको पंक्तिमा सूर्य र चन्द्रका बीचमा बस्यो।

मोहिनी देवीले थाहा पाइसकिन् त्यो दैत्य हो, तर पंक्तिभेद नगर्ने हेतुले राहूलाई पनि अमृत दिइयो।

भोजनमा विषमता कहिले नगर। जसले पंक्तिभेद गर्दछ त्यसलाई संग्रहणी नाउँको रोग लाग्छ। जबसम्म पूर्वजन्मको पुण्य बलवान् हुन्छ, तबसम्म पापको फल पाईंदैन।

यो पनि सोच, जब इन्द्रादि देवताहरूले अमृत पाइरहेका थिए तब राहु त्यहाँ आएन तर जब जब सूर्य-चन्द्रले अमृत पिइरहेका थिए तब ऊ आइपुग्यो। मनको स्वामी चन्द्र हो। चन्द्र मनको स्वरूप हो। बुद्धिको स्वामी सूर्य हो। सूर्य बुद्धिको स्वरूप हो। जब हातहरूद्वारा र जिभ्रोद्वारा मनुष्य भक्ति गर्दछ तब विषयरूपी राहू बाधा गर्न आउँदैन। तर जब मनुष्य मनद्वारा, बुद्धिद्वारा ईश्वरको ध्यान गर्नमा लाग्दछ, तब विषयरूपी राहू बाधा गर्नलाई आइपुग्छ। मन-बुद्धिलाई ईश्वरको ध्यानमा लगाएनौ तब राहू आयो भन्ठान। मन र बुद्धिलाई जो भक्तिरूपी अमृत मिल्दछ, त्यो विषयरूपी राहूले हेर्न सक्दैन। त्यसकारण विषयरूपी राहू बिघ्न पार्न आउँछ। यस विषय-राहूलाई ज्ञानचक्रद्वारा नष्ट गरिदेऊ।

राहूले अमृत पिउन शुरू गरेको मात्र थियो तब भगवान्‌ले सुदर्शन चक्र चलाएर त्यसको शिर उड़ाइदिनुभयो।

अर्थात् सुदर्शनचक्र—ज्ञानरूपी सुदर्शन चक्रद्वारा विषय-राहूको नाश गरे तर पनि ज्ञान र बुद्धिद्वारा विषय राहू मारिँदैन। ज्ञान र बुद्धिको धेरै विश्वास नगर। एकलो ज्ञानमात्रले केही पनि हुन सक्दैन, किनभने राहू यसो भनौंभने अमर छ। कुनै सच्चा सन्तको कृपा नभइकन विषय-राहू मारिँदैन।

ज्ञानमात्रले विषयहरूको नाश हुन सक्दैन। ईश्वरको अनुग्रहबाट मात्र मन निर्विषयी हुन्छ। भगवान्‌को कृपाविना मन निर्विषयी हुन सक्दैन, ज्ञानको आश्रय लिएर पनि अति दीन हुन सक्यौ भने परमात्माले कृपा गरेर विषय राहूलाई मारिदिनुहुनेछ। ज्ञानमात्रले निर्विषयता हुन पाउँदैन। ईश्वरको कृपाले निर्विषयता आउँदछ—

रसवर्जं रसोऽप्यस्य परं दृष्ट्वा निवर्तते।

(गी० २-५९)

परमात्माको कृपा र साक्षात्कारबाट विषयासक्ति र विषयानुरागिता मध्येबाट मन निवृत्त हुन पाउँछ।

दैत्य भगवान्‌बाट विमुख भए, त्यसकारण उनले अमृत पाएनन्।

संसारको मोहिनीमा फँस्यौ भने तब भक्तिरूपी अमृत कहिल्यै पाइने छैन।

मोहिनी देवीले सारा अमृत देवहरूलाई ख्वाइदिइन् र गाग्रो दैत्यहरूको सामुन्ने राखिदिइन्। दैत्यहरू चिच्याएर कराउन थाले—'कपटी विष्णु, तिमी सारी लाएर आयौ। तिमीलाई लाज लाग्दैन?'

देवदानवहरूका बीच भयानक युद्ध भयो। दैत्यले हारे।

जो मोहिनीका पछि बौलाहा भएर हिँड्दछ, त्यो दैत्य हो। संसारको मोहिनीमा फँस्नेवाला दैत्य हो। दैत्यहरूको श्रम र तप सांसारिक सुखका निमित्त हुन्छ। रावणले र हिरण्यकशिपुले के कम तप गरेका थिए, तर उनको सारा तप भोगविलासका निमित्त मात्र थियो, भगवान्‌का निमित्त थिएन।

नारदजीले कैलाशमा गएर शिवजीसँग सोध्नुभयो—'के तपाईंले नारायणको मोहिनी रूपको दर्शन गर्नुभयो?' तब शिवजी मोहिनी स्वरूपको दर्शन गर्न भनी सपरिवार बैकुण्ठधाम आउनुभयो।

नारायणले शिवजीको स्वागत गर्दै आगमनको कारण सोध्नुभयो। शिवजीले भन्नुभयो, 'म तपाईंको दर्शन गर्न भनी आएको छु।' भगवान्‌ले भन्नुभयो, 'म सामुन्नेमै उपस्थित छु।' शिवजीले भन्नुभयो—'म तपाईंको मोहिनीस्वरूपको दर्शन पनि गर्न चाहन्छु।'

'प्रभु ! तपाईंले कामदहन गर्नुभएको छ भने यस्तो मोह किन?'

शिवजी—मैले तपाईंको सबै जन्म देखिसकेको छु। त्यसकारण यो मोहिनी अवतार पनि हेर्न चाहन्छु। (शिवजी अनादि र अनन्त हुनुहुन्छ—यस्तो भन्दछन्।)

प्रभुले लीलाको रचना गर्नुभयो। एउटा सुन्दर बगैंचा, त्यसमा फूलको गुच्छा खेलाइरहेकी सौन्दर्यवती युवती। शिवजीले यो देख्नासाथ आफ्ना साथ भएकी पार्वतीलाई समेत बिर्सिदिनुभयो। भगवान्‌को मायाले शङ्कर मोहित हुनुभयो।

जसका शिरमा ज्ञानगङ्गा छ र जसको वाहन ज्ञान हो भने के त्यस्तालाई कामले प्रभावित पार्न सक्छ ? तर शिवजीले यो देखाउन खोज्नुभएको छ भगवान्‌को माया बुझ्न बड़ो कठिन छ।

देवी ह्येषा गुणमयी मम माया दुरत्यया।
मामेव ये प्रपद्यंते मायामेतां तरन्ति ते॥

(गी० अ० ७-१४)

मेरो यस मायालाई पार गर्न बड़ो कठिन छ तर जो मेरो शरणमा पर्छ त्यो अनायासै यस मायाको पारि तरिहाल्छ।

शिवजीले देहभान बिर्सनुभयो। दर्सन गर्नेले देहभान बिर्सन्छ।

शिवजी सोच्न थाल्नुभयो दर्शन मात्रले यस्तो आनन्द पाइन्छ भने मिलन तब झन् कति आनन्ददायी होला।

आनन्द अद्वैतमा मात्र छ।

शिवजी मिलनातुर भएर दगुर्नुभयो। उहाँले प्रेमसाथ आलिङ्गन दिन थाल्नुभयो तब चतुर्भुज नारायण प्रकट हुनुभयो। हरि र हरको मिलन भयो।

हरि र हर तर एउटै हो।

शिवजीले कैलाश फर्किआएपछि ऋषिहरूलाई उपदेश दिनुभयो—'मेरा श्रीकृष्णको मायाले सबैलाई नचाएको छ।' मनको कहिले पनि विश्वास नगर्नु। यो मायाले कहिले पतनको खाल्डोमा फ्याँकिदिने हो यसको केही पत्तो छैन। म जितेन्द्रिय छु यस्तो गर्व कहिल्यै नगर। मनमा सूक्ष्म रूपले लुकेर बसेको विषय अवसर पाउनासाथ प्रकट भइहाल्छ। मायाको पर्दा हटाउनका निमित्त मनलाई कृष्णमय तुल्याऊ।

ठूला-ठूला ऋषिमुनि पनि अल्मलिएका थिए भने हिजोआज झन कलियुग छ। कलियुगीन मनुष्य कामको कीरो हो। उसलाई झन् बढ़ी ध्यान हुनुपर्‍यो।

शिवजी मनुष्यलाई सम्झाउनुहुन्छ हरिस्मरण र हरिकीर्तनले मात्र मनुष्यलाई मोहिनीको मोहबाट बचाउन सक्छ।

सातौं मन्वन्तरमा श्राद्धदेव मनु भए। उनका समयमा कश्यप र अदितिका घरमा भगवान् वामनको अवतार भयो।

परीक्षित राजाले भन्नुभयो—म सातौं मन्वन्तरका वामन भगवान्‌को कथा सुन्न चाहन्छु। मलाई उनको चरित्र सुनाउनुहोस्।

शुकदेवजी वर्णन गर्नुहुन्छ—

राजन् ! देवहरूका साथमा भएको संग्राममा पराजित भएपछि दैत्यहरूले शुक्राचार्यको आश्रय लिए। शुक्राचार्यका कृपाले दैत्यहरूको बल बढ्‌न थाल्यो। इन्द्रद्वारा पराजित बलिराजा सन्तहरूको सेवा गरेर फेरि पनि बलवान् हुन थाले। शुक्राचार्यले उनलाई विश्वजित् यज्ञ गर्न भने र विश्वजित् यज्ञ गराइयो। त्यसबाट उनलाई सर्वजित् रथ प्राप्त भयो।

शुक्रको सेवा गर्नेवाला बली बन्दछ। शुक्र-शुक्र तत्त्वले यो शरीर बनेको छ। ब्रह्मचर्यको सेवा गर्नाले बली बन्नेछौ। शुक्राचार्य अर्थात् संयम। ब्रह्मचर्यको सेवा गर्नाले संयमद्वारा दैत्य बली ( बलवान् ) बन्यो।

सबै विषयहरूलाई यज्ञमा होम। संयमरूपी यज्ञमा सबै विषयहरूलाई होम गरेर बली—जितेन्द्रिय बन। बलवान् बनेका बलिलाई शुक्राचार्यले आफ्नो ब्रह्मतेज दिए। बलिराजाले देवहरूलाई हराए। स्वर्गको राज्य दैत्यहरूले हात लाए। बलिराजालाई इन्द्रासनमा बसाए।

शुक्राचार्यले विचार गरे यदि बलिले सय अश्वमेध यज्ञ गरे भने तब स्वर्गको राज्य पनि उनले सदाका निमित्त पाउने थिए। यज्ञ गर्नका निमित्त बलिराजा भृगुकच्छ ( भरुच भड़ौंत ) गए। अश्वमेध यज्ञ गरियो।

बलिराजाले स्वर्ग जितेपछि देवगण आत्तिएर भागेर आफ्ना गुरु बृहस्पतिका समीप गए। बृहस्पतिले भने—'बलिले जब भृगुवंशी ब्राह्मणहरूको अपमान गर्लान्, तब उनी नष्ट हुनेछन्।'

यता देवताहरूकी माता अदिति दुःखसन्तप्त भइन्। कश्यप ऋषिले कारण सोध्दा उनले सम्पूर्ण कुरा बताइन्। अदितिले कश्यपको धेरै सेवा गरेर वर मागिन्—'मेरा पुत्रहरूको स्वर्गको राज्य फिर्ता होस्।'

कश्यपले भने—'दैत्य ब्रह्मचर्यको पालन गर्छन्। धर्मको कवच पहिरन्छन्, नीति मात्र जसको शिरच्छत्र छ उनलाई कसले मार्न सक्छ ? जीवको पापले मात्र उसलाई मार्दछ, भगवान्‌ले होइन। दैत्य अहिले पवित्र जीवन बिताइरहेछन्, अब यिनलाई भगवान्‌ले पनि मार्न सक्नुहुन्न। अतः भगवान्‌ले शक्तिद्वारा होइन तर युक्तिद्वारा देवहरूलाई सुखी पार्ने यत्न गर्नुहुनेछ।'

यस कारण वामन चरित्रमा युद्धको कथा छैन। भगवान्‌ले पनि बलिलाई मार्नुभएन।

कश्यपले भने—'देवी, तिमी पयोव्रत गर। फाल्गुन मासमा यो व्रत गर्नुपर्छ। विधिपूर्वक व्रत गर्नाले स्वयं भगवान् तिम्रो घरमा पुत्ररूपमा आउनुहुनेछ।'

पति-पत्नी साथ-साथै ईश्वरको आराधना गरून्। तब प्रभु शीघ्र प्रसन्न हुनुहुन्छ।

सबै आश्रमहरूमध्ये गृहस्थाश्रम श्रेष्ठ छ। अदिति-कश्यपको गृहस्थाश्रम श्रेष्ठ थियो।

गृहस्थ योगाभ्यास गर्दैनन् तापनि उनले योगको फल पाउन सक्दछन्।

यत्र योगो ह्ययोगिनाम्।

(भा० ८-१६-५)

जसले योगसाधना गर्न पाउँदैनन् उनलाई गृहस्थाश्रमले योगको फल दिन्छ। गृहस्थाश्रममा धर्म मुख्य हो, काम-सुख गौण हो।

जबदेखि दुलहाले घोड़ाको साटो मोटरको सवारी गरे, गृहस्थाश्रममा गड़बड़ी भैरहेको छ। आजकलका दुलहालाई घोड़ाले कहीं खसाली नदेवोस् भन्ने डर छ।

जसले एउटा घोड़ालाई नियन्त्रित गर्न सक्दैन त्यसले एघार घोड़ाहरू ( पाँच कर्मेन्द्रिय, पाँच ज्ञानेन्द्रिय र मनलाई कसरी नियन्त्रित गर्न सक्ला ? गृहस्थले यी एघार इन्द्रियहरूलाई नियन्त्रणमा राख्नुपर्छ, संयम राख्नुपर्छ। विवाह विलासका निमित्त होइन, काम विनाशका निमित्त हो।

सत्सङ्गबाट गृहस्थाश्रम सफल हुन्छ। जो आनन्द योगीलाई समाधिमा पाइन्छ। त्यही आनन्द गृहस्थले घरमा पाउन सक्छ तर यसका निमित्त पति-पत्नीलाई चाहिन्छ उनले एकान्तमा कृष्णाकीर्तन गरून्।

शास्त्रहरूमा गृहस्थाश्रमको बड़ो प्रशंसा गरेको छ र जो निन्दा गरेको छ त्यो वासनाको हो। कुनै पनि स्त्री या पुरुष खराब हुँदैन, तर उसको मनमा लुकिरहेको कामवासना खराब हुन्छ।

महात्माहरूले कैयौं पटक भनेका छन्—गृहस्थको आनन्द योगीको आनन्दभन्दा पनि श्रेष्ठ छ।

ईश्वरका साथ खेल्नेवाला श्रेष्ठ हो कि आफ्नो काखमा स्वयं ईश्वरलाई पनि खुवाउनेवाला श्रेष्ठ हो ? योगी परमात्माको साथ खेल्छ, त्यसकारण श्रेष्ठ छ, तर गृहस्थ पनि साधारण होइन।

गृहस्थाश्रम बिग्रन्छ कुसङ्गले। गृहस्थाश्रमको लक्ष्य ठीकसँग नबुझेको कारणले त्यो बिग्रिन लाग्छ।

कश्यप-अदितिको गृहस्थाश्रम श्रेष्ठ थियो, दिव्य थियो। उनीहरू पवित्रतापूर्वक रहेर तपस्या गर्थे। त्यसकारण प्रभुले उनको घरमा जन्म लिन सोच्नुभयो।

आज पनि यदि कोही नारीले अदितिको जस्तै पयोव्रत गरी भने र उसको पति कश्यप जस्तो बने तब भगवान् उनका घरमा जन्म लिनलाई तयार हुनुहुन्छ। अदितिको अर्थ हो अभेद बुद्धि, ब्रह्माकार बुद्धि। यस्तै वृत्तिबाट मात्र ब्रह्माको प्रकटीकरण हुन्छ।

कश्यपको अर्थ हो मन। जसको मनोवृत्ति ब्रह्माकार भएको छ त्यही कश्यप हो। यदि पत्नी अदिति र पति कश्यप बने भने परमात्मा उनको घर अवतार लिनुहुन्छ। प्रकट हुनुहुन्छ।

योगी ब्रह्मचिन्तनद्वारा प्रभुमय हुन सक्छ। अनि पवित्र गृहस्थ प्रभुलाई पुत्ररूपमा प्राप्त गर्न सक्छ।

पवित्र गृहस्थाश्रमी युगल, भगवान्‌लाई पुत्रको रूपमा पाउन सक्छन् तर पहिले उनले कश्यप र अदितिसमान बन्नुपर्छ।

जबसम्म देहदृष्टि हुनेछ, तबसम्म काम पछि-पछि आउनेछ। कामको नाश गर्नु छ भने देहदृष्टिको अपेक्षा देवदृष्टि राख।

शङ्कराचार्यले शतश्लोकीमा भन्नुभएको छ मानिस त्वचाको मीमांसा गर्छ, तर यस देहको सौन्दर्यको कारणभूत जो छ त्यस आत्माको मीमांसा कसैले पनि गर्दैन।

जगत् बिग्रिएको छैन, मनुष्यको दृष्टि-बुद्धि-मन बिग्रिएका छन्। तिमीले यसलाई सुधार्‍यौ भने जगत् पनि सुध्रिने छ। कसैलाई पनि भोग-दृष्टिले नहेर, भागवत्-दृष्टिद्वारा हेर। दृष्टि सुध्रिएका खण्डमा सृष्टि पनि सुध्रिएर जान्छ। भागवत्‌ले आँखा र दृष्टि दिन्छ। कसैको पनि बाह्याकार नहेर।

एकपटक राजा जनकको राजसभामा मुनि अष्टावक्र आए। उनको आठ-आठ अङ्ग टेढो-मेढो देखेर सभाका मानिस हाँस्न लागे। अष्टावक्र मानिसहरूले हाँसेको देखेर हाँस्न थाले।

जनक राजाले अष्टावक्रलाई सोधे—'महाराज! हामी तपाईंका विचित्र अङ्गहरूलाई देखेर हाँसिरहेका छौं, तपाईं के कुरामा हाँसिरहनुभएको छ?'

अष्टावक्रले उत्तर दिए—'मैले संझिएको थिएँ तपाईंको यस सभामा सबै ज्ञानी मात्र होलान् तर मैले आज देखें सबै मूर्ख सार्की रहेछन्। तपाईंहरू सबै मेरो देहलाई हेरिरहनुभएको छ। यो चाहिँ पार्थीव हो। मेरो आत्मालाई हेर्नोस्। म पवित्र ब्राह्मण हुँ। तपाईंहरू सबै मेरो आकृतिलाई हेरेर हाँसिरहनुभएको छ। तर मनुष्यको कृतिलाई हेर्नुपर्छ आकृतिलाई होइन। आकृति चाहिँ पूर्वजन्मको प्रारब्धले पाइन्छ। मेरो कृतिलाई मात्र हेर्नोस्।'

परमात्मा कृतिलाई हेर्नुहुन्छ र मनुष्य आकृतिलाई।

ज्ञानी पुरुष अनेकमा एकलाई देख्छन्।

दिति भेद-बुद्धि र अदिति अभेद बुद्धि, ब्रह्माकार वृत्ति हो। दिति भेदबुद्धि राक्षसहरूलाई जन्म दिन्छिन्, जस्तै हिरण्यकशिपु। अदिति-अभेद बुद्धि भगवान् वामनलाई जन्म दिन्छिन्।

जगत्‌लाई भेदभावबाट होइन अभेदभावबाट हेर। जसको बुद्धिमा भेद छ त्यसको मनमा पनि भेद छ। भेदले विकार-वासनालाई जन्म दिन्छ। ज्ञानी सबैलाई अभेदभावले हेर्छ। अनेकमा एकको अनुभव गर्नु ज्ञान हो।

मूल्य आकारको अपेक्षा मूलभूत वस्तुको ज्यादा छ। मूल्य सुवर्णको हो, आभूषण विशेषको आकार होइन।

एक महात्माका साथमा सुवर्णबाट बनेको एउटा गणेशको मूर्ति र सुनकै एउटा मूसा पनि थियो। महात्मा बूढ़ा भएपछि उनले विचार गरे मपछि शिष्य मूर्तिहरू निमित्त शायद झगड़ा गर्लान्। त्यसकारण यसलाई बेचेर भगवान्‌लाई भोग लगाइदिऊँ क्यार? उनले दुवै मूर्ति बेच्नथाले,

गणपतिको मूर्ति दुइ तोलाको थियो र मूसाको एघार तोलाको। सुनारले गणपतिको मूर्तिभन्दा मूसाको दाम ज्यादा दिन थाल्यो। महात्माले आश्चर्यले सोधे—'हे भाइ, गणपति देव हुनुहुन्छ र मूसा जन्तु, फेरि पनि तिमी गणपतिको मूर्तिको दाम कम किन दिइरहेछौ?' सुनारले भन्यो—'मोल म सुनको दिइरहेछु, देव या मूसाको होइन।'

ज्ञानी पुरुष आकारमा ध्यान दिँदैनन्। उनीहरू सृष्टिलाई निर्विकारभावले हेर्छन्। आकारबाट विकार उत्पन्न हुन्छ। गोरो-कालो जस्तो भेद उत्पन्न हुन्छ। जबसम्म यो भेदबुद्धि रहन्छ तबसम्म विकारवासनाहरू पनि रहने छन्। अदिति ब्रह्मवृत्ति हो। ब्रह्माकार दृष्टि र वृत्ति प्राप्त भएपछि परमात्मा भेटिनुहुनेछ।

सबैमा एकै वस्तु छ। एकबाटै अनेक बनेका छन्। स्वप्नावस्थाको जस्तै जागृत अवस्थामा पनि एकबाट अनेक हुन्छन्। सबैको मूलमा एक मात्र छ। त्यसकारण सबैमा एउटै देख्ने गर।

मनमा जुन वस्तुलाई बारम्बार चिन्तन हुन्छ, त्यसैको आकार मनमा स्थिर हुन्छ। व्यापारीको मन द्रव्याकारमा स्थिर भएको हुन्छ, त्यसकारण उसले स्वप्नमा पनि रुपियाँ-पैसा मात्रै देखिरहन्छ। यस्तै प्रकारले भक्तको चित्त-वृत्ति भगवदाकार बन्दछ। एकै स्वरूपलाई बारम्बार ध्यान गर, चिन्तन गर। पूजा सबै देवहरूको गर तर ध्यान एक प्रभुको मात्रै गर।

जसको आँखामा (अर्थात् ध्यानमा) पैसा मात्रै छ, त्यसले प्रत्येक स्थानमा पैसा मात्र देखिरहन्छ। एउटा सेठ काश्मीर गयो तब वहाँ उसले गुलाबको फूलको एउटा ठूलो थुप्रो जस्तो देख्यो। उसको मनमा यो भाव आएन यी फूलहरूमा श्रीकृष्ण राज हुनुभएको छ तर उसको मनमा द्रव्यभाव थियो। अतः उसले विचार गऱ्यो यहाँ गुलकन्दको उत्पादन शुरू गरिदिए धेरै लाभ हुन सक्छ।

प्रभु अव्यक्त रूपबाट फूलमा हुनुहुन्छ, त्यसकारण सबैमा भगवद्भाव राख।

दृष्टि भगवन्मय भयो भने जहाँ पनि भगवान् देखिनुहुन्छ। गोपिनीहरूको दृष्टि परमात्मामा थियो। उनीहरू जता जान्थे कृष्णको दर्शन पाउँथे। कृष्ण मथुरामा राज हुन्थ्यो तापनि गोपिनीहरूलाई श्रीकृष्ण गोकुलमै देखा पर्नुहुन्थ्यो।

गोपिनीहरूले उद्धवजीलाई भने—'तपाईंले कसको सन्देश लिएर आउनु भएको? कृष्ण हाम्रा साथमा यतैतिर हुनुहुन्छ। अरू सन्देश पनि केही ल्याउनुभएको होला र? गोपिनीहरूको वृत्ति कृष्णाकार कृष्णमय थियो—'

जित देखौं तित श्याममयी है।
श्याम कुंज बन जमुना श्यामा, श्याम गगन घन घटा छाई है।
सब रंगन में श्याम भऱ्यो है, लोग कहत यह बात नई है।
नीलकण्ठको कंठ श्याम है, मानो श्यामता फैल गई है॥

गोपिनीहरू जान्दैनथे कृष्णले उनलाई छोड़ेर जानुभएको छ, उनीहरू यही भन्छन् हामी जहाँ पनि जान्छौं कृष्ण हाम्रा साथै हुनुहुन्छ। यो हो गोपीप्रेम।

जीवलाई भय रहन्छ किनभने त्यो ईश्वरका सान्निध्यको अनुभव सधैं गर्न सक्दैन।

ब्रह्माकार वृत्ति—अदितिको कश्यपका साथ सम्बन्ध भयो।

'कश्यप' शब्दको अर्थ बुझ। यस शब्दलाई उल्टो पढ्यो भने 'पश्यक' हुन्छ। उपनिषद्का अनुसार 'क' को अर्थ हो ईश्वर र 'पश्य' को अर्थ हो हेर्नु अर्थात् सबैमा एक ईश्वरलाई देख्न सक्नेलाई कश्यप भन्छन्।

जब कश्यपको वृत्ति ब्रह्माकार, ब्रह्ममयी भयो तब परमात्मालाई प्रकट हुनुपर्‍यो।

गृहस्थाश्रममा भक्तिमा बाधक छैन, साधक छ। बाधक छ तर गृहस्थ आसक्ति। गृहस्थाश्रमभा कामासक्ति, द्रव्यासक्ति, विषयासक्ति मात्र बाधारूप छन्। संसारको कुनै वस्तुमा पनि साँच्चिनैको सुख छैन। साँच्चिनैको आनन्द एक ईश्वरमा मात्र छ।

संसारमा मात्र सुख छ, यस्तो जबसम्म मानिरहनेछौ, भक्तिमा मन लाग्ने छैन। यदि सांसारिक विषयमा साँच्चिनैको सुख छ भने निद्राको आवश्यकता चाहिँ कसरी हुन आयो? विषयहरूलाई त्यागेर बिर्सिएर निद्राको इच्छा हुन्छ। त्यसकारण विषयहरूमा सुख छैन।

जस्ता प्रकारले प्रतिदिन अन्न खान्छौ सोही किसिमबाट सत्सङ्गको पनि आवश्यकता छ।

ईश्वरको प्रकाशविना जड़ प्रकृतिले केही पनि गर्न सक्दैन।

भगवान् गीतामा भन्नुहुन्छ—म अविनाशी, अजन्मा र सबै भूतप्राणीहरूको ईश्वर हुँ तापनि आफ्नो प्रकृतिको अधीन रहेर म योगमायाबाट प्रकट हुन्छु।

स्वरूप चैतन्य प्रकाश दिन्छ तर दुःख भगाउन सक्तैन—

सर्वस्व चाहम् हृदि सन्निविष्टो।

अन्तर्यामीको रूपबाट ईश्वर सबैमा बस्नुभएको छ र पनि जीव दुःखी छ, केवल स्वरूप चैतन्य अज्ञान र दुःखको निवारण गर्न सक्दैन। भित्रको निराकार र बाहिरको साकार स्वरूप एकत्र भएर प्रकट भएमा भगवान् वामन अवतरित हुनुहुन्छ।

अदितिले पयोव्रत गरिन्। उनलाई रात्रिमा स्वप्नमा चतुर्भुज नारायणको दर्शन भयो। अदितिले स्वप्नावस्थामै वन्दना गरिन् र स्तुति पनि—'जगत्पति, लक्ष्मीपति, तात्त्विक दृष्टिबाट तर मेरो पनि तपाईं पति हुनुहुन्छ।'

भगवान्‌ले उनलाई भन्नुभयो—'मेरो चतुर्भुज स्वरूपलाई हेर। मेरो यस स्वरूपको आफ्ना पतिमा ध्यान गर्‍यौ भने म तिमीकहाँ पुत्ररूपमा आउनेछु।'

वेदमा अदिति शब्द बारम्बार आएको छ। अदिति अर्थात् अभेदबुद्धि, ब्रह्माकारवृत्ति। एकै स्वरूपलाई बार-बार चिन्तन गरेमा त्यो मनमा जम्न जान्छ।

अदिति र कश्यप नारायणको ध्यान गर्न थाले। उनको वृत्ति नारायणाकार भयो, अनि उनको घरमा नारायण पाल्नुभयो। अदिति गर्भवती भइन्। नौ महिना पुग्यो। अदिति तन्मयताका साथ प्रार्थना गर्न थालिन् भगवान् कहिले प्रकट हुनुहोला। आतुरताविना भगवान्को अवतार हुँदैन। यस जीवको मनमा जबसम्म कुनै अन्य इच्छाको अस्तित्व होला तबसम्म भगवान् आउनुहुन्न।

परम पवित्र समय आयो। भाद्र महिनाको शुक्ल पक्षको द्वादशीका दिन मध्याह्नकालमा माता अदितिका सम्मुख वामन भगवान् प्रकट हुनुभयो। चारैतर्फ उज्यालो फिँजियो। हृदय आनन्दले भरियो। कश्यप पनि वामनको दर्शन गर्नका निमित्त दगुर्दै आए।

माता-पितालाई विश्वास दिलाउनका निमित्त वामनले चतुर्भुज स्वरूपको दर्शन गराए। आमाबाबुको हृदय आनन्दले उम्लिन थालेको थियो। उनको मूकहृदयले भगवान्को जय-जयकार गरिरहेको थियो।

नारायण चतुर्भुज स्वरूप अदृश्य भयो र उहाँ सात वर्षको बटुक हुनुभयो। सुन्दर लँगौटी थियो। मुखबाट दिव्य तेज झल्किरहेको थियो, ब्रह्मादि देव पनि त्यहाँ आए। उनीहरूले कश्यप अदितिलाई बधाई दिँदै भने—'तपाईंको गृहस्थाश्रम सफल भयो, सार्थक भयो आज तपाईं जगत्पिताका पनि मातापिता हुनुभयो।'

कश्यप-अदितिको गृहस्थाश्रम अत्यन्त पवित्र थियो। त्यसकारण भगवान् उहाँकै घरमा प्रकट हुनुभयो।

जब वामनजी प्रकट हुनुभएको थियो त्यसवेला उहाँ सात वर्षको हुनुहुन्थ्यो। त्यसकारण उहाँको बालजीवनको वर्णन कतै छैन उहाँलाई यज्ञोपवीत लाइदिने निश्चय भयो।

यज्ञोपवीतको क्रियाबाट ब्रह्मसम्बन्ध हुन्छ। मंत्रदान गर्दै पिता पुत्रलाई भन्छन् आजदेखि ऊ आफ्नो नभएर ईश्वरको हुन गयो। त्यस दिन आमाका साथ उसको अन्तिम भोजन गराइन्छ। यस पवित्र विधिपछि पुत्रका निमित्त मातापिता सूर्यनारायण र गायत्रीदेवी बन्दछन्। जनै वेदविहित सेवा हो। म नारायणको सेवक हुँ। जनैमा हरेक देवको स्थापना गरिएको छ।

आजकलका मानिस यज्ञोपवीत संस्कार आदिलाई मान्दैनन्। संस्कार नगरिकन जीव शुद्ध हुन पाउँदैन। मानिसहरूले सबै संस्कार बिर्सिदिए। केवल विवाह-संस्कार मात्र बाँकी रहेको छ, किनभने यसको विना कोही पनि रहन सक्तैन। संस्कारको लोप हुनाले अधार्मिक र पापी प्रजा उत्पन्न भइरहेछन्।

तैत्तरीय अरण्यकमा जनै बनाउने विधि छ। त्यसलाई हातैले बनाउनुपर्छ। सूत्रलाई छयान्नबे पटक दोब्र्याइन्छ। वेदमा कर्म र उपासनासम्बन्धी ९६,००० मंत्र छ, तिनलाई पढ्ने अधिकार यज्ञोपवीत संस्कारमा पाइन्छ। त्यसो तर वेदका मन्त्र एक लाख छन्, तर बाँकी ४००० मन्त्र संन्यासीहरूलाई हो। जनैका निर्माता ब्रह्मा, त्यसलाई त्रिगुणातीत गर्नेवाला विष्णु र यसको गठबन्धन शिवजी गर्नुहुन्छ र अभिमन्त्रित हुन्छ गायत्री देवीबाट। यो दिव्यतेजले पूर्ण छ। त्यसो तर यो संस्कार सातौं वर्षमा दिनुपर्ने हो, तर एघार वर्षसम्म दिने अनुमति छ।

जनैका एक-एक धागामा एक-एक देवीको प्रतिष्ठा गरिन्छ। त्यसकारण फलाम्को स्पर्श यसलाई हुनुहुँदैन। यसमा साँचो बाँध्नु हुँदैन। आजका ब्राह्मण जनैमा साँचो झुण्ड्याएर घुम्छन्, त्यो ठीक भएन। यसो गर्नाले सबै देव-देवीहरू छोड़ेर हिँड़िदिन्छन्।

संस्कारको परम्परा नष्ट भइरहेछ। त्यसकारण प्रजामा संयम र सदाचारको अभाव हुन गएको छ। हाम्रो कल्याणका निमित्त प्राचीन ऋषिमुनिहरूले संस्कारको रचना गरेका थिए।

वामनजीको पनि यज्ञोपवीत गरियो। उनलाई अदितिले लँगौटी, पृथ्वीले आसन, ब्रह्माले कमण्डलु, सरस्वतीले जयमाला तथा कुबेरले भिक्षापात्र दिए। ब्राह्मणलाई तीनपटक सन्ध्या गर्ने आदेश छ। महाप्रभुजीले पनि तीन पटक सन्ध्या गर्दै जगत्का सामुन्ने यो आदर्श स्थापित गरिदिए जो आफू भएर पनि तीन पटक सन्ध्या गर्ने गर्छन्।

प्रातःसन्ध्याले रात्रिको पाप नष्ट हुन्छ। मध्याह्नको सन्ध्याले अन्नजलको दोष नष्ट हुन्छ। त्रिकाल सन्ध्याको बड़ो महिमा छ। सन्ध्या समय सूर्यको जप गर्दै जगदम्बा गायत्रीमाताको ध्यान गर्नुपर्छ। सन्ध्यामा गायत्री माताको आह्वान गर्नुपर्छ—'हे माता ! मेरो हृदयमा आइदिनुहोस्, मेरो रक्षा गरिदिनुहोस्।'

सन्ध्यामा अघमर्षण गर्नुपर्छ, ध्यान गर्नुपर्छ, सन्ध्या नियमित र समयमा हुनुपर्छ। प्रातःसन्ध्या आकाशमा जब तारा रहन्छन्, त्यस समयमा गरिने सन्ध्या उत्तम हो। नक्षत्र नदेखिने र सूर्यनारायणको उदय नभएको होस् यस्तो समयमा गरेको सन्ध्या मध्यम सन्ध्या हो र सूर्योदयपछिको सन्ध्या अधम सन्ध्या कहिन्छ।

बृहस्पतिले वामनजीलाई उपदेश दिए। अब आजदेखि मधुकरी ( भिक्षा ) माग्न जानुछ। यस अन्नमा मधुरता हुन्छ। मन्त्रोपदेशका साथ-साथ ब्रह्मचारीको धर्म पनि संझाए।

जबदेखि ब्रह्मचर्याश्रमको परम्परा हाम्रो देशबाट नष्ट भयो तबदेखि यस देशको दुर्दशा भयो।

ब्रह्मचर्यको पालनविना न कोही महान् भएको छ न कोही हुनेछ। जसले ब्रह्मचर्यको पालन गर्ने इच्छा गर्छ त्यसले सजीव नारीको के कुरा नारीको काष्ठ मूर्ति पनि तनले या मनले स्पर्श गर्नु हुन्न।

**न स्पृशेत् द्दारवीमपि।**

यदि ब्रह्मचर्यको पालन गर्नुछ भने नारीको मुख या केशका तर्फ पनि दृष्टि नगर। यिनमा कामको वास हुन्छ। यो नारीको निन्दा होइन कामको निन्दा हो। परस्त्रीलाई आमासमान मान। जगत्मा जति पनि महापुरुष भएका छन् ती सबैले परस्त्रीलाई माता मानेका थिए। तिनीहरू ब्रह्मचर्यको पालनबाट महापुरुष बनेका थिए।

लक्ष्मणले चौधवर्षसम्म आफ्नी भाउज्यूका साथ जङ्गलमा बसे तापनि उनले सीताका चरणमा मात्र दृष्टि राखेका थिए। एक पटक श्रीरामचन्द्रले एउटा चन्द्रहार देखाउँदै उनलाई सोध्नुभयो— 'के यो माला तिम्री भाउज्यूको हो ?'

तब लक्ष्मणले जवाफ दिए— 'मैले भाउजूको मुख कहिल्यै हेरेको छैन।'

रामचन्द्रले अन्य आभूषणका विषयमा पनि त्यस्तै प्रश्न गर्नुभो तब लक्ष्मणले भने—

नाहं जानामि केयूरे नाहं जानामि कुण्डले।
नूपुरेत्वऽभिजानामि नित्यं पादाभिवन्दनात्॥

म न माला चिन्दछु, न कुण्डल नै, म केवल उहाँको पाउजेबमात्र चिन्दछु, जसलाई म नित्य प्रणाम गर्दा देख्थें।

कस्तो आदर्श ब्रह्मचर्य पालन !

कामलाई पराजित गर्न बड़ो कठिन छ, त्यसकारण ब्रह्मचर्यको बड़ो प्रशंसा गरिएको छ।

जब व्यासजी भगवान् भागवत्को रचना गरिरहनु भएको थियो र श्लोकको रचना गर्दा-गर्दै ती श्लोक आफ्ना शिष्य ऋषि जैमिनीलाई जाँच्न भनी दिइरहनुहुन्थ्यो। जैमिनीजीले नवम स्कन्धको यो श्लोक देखे—

बलवानिन्द्रियग्रामो विद्वांसमपि कर्षति।
(भा० ९-१०-१७)

इन्द्रियहरू यति बलवान् हुन्छन् जो बड़े-बड़े विद्वान्हरूलाई पनि विचलित गरिदिन्छन्।

यस श्लोकलाई पढ़ेर जैमिनीले सोचे व्यासजीद्वारा यसमा केही भूल हुनगएको छ। के इन्द्रियहरूले विद्वान्हरूलाई कहिले विचलित पार्छन् ? उनले व्यासजीलाई भने— 'यस श्लोकमा' 'विद्वांसमपिकर्षति' का ठाउँमा 'विद्वांसं नाप कर्षति' लेखिनुपर्ने हो।

व्यासजीले भन्नुभयो मैले जो लेखेको छु त्यो ठीक छ। यसमा केही भूल छैन। एक दिन जैमिनी सन्ध्या समाप्त गरेर निर्मल बाहिर विसर्जन गर्न गइरहेको अवस्थामा त्यहाँ उनले एउटी सुन्दरी युवतीलाई रूखमुनि वर्षाले भिजिरहेकी देखे। भिजेको वस्त्रले गर्दा देखिएको सौन्दर्यमा जैमिनी विचलित भए।

जैमिनीले ती सुन्दरीलाई भने— 'यो कुटी तिम्रै हो। हिँड़ भित्र आऊ। आश्रममा विश्राम गर।'

सुन्दरी— 'पुरुष कप्टी हुन्छन्। म तपाईंको विश्वास कसरी गरूँ ?'

जैमिनी— 'म त पूर्वमीमांसाको आचार्य जैमिनी ऋषि हुँ ? के मरो पनि विश्वास गर्दिनौ ? म जस्तो तपस्वीको विश्वास छैन भने फेरि तिमीले कसको भर पर्ने ? यो तिम्रै कुटी हो। आश्रममा विश्राम गर।'

ती सुन्दरी आश्रममा आइन्। फेर्नलाई लुगा दिइयो। जैमिनीले जब रूप देखे तब मन अरू लोभियो। उनले ती स्त्रीसँग सोधे—'तिम्रो विवाह त भएको छैन होला?' स्त्री अविवाहित थिइन्। त्यसकारण जैमिनीले विवाहको प्रस्ताव राखे।

ती युवतीले भनिन्—मेरा पिताले प्रतिज्ञा गर्नुभएको छ जो पुरुष घोड़ा बनेर मेरी छोरीलाई अम्बाजी माताको मन्दिरमा दर्शन गराउन लैजान्छ त्यसका साथ उसको विवाह गरिदिउँला र मैले पनि भनें तपाईंका ज्वाइँको मुख कालो गरेर उनलाई लैजानेछु।

जैमिनीले सोचे 'घोड़ा बन्नुपरे पनि, कालो मुख गर्नुपरे पनि यो सुन्दरी आखिर मेरी हुन्छे।' उनी सबै कुरा गर्न तयार भए।

पुरुषले परस्त्रीलाई कामवासनाले हेर्छ भने त्यसको मुख कालै हुन्छ। जैमिनीले घोड़ा बनेर त्यस युवतीलाई आफूमाथि सवार गराए। यो अनौठो सवारी अम्बाजीको मन्दिरमा आइपुग्यो। त्यस मन्दिरको बार्दलीमा व्यासजी बसिरहनुभएको थियो। उहाँले सबै कुरा बुझेर जैमिनीलाई सोध्नु भयो—त्यो श्लोकमा कुन चाहिँ शब्द हुनुपर्‍यो—'नापकर्षति?'

अब जैमिनीको मनमा बिजुली खसेजस्तो भयो। उनले व्यासजीलाई भने—'तपाईंले भनेको साँचो हो।'

क्षणमात्र पनि असावधान नहुनु। असावधान भयो भने कामले टाउकोमाथि टेकिहाल्नेछ।

ज्ञानी भएर पनि जैमिनी असावधान भए। त्यस सुन्दरीका साथ विवाहिता-अविवाहिताको चर्चा किन गरे उनले? ऋषिको अवतार परोपकारका निमित्त हुन्छ, अनावश्यक कुराहरूको सोधपूछ गर्नका निमित्त होइन।

कामकै कारणले बड़े-बड़े ज्ञानी पनि अल्मलिएका छन् भने साधारण मनुष्यको झन के कुरा?

भर्तृहरिले पनि भनेका छन्—

> विश्वामित्रपराशरप्रभृतयो बाताम्बुपर्णाशना—
> स्तेऽपि स्त्रीमुखपङ्कजंसुललितं दृष्टैव मोहं गताः।
> शाल्यन्नं सघृतं पयोदधियुतं भुञ्जन्ति ये मानवाः
> तेषामिन्द्रियनिग्रहो यदि भवेत् विन्ध्यस्तरेत् सागरम्॥

रूखको पात र जल मात्र पिएर निर्वाह गर्ने ऋषिहरूलाई पनि कामले विचलित गरिदिएको छ। जिब्रोलाई छाड़ा छोड्ने र सिनेमाका अभिनेत्रीहरूलाई रात-दिन पूजा गर्नेवाला आजका मनुष्यले काम जित्ने कुरा गर्‍यो भने त्यो निरर्थक मात्र हो।

जसले ब्रह्मचर्यको पालन गर्न चाहन्छ, त्यसले पेटमा कहिले पनि अजीर्ण हुन दिनुहुन्न। हलुवा, पूरी र तारेको तरकारी खानेले ब्रह्मचर्यको पालन कसरी गर्न सक्ला ?

श्रीकृष्णलाई दुर्बलता मन पर्दैन। नरसिंह मेहताले भन्नुभएको छ—

हरिनो मारग छे शुरानो, नहीं कायरनुँ काम जाने।

हरिको मार्ग शूरवीरहरूको हो, कायरहरूको होइन।

श्रुति पनि भन्दछ—

नायमात्मा बलहीनेन लभ्यः।

त्यसकारण ब्रह्मचर्यको पालन गर र बलवान् बन।

स्त्रीको मुख या कपाल कहिले पनि फर्की-फर्की नहेर। आँखा या मनमा विकार आउनेसाथ गायत्री मन्त्रको जप गर। मनरूपी हात्तीलाई सत्कर्मरूपी अंकुशले वशमा राख्न सक्छ।

वामनजीले जगदम्बा पार्वतीका समीपमा गएर भने—'ॐ भगवति, भिक्षां देहि मे।' पार्वतीले दिएको भिक्षा उनले गुरुजीका सामुन्ने राखिदिए। गुरुजीले भन्नुभयो—भिक्षा बहुतै कम छ। वामनजीले कुनै ठूलो यजमानको नाउँ र ठेगाना सोधे। वृहस्पतिले आज्ञा दिनुभयो 'नर्मदा नदीको किनारमा बलि राजा अश्वमेध यज्ञ गरिरहेछन्। उनीबाट तिमीले अवश्य राम्रो भिक्षा पाउने छौ। त्यहीं जाऊ।'

वामनजी त्यही दिशातर्फ लाग्नुभयो। वामन लँगौटी लाएका छन्। पाउमा खराउ, हातमा कमण्डलनु, छाता र दण्ड छ। कम्मरमा मुञ्जको मेखला, काखीमा मृगचर्म, शिरमा जटा, काँधमा यज्ञोपवीत र मुखमा ब्रह्मतेज छ।

कुनै अपरिचित व्यक्तिका सम्मुख अनायासै शिर निहुरिन्छ भने संझ त्यो व्यक्तिमा ईश्वरको अंश छ।

अपरिचित भएतापनि वामनजीलाई बाटामा सबै नमस्कार गरिरहेछन्। उनी नर्मदा तटको यज्ञमण्डपमा पुगे। ब्रह्मतेज लुकाएर लुकाइने होइन। यज्ञमण्डपमा उपस्थित ऋषि समूह विचार गर्न थाले आजसम्ममा यस्ता ब्रह्मतेजस्वी कहिले देखिएको थिएन। के साक्षात् सूर्यनारायण यस रूपमा आउनुभएको होइन ? यी कुनचाहिँ ब्राह्मणकुमार होलान्।

शङ्करस्वामीलाई कसैले सोधेको थियो 'जगत्मा भाग्यशाली को छ ?'

शङ्करस्वामीले उत्तर दिएका थिए।

कोपीनवंतः खलु भाग्यवन्तः।

जो लगौंटी लाउँछ। जितेन्द्रिय छ। सदासर्वदा भगवान्सँग मात्र कुरा गर्छ। भगवान्का साथमै खेलिरहन्छ, त्यही सर्वाधिक भाग्यशाली हो। जो धन-सम्पत्ति र देहका साथ खेलिरहन्छ, त्यो भाग्यहीन हो।

यस अपरिचित बालकका विषयमा ब्राह्मण विचार गरिरहेका थिए यज्ञका प्रधानाचार्य शुक्राचार्यले वामनजीको स्वागत गरे। यी महातेजस्वी बटुकको शुक्राचार्यसहित सबै ऋषिहरूले सत्कार गरे।

ब्राह्मण, ब्रह्मतेज र ज्ञानका कारणले मात्र सम्मान पाउँछन्। क्षत्रिय बलले, वैश्य धन-सम्पत्तिले सम्मान पाउँछ। शूद्रमा वृद्धले मान पाउँछ। सेठ-साहूकारले जतिसुकै कालोबजार गरे पनि उसलाई कथामा पनि अगाड़ि आसन दिइन्छ। अबेर आए पनि अगाड़ि स्थान पाउँछ। यो मान सेठको होइन, लक्ष्मीको हो।

चारै वर्णको तिहार पनि शायद भिन्न-भिन्न हुनगएको छ। ब्राह्मणहरूको दिवाली रक्षाबन्धनको दिन, क्षत्रियहरूको दिवाली विजयादशमीको दिन, वैश्यहरूको दिवाली लक्ष्मीपूजाको दिन र शूद्रहरूको दिवाली फागुको दिन हो।

ब्राह्मणहरूले त्यही ब्रह्मचारी बटुकको स्वागत गरेको बलिराजाले पनि हेर्न थाले। उनी सोच्तछन् 'मैले आजसम्म कति ब्राह्मणहरूको सेवा गरेको छु तर यस्तो कोही देखिन पनि आएको छैन।' उहाँले वामनजी महाराजलाई महलभित्र ल्याए, सिंहासनमा बसाए र रानीलाई पूजासामान तयार गर्न भनेर आज्ञा दिए।

बलिराजाकी पत्नीको नाउँ थियो विन्ध्यावली र छोरीको रत्नमाला। रत्नमाला बटुकको सौन्दर्यलाई देखेर प्रभावित भई सोच्न थालिन्, 'जुन आमाले यसलाई आफ्नो दूध ख्वाएकी थिइन् उनी कति भाग्यशालिनी र सुखी होलिन्।' बटुकजीको स्वरूपलाई देखेर उनका मनमा वात्सल्यभाव जागेर आयो र दूध चुसाउने इच्छा पनि भयो। फेरि अगाड़ि जब वामनजीको पराक्रम देखिन् तब उनलाई वामनजीको हत्या गर्ने मन भयो। रत्नमाला आफ्ना यिनै दुइ मनोभावहरूलाई लिएर आगामी जन्ममा पूतना भएर आई जसले आफ्नो दूध चुसाएर मार्ने प्रयत्न गरी तर उसको आफ्नै उद्धार भयो।

वामनजी महाराजको चरणमा विन्ध्यावली जलधार हाल्न थालिन्, बलिराजा चरण धुन थाले र सबै ब्राह्मण 'पुरुषसूक्त' को पाठ गर्न थाले। 'तपाईं जस्तो पवित्र ब्राह्मणको चरणोदक पाउनाले म पवित्र भएँ र मेरा पितृहरूले पनि सद्गति पाए। मेरो यज्ञ सफल भयो। आज मेरो कल्याण भयो। म तपाईंको चरणमा बारंबार प्रणाम गर्छु। ठूला पुण्यशाली माता-पितालाई मात्र तपाईं जस्ता पुत्ररत्न प्राप्त हुन्छन्। म सोच्दछु आफ्ना सबै कुरा तपाईंलाई अर्पण गरेर वनवासी भएर ईश्वरभजनमा लीन भैजाऊँ।'

वामनजीले मनमनै भन्नुभयो, 'म सबै कुरा लिनै भनेर आएको छु।' राजाले उनलाई भने— 'महाराज ! मलाई लाग्छ तपाईं केही माग्न खोजिरहनु भएको छ। जे चाहिन्छ निःसङ्कोच माग्नुहोस्। राज्य, गाई, धन-सम्पत्ति आदि जे माग्नुहुन्छ म दिनेछु।' बलिराजाले बारम्बार यही कुरा दोहोऱ्याए।

शुकदेवजी वर्णन गर्नुहुन्छ, राजन् अतिशय आनन्द भएको छ।

जोसँग केही माग्न चाहन्छौ उसका पितृहरूको प्रशंसा गर। आजकल तर उसकी पत्नीको पनि प्रशंसा गर्नाले धैरै कुरा पाइन्छ।

वामनजीले पनि बलिराजाका सामुन्ने प्रशंसाको पुष्प छर्न थाल्नुभयो, 'तपाईंका पितामह प्रह्लादजस्तो महान् भक्त न कोही भएको छ न कोही होला। उनको प्रभुप्रेम यति प्रबल थियो जो भगवान्लाई स्तम्भ चिरेर प्रकट हुनुपरेको थियो। मैले सुनेको छु तपाईंका पिता विरोचन पनि बहुतै उदार व्यक्ति थिए। उनका नजिक इन्द्र ब्राह्मण रूप लिएर आए र भन्न थाले—राजन्, मेरो आयु अब समाप्त हुन आइरहेछ। मेरो मृत्युबाट मेरी स्त्री विधवा हुनेछिन्। आफ्नो आयुष्यको दान मलाई दिनुहोस्। दान माग्न आएका ब्राह्मणलाई कसरी निराश गर्न सकिन्थ्यो? त्यसकारण तपाईंका पिताले आफ्नै आयुष्यको दान दिए। तपाईंका प्रपितामह पनि महान् वीर थिए।'

बलिराजाले सोचे यो बटुक देख्नमा सात-आठ वर्षको भए पनि कुरा गरिरहेछ मेरा पिताको, पितामहको, प्रपितामहको। उनले वामनजीलाई सोधे—'महाराज! के तपाईंले मेरा ती पितृहरूलाई देख्नुभएको छ?'

वामनजी—अहँ, म मात्र आठ वर्षको छु। मैले उनलाई कसरी देख्न सक्थें? मैले आफ्ना वड़ा मानिसहरूको मुखबाट कथा सुनेको हुँ।

अनि हे राजन्! तपाईं पनि केही कम हुनुहुन्न। तपाईंमा आफ्नो प्रपितामह हिरण्यकशिपुको बल, वीरता र शक्ति छ। तपाईंमा आफ्ना पितामह प्रह्लादको जस्तो भक्ति छ र पिता विरोचनजस्तो उदारता छ। तिनै पितृहरूको गुण तपाईंले एकसाथ पाउनुभएको छ। तपाईं बड़ो भाग्यवान् हुनुहुन्छ।

आफ्नो र पितृहरूको प्रशंसा सुनेर बलिराजाले फेरि वामनजीलाई भने—'महाराज, जे चाहनुहुन्छ माग्नुहोस्। म आफ्नो जे पनि दिन तयार छु।'

बलिराजालाई वामनजीले वचनबद्ध गरिलिए र भन्न थाले—'राजन्, म लोभी होइन, सन्तोषी ब्राह्मण हुँ। म आफ्नो गोड़ाले नापेर मात्र तीन पाइला भूमि चाहन्छु।'

बलिराजाले सोचे यी बालक माग्न पनि जान्दैनन्। ज्ञानी र पढ़ेलेखेका हुन् तर बुद्धू रहेछन्। उनी भन्नथाले—'महाराज, तपाईंले यति मात्र किन माग्नुभएको। म तीन पाइला भूमि मात्रै के तीन गाउँ तपाईंलाई दिन सक्छु। यो जगत्प्रसिद्ध कुरा छ पूजाआजा गरेर जुन ब्राह्मणलाई म दान दिन्छु त्यसले अरू कसैबाट केही पनि माग्ने आवश्यकता रहँदैन। मेरो दान स्वीकार गरेर कोही अरूकहाँ तपाईंले माग्न जानुपर्‍यो भने तब मेरो अपमान हुनेछ। मैले यो तपाईंलाई देख्नासाथ थाहा पाइसकेको थिएँ तपाईं सन्तोषी ब्राह्मण हुनुहुन्छ किनभने तीन पाइला भूमि दिनमा मलाई बड़ो सङ्कोच भइरहेछ। म जान्दछु तपाईं लोभी हुनुहुन्न, सन्तोषी हुनुहुन्छ, तैपनि केही माग्नुहोस्। तीन पाइला भूमि दिंदा तर मलाई बड़ो सङ्कोच र लाज लागिरहेछ।'

वामनजीले भने—'राजन्, धन्य हुनुहुन्छ तपाईं ! तपाईं यस्तै केही भन्नुहुने हो ! यसमा केही आश्चर्य छैन। राजन् ! तपाईं उदार हुनुहुन्छ, तर मलाई पनि माग्दाखेरि केही सोच्नुपर्छ नि ! लोभले लोभ बढ्छ र सन्तोषले संतोष ! संसारको सबै भोगपदार्थ प्राप्त गरेर पनि सन्तोष र वैराग्यको अभावमा शान्ति पाइने छैन। लोभ पापको मूल हो। संग्रह वृत्तिको ध्येयले ब्राह्मणले दान नलेओस्। ब्राह्मणले यदि संग्रहवृत्तिको इच्छाले दान लियो भने यजमान पनि पापको भागी हुनेछ। अतिसंग्रहले विग्रहलाई जन्म दिन्छ। मलाई धेरैको आवश्यकता छैन।'

भागवतअनुसार आफ्नो आयको पाँचौं हिस्सा दान दिनुपर्छ। मनु महाराजले दशमांशलाई दान गर्नु भनेको छ। घरमा आएको सारा धन शुद्ध हुँदैन। दानले त्यसको शुद्धि हुन्छ।

माग्ने भिख माग्न मात्र आएको होइन उपदेश दिनलाई पनि आएको छ। 'भिक्षुकाः नैव भिक्षन्ति बोधयन्ति गृहे गृहे।' त्यो उपदेश कुनचाहिँ हो ? मैले गत जन्ममा कसैलाई केही पनि दिएको थिइनँ। त्यसकारण मेरो यस्तो दशा भयो। तिमीले दिएनौ भने तिम्रो पनि मेरो जस्तै दशा हुनेछ।

राजन् ! म अरू कसैकहाँ दान लिन भनी गइनँ। म सन्तोषी ब्राह्मण हुँ। तिमी भाग्यशाली रहेछौ। म तिम्रो द्वारमा आएको छु।

मैले आज कुनै सेठको बार्दलीमा पूजा गरिरहेको थिएँ। उसले मलाई त्यहाँबाट धपाइदियो। मेरो सन्ध्यापूजा अपूर्ण नै रह्यो। केही मानिसले बरण्डामा बसेका मानिसलाई धपाइदिन्थे। यहाँबाट उठ। मेरो हो यो बरण्डा। त्यो मूर्ख हो। के बरण्डालाई आफ्नासाथ लैजाला ?

यस संसारमा आफ्नो के छ र के छैन ? यो कुरा मनुष्यले थाहा पायो भने त्यो सुखी हुने छ।

आँगनमा आएका कोही पनि मानिसलाई 'के पानी पिउनुहुन्छ ?' भनेर सोध्नुपर्छ। हो ! ठग र धूर्तबाट सचेत हुनुपर्छ। यस्ता मानिसहरू दिउँसो घर हेरेर रात्रिमा चोरी गर्नका निमित्त पस्दछन्।

वामन भन्नुहुन्छ—'जब मेरी सन्ध्या अपूर्ण रह्यो तब मैले सोचें मेरो पनि आफ्नो अलिकता भूमि भइदिए म सन्ध्या-पूजा निर्विघ्नपूर्वक गर्न सक्दो हुँ। तिमीलाई यसको पुण्य मिलिहाल्ला। म ब्रह्मचारी हुँ। तीन पाइला भूमिमात्र मलाई दान देऊ।'

बलिराजालाई आनन्द भयो। लौ मेरो भूमि पनि यी पवित्र ब्राह्मणको सन्ध्यापूजाद्वारा पवित्र हुने भयो। कस्ता विरागी छन् यी ब्राह्मण। म आफ्नो सर्वस्व दिन तयार छु र पनि लिँदैनन्। वामनजीलाई उनी भन्छन्—'महाराज तपाईंको जस्तो इच्छा। तपाईंको इच्छानुसार तीन पाइला भूमि म आज तपाईंलाई दिन्छु। तर भविष्यमा पनि तपाईंलाई केही वस्तुको आवश्यकता पऱ्यो भने तपाईंले मसँगै माग्नुहोला। आफ्नो सेवागर्ने अवसर मलाई दिँदै गर्नु होला।'

वामनजीले भन्नुभयो—भविष्यको कुरा भविष्यमा। आज तर मलाई तीन पाइला भूमिमात्र देऊ।

बलिराजा तीन पाइलाभर भूमिदान दिने संकल्प गर्न तयार भए। तर यज्ञ मण्डपका आचार्य शुक्राचार्यले थाहा पाए यो कोही सामान्य ब्राह्मण होइन। उनले बलिराजालाई भने—'हतार

नगर। देवहरूको कार्यको सिद्धिका निमित्त साक्षात् नारायण वामन बनेर आउनुभएको छ। राजन् तिम्रो सारा साम्राज्य यिनका दुइ पाइलाको नापभित्र पर्छ। तेस्रो पाइलो राख्नलाई भूमि रहने छैन अनि तिमीलाई पातालमा डुबाइदिनेछन्। अलि विचार गरेर सङ्कल्प गर्नू। यी वामनले तिम्रो सर्वस्व खोसिदिनेछन्।'

राजन्, दान देऊ तर विवेकपूर्वक। यी बालकका पाइला कस्ता होलान् त्यो तिमी जान्दैनौ ? दान यस्तो नगर जो तिमी स्वयं दरिद्र बनिहाल र घरवाला दुःखी भइहालून्।

साधु-सन्तहरूलाई सद्भावहरूबाट ईश्वरभावबाट दान गर। अनि मात्र तिम्रो कल्याण हुनेछ। पवित्र सदाचारी ब्राह्मण र सती नारी मात्र यस पृथ्वीका आधार हुन्।

बलिराजाले सोधे—दान दिऊँ त ?

शुक्राचार्य—दान अवश्य देऊ तर आफ्ना पाइलाले नापेर भूमि देऊ। यी वामनले विराट रूप धारण गर्नेछन्। देवहरूको भलोका निम्ति स्वयं विष्णु वामनको रूप लिएर आउनु भएको छ।

संकल्प अनुसार दान नदिनेवाला मानिस नरकमा जान्छ। भविष्यको विचार गरेर सोची-संझीकन दान गर। सर्वस्वको होइन, पंचमांशको दान गर।

कलियुगका सन्तानले धन-सम्पत्तिको सेवा गर्छ, आमा बाबुको होइन। धन भयोभने तिम्रा नाता-कुटुम्बले तिम्रो सेवा गर्नेछन्।

वृद्धावस्थाका निमित्त केही न केही संग्रह अवश्य गर जसले गर्दा पछि सन्तानसँग माग्ने प्रसङ्ग नआवोस्।

एउटा बूढ़ो बिरामी पऱ्यो उसले थाहा पायो उसको मृत्यु नजिकै छ। उसले आफ्नो सारा सम्पत्ति आफ्ना तीन छोरालाई बाँड़िदियो। बूढ़ाको दुर्भाग्य हेर। मर्नुको साटो ऊ राम्रै निको भयो, तर अब ऊसँग केही पनि रहेन। तीनै छोराहरूले उसलाई घृणा गर्न थाले। बूढ़ो दुःखी भयो। कुनै छोरासँग केही मागौं भने पनि आना, दुइआना दिने कुरा गर्छन्। बूढ़ाको सबै कुरा थियो तापनि आज उसका परिवारले उसको उपेक्षा गर्न थाले।

एक पटक बूढ़ाले आफ्नो कुनै मित्रको अगाड़ि दुःख गाथा भन्यो। तब त्यस मित्रले उसलाई भन्यो—'मसँग एउटा सन्दूक छ। त्यसमा केही ढुङ्गा हालेर ताल्चा मारेर तिमीकहाँ पठाइदिनेछु। तिमीले त्यस बाकसलाई छोराहरूलाई देखाएर, उनलाई भन्नु म अब यो अलिकति भएको पूँजी लिएर हरिद्वारको यात्रा गर्न हिँड़िरहेछु अनि हेर मजा !'

सन्दूक पाउने बित्तिकै ती बूढ़ाले छोराहरूसँग यात्रा गर्न जाने कुरा गरे—'अब म बूढो भइरहेछु। त्यसकारण म चाहन्छु यस पूँजीबाट यात्रा गरूँ, साधुसन्तहरूलाई भोजन गराऊँ र तीर्थस्थानमा केही दिन निवास गरूँ।'

एक छोराले सोधे—'तपाईं कहाँ जानुहुन्छ ?'

बूढ़ा—'हरिद्वार।'

अर्को छोराले सोध्यो—'यो बाकस आजसम्म कहाँ थियो ? यसमा के छ ?'

बूढ़ा—'यो सन्दूक आफ्नो एक मित्रकहाँ राखिछोड़ेको थियो। होला यसमा दस, पन्द्र हजार रुपियाँ।'

सन्दूक पनि थियो गह्रौं नै। छोराहरूले विश्वास गरे अहिले पनि पिताजीसँग पूँजी छ। बस्, अब के थियो सबै छोराहरूले आफ्ना-आफ्ना घरमा बस्नलाई आग्रह गरे। 'मसँग बस्नोस्, मसँग बस्नोस्। तपाईं एक्लै तीर्थस्थानमा रहनु यो हामीलाई शोभा दिँदैन। संसारले हामीलाई के भन्ला ? तपाईं नजानुहोस्। हामी तपाईंको पूरा सेवा गर्नेछौं।'

संसार स्वार्थी छ, तैपनि जीव अविवेकी रहेको छ। जीव यस्तो दुष्ट भएकोमा उसलाई दुःख लाग्दैन। उसलाई नराम्रो देखिएला भन्ने यसैको दुःख छ। त्यो गर्छ खराब तर इच्छा राख्छ राम्रो देखियोस्।

सारा परिवारले त्यस बूढ़ाको सेवा गर्न थाले। मित्रले भनेको थियो प्राण नगएसम्म त्यस सन्दूकको साँचो कसैलाई नदिनू। आखिर एक दिन उसको मृत्यु भयो।

पुत्रहरूले सोचे पिताजीले हामीलाई धेरै सम्पत्ति छोड़ेर जानुभएको छ।

मानिसहरूले भने—'तपाईंहरूका पिताजीले तीन पुस्तालाई हाँस्दै-खेल्दै हेरेर सुख-सन्तोषसाथ मर्नुभएको छ त्यसकारण विनासङ्कोच उत्तरक्रिया गरेमा असल हुने थियो।'

पुत्रहरूले दिल खोलेर उत्तर क्रिया गरे। उनीहरूले सोचेका थिए सम्पूर्ण भीड़ गएपछि बाकस खोल्ने, अन्तमा त्यो खोलियो तर उसमा ढुंगामात्र भेटियो।

जगत्मा चारैतर्फ स्वार्थको मात्र साम्राज्य फैलिएको छ।

सुर नर मुनि सबकी यह रीति।
स्वारथ लागि करहीं सब प्रीति॥

बलिराजालाई शुक्राचार्यले भने—'वामनको तीन पाइलाले भूमि नापेर भूमिको दान गर्‍यौ भने तिम्रो सर्वस्व जानेछ। त्यसकारण तिमीलाई सावधान गरिरहेछु।'

बलिराजाले भने—'मैले वचन दिइसकेको छ। अब दान नगर्ने हो भने—असत्य बोल्ने पाप लाग्नेछ।'

शुक्राचार्यले भने—'विपत्तिको समयमा असत्य-भाषण क्षम्य छ। सत्य बोल्नु धर्म हो। असत्य-भाषण धर्म हो यस्तो भनेको छैन तर यस्तो समयमा त्यो क्षम्य छ र शायद स्तुत्य पनि।'

यी चार प्रसङ्गहरूमा असत्य बोल्नु क्षम्य मानिएको छ—( १ ) कसैको विवाहको प्रसङ्गमा, ( २ ) स्त्रीहरूसँग ( पत्नी ) कुरा गर्दा। महाभारतमा पनि भनेको छ—'न तु गुप्तं धारयति।' स्त्रीहरूलाई श्रापै छ तिनीहरूले कुनै पनि कुरा गुप्त राख्न सक्दैनन्, ( ३ ) जब प्राणसङ्कटमा पर्न आओस्। सत्य बोल्नाले कसैको प्राणको हत्या हुने हो भने असत्य बोल्न सक्छौ, ( ४ ) गाई र साधु-सन्त, तपस्वी ब्राह्मणहरूको रक्षाको निम्ति।

राजन् तिम्रो शिरमा प्राणसङ्कट आएर उभिरहेछ। आफ्नो वचनमा नअड़। वामनजीलाई रोक। यस्ता समयमा वचन-भङ्गले केही दोष हुँदैन।

बलिराजाले भने—'गुरुजी, तपाईंले उपदेश खूबै राम्रो दिनुभो—तर म वैष्णव हुँ। पैले म मान्दथें कोही ब्राह्मण बालक मसँग भिक्षा माग्न आइरहेछ। अब मैले थाहा पाएँ साक्षात् विष्णु भगवान् मसँग भिक्षा माग्न आइरहनुभएको छ तब फेरि म नारायणलाई किन आफ्नो सर्वस्व अर्पण नगरिदिऊँ ? म वचन भङ्ग गर्न सक्दिनँ।'

हामी वैष्णव तर सेवा गर्दाखेरि भगवान्‌जीका चरणहरूमा सब कुरा राखिदिन्छौं। तपाईंले भन्नुभयो—'यी साक्षात् विष्णु हुन्। यो कुरा बड़ो राम्रो भयो। मेरा इष्टदेव विष्णु स्वयं हुनुहुन्छ। उहाँ मेरा घर आज बाल-स्वरूप भएर दान माग्न आउनुभएको छ, म फेरि आफ्नो सर्वस्व उहाँको चरणमा किन अर्पण नगरिदिऊँ ? दाताको महिमा अनौठो हुन्छ, लिनेवालाको होइन। जगत्‌मा मेरो प्रतिष्ठा हुनेछ।'

शुक्राचार्य संझाउन थाल्नुभयो—तेस्रो चरण राख्नलाई भूमि बाँकी रहने छैन, त्यसकारण उनले तिम्रो शिरमा पाउ राखेर तिमीलाई नरक पठाइदिनेछन्।

बलिराजाले भने—'मलाई नरकको केही डर छैन। पाप गरेर नरकमा जानु असल छैन, तर परमात्मालाई सर्वस्व अर्पित गरेर नरकमा जानु पनि बेसै हो।'

सम्पत्तिलाई सन्मार्गमा उपयोग गरेपछि विघ्न किन नखेप्नु परोस्, शान्ति निश्चय पाइन्छ।

यस लोकमा र परलोकमा सुखी हुनु छ भने धनको उपयोग विवेकपूर्वक गर। धनको सदुपयोग भएन भने मृत्युपर्यन्त शान्ति पाइने छैन।

बलिराजा भन्छन्—'म प्रह्लादको वंशज हुँ। म वैष्णव हुँ। म घाँटीमा कण्ठी धारण गर्छु। भगवान्‌लाई सर्वस्व अर्पित गर्छु। आज म सर्वस्व दान गर्ने छु। दान दिएपछि नरकमा जानुपरे पनि मलाई केही आपत्ति छैन। म पाप कर्म गरेर नरकमा गइरहेको छैन, चाहे दान गर्नाले जानु परोस्। म भगवान्‌को भैजाने छु। भगवान्‌को भैसकेपछि नरकवास गर्नमा पनि मलाई कोही आपत्ति छैन। एक पटक ब्रह्मसम्बन्ध स्थापित भइसकेपछि मेरा प्रभुलाई पनि मेरासाथ नरकवासी बन्नुपर्ने छ।'

ब्राह्मणलाई जब दान दिइन्छ तब उसको शरीरमा विष्णुको आह्वान गरिन्छ। यहाँ तर स्वयं महाविष्णु आफैं आउनु भएको छ। गुरुजी, म भगवान्‌लाई सर्वस्व दान गर्नेछु। जीवले विश्वासघात

गर्न सक्छ तर आपत्तिका समयमा भगवान् दौड़ेर आउनुहुन्छ। म प्रभुको हुनेछु र उहाँ मेरो। फेरि म जहाँ जाउँला, उहाँ पनि सँगसँगै आउनुहुनेछ, नरकमा पनि आउनुहुनेछ।

तुकारामले भनेका छन्—'चाहे गर्भवासी हुनुपरोस् या नरकवासी तर यदि मेरा विट्ठल मेरा साथमा छन् भने म कहीं पनि जान तयार छु।' तुकाराम गर्भवास माग्छन् किनभने उनलाई विश्वास छ—*तुका म्हणे गर्भवासी घालावी आम्हावी।* म जहाँ पनि जाउँला विट्ठलनाथ सँग-सँगै आउनुहुने छ।

गुरुजी, हरेक सत्कर्मका समय तपाईंले सङ्कल्प गराउनु हुन्छ—

**अनेन कर्मणा भगवान् परमेश्वरः प्रीयताम् मन म।**

तपाईंलाई सारा कर्म कृष्णार्पण। अब आज स्वयं श्रीकृष्ण दान माग्न आउनुभएको छ, तब म नामञ्जूर कसरी गरूँ। तपाईं सङ्कल्प गराउनुहोस्। कृपया दानको सङ्कल्प गराउनुहोस्। आफ्ना भगवान्‌लाई म सर्वस्व अर्पण गर्छु।

शुक्राचार्य—'म सङ्कल्प गराउँदिन।

वामनजी—'राजन्, तपाईंका पुरेत मान्दैनन् भने म सङ्कल्प गराउनेछु। म ब्राह्मण पुत्र हुँ। सङ्कल्प गराउन म पनि जान्दछु।'

बलिराजाले अनुमति दिए तब वामनजी सङ्कल्प गराउन थाल्नुभो—उहाँले जलपात्रमा जल राख्न भनी अन्हाउनुभो शुक्राचार्यलाई यो हेर्न सक्नु भएन। उनले सूक्ष्म देहधारण गरेर जलपात्रको टुटीको प्वालमा बसेर जल रोकिदिए। उनी त्यहाँ बसिदिनाले जल बाहिर निस्किएन।

शुक्राचार्यको प्रपञ्च वामनजीले बुझ्नुभो। उहाँले कुशको एक टुक्रा लिएर जलपात्रको टुटीमा घोच्नुभो। यसो गर्नाले शुक्राचार्यको एउटा आँखा फुट्यो।

जब भगवान् कृपा गर्नुहुन्छ तब एउटा आँखा फोरिदिनुहुन्छ। उहाँ भन्नुहुन्छ मेरो दर्शन गरिसकेपछि जगत्‌लाई एउटै आँखाले हेर। जगत्‌लाई एकैदृष्टिले हेर। अनेकमा एक व्याप्त छ, यस्तो दृष्टिले हेर। यही समभाव हो। एउटै ईश्वर सबैमा हुनुहुन्छ, यस्तो देख्नु समता हो। एउटै ईश्वर अनेक रूपले क्रीड़ा गरिरहेछन्, यस्तो भावले हेर्नु समभाव हो। दुइ आँखाले हेर्नु विषमता हो। एउटै समदृष्टिले हेर। केही कपटभाव मनमा नराख।

भगवान् स्वयं माग्न आए र पनि शुक्राचार्यका मनबाट द्वैतभाव गएन। यी मेरा यजमान हुन्, ऊ भिक्षुक हो यस्तो द्वैतभाव उनको मनबाट गएन। उनको एउटा आँखा फोरिदिइयो अर्थात् अद्वैत दृष्टिले हेर्नुपरेको छ। योगीले एउटै दृष्टिले जगत्‌लाई हेर्छ।

परमात्मा सोच्नुहुन्छ दुवै आँखा फुटिहालेमा मेरो दर्शन कसरी पाउला।

परमात्माको दर्शन पाएपछि एउटै दृष्टिले सबैकुरा हेर। दुइ आँखाहरूले, दुइ दृष्टिले हेरेमा विषमता हुनेछ।

शुक्राचार्यले संझिए धेरै बाधा पारेमा मेरो अर्को आँखा पनि फोरिएला। उनी त्यहाँबाट हटे।

आँखा विकृत भएपछि नाउँ पनि बिग्रन्छ, कलङ्कित हुन्छ। रावणको आँखा-दृष्टि बिग्रियो, तबदेखि उसको नाउँ पनि बिग्रियो।

परमात्माले एउटै आँखा फोरिदिनुहुन्छ। रामायणमा पनि एउटा प्रसङ्ग छ। रामचन्द्रले जयन्तको एउटा आँखा फोरिदिनुभएको थियो।

भगवान् भन्नुहुन्छ—'एउटै दृष्टिले जगत्लाई हेर। आफ्नो अर्काको भाव छोड़। सबैमा भगवान्को अंश छ भनी मान। एकदृष्टिले हेर्नु समता हो, दुइ आँखाले हेर्नु विषमता हो।'

गीताजीमा भनिएको छ 'समत्व योग उच्यते।' सबैका प्रति समता राख्नु योग हो।

भगवान्ले जगत्लाई ढाकिदिनु भयो। सबै ठाउँमा उहाँकै स्वरूप देखिन थाल्यो। जगत् बाहिर ( माथि ) दशाङ्गुल छ। दशाङ्गुलको अर्थ शङ्कराचार्यले गर्नुभएको छ दश औंलाहरूले प्रभुको वन्दना गरिन्छ। परमात्मा वन्दनीय हुनुहुन्छ। वेद पनि परमात्माको प्रतिपादन गर्न सक्दैनन्, निषेधात्मक रीतिबाट नेति नेति भन्दछन्। ईश्वरलाई चिन्नेले पनि उसको स्वरूपको वर्णन गर्न सक्दैनन्।

भगवान् वन्दनीय हुनुहुन्छ, चिन्तनीय हुनुहुन्छ। उहाँले आफ्नो कृपाद्वारा अज्ञान दूर गर्नुहुन्छ, अनि उहाँलाई चिन्न सकिन्छ।

प्रभुको एकै चरणमा पृथ्वी अटाइन्। दोस्रो चरणले ब्रह्मलोक व्याप्त गऱ्यो। तेस्रो चरणका निमित्त ठाउँ रहेन। त्यस समय सारा दैत्य युद्ध गर्नका निमित्त तयार भए। भन्न थाले 'हाम्रा स्वामीलाई छलिरहेछन्। मार, मार।' बलिराजाले उनीहरूलाई संझाए 'यो समय प्रतिकूल छ। शान्त रहू। नभए तिमीहरू स्वयं मारिने छौ।'

वामनजीले भन्नुभो—राजन्! तिमीले सङ्कल्प गरेका छौ तीन चरणजति भूमि दिनेछु। अब म तेस्रो चरण राखौं कहाँ? सङ्कल्पानुसार दान नदिनेवाला मनुष्य नरकवासी हुन्छ। तिमी मसँग छल गरिरहेछौ।

अलिकति विचार गरिहेरौं, यस प्रसङ्गमा कसले कोसँग छल गरिरहेछ? भगवान् दान लिन आउनुभएको थियो, उस वेला सात वर्षको वटुक थिए तर दानको सङ्कल्प भएपछि विराट् हुनु भयो।

'गणेश पुराण' मा बलिराजाले भगवान्लाई सोधेका थिए—म निष्पाप छु र पनि मेरा साथ यस्तो छल किन गरियो?

बलिराजा निष्पाप थिए त्यसैले भगवान्ले उनका साथ युद्ध गर्नुभएन।

ईश्वर निष्पाप हुनुहुन्छ। उहाँ कसैलाई पनि मार्नुहुन्न। मनुष्यको पापैले उसलाई मार्दछ।

तपाईंले कपट गर्नुभयो। मलाई पाताल पुऱ्याइदिनु भयो। के यो योग्य भयो? तपाईं स्वयं निर्णय गर्नुहोस्।

वामनजी उत्तर दिनुहुन्छ—तिमी पूर्ण निष्पापी छैनौ। यज्ञको आरम्भमा गणपतिको पूजाको आज्ञा भएको हो तर तिमीले सो कुरा नामंजूर गरिदिएका थियौ। म विष्णुको पूजा गर्ने छु। गणपति पनि विष्णु हुन्। तर तिमीले सो कुरा मानेनौ। यो तिम्रो भेददृष्टि थियो।

जबसम्म अनन्य भक्ति सिद्ध हुँदैन तबसम्म अन्य देवहरूमा पनि आफ्नो इष्टदेवको अंश मानेर उनलाई वन्दना गर र इष्टदेवसँग अनन्य भक्ति गर।

तिमीले शास्त्रको मर्यादाको उल्लंघन गऱ्यौ तिमीले गणपतिको पूजा मात्रै गऱ्यौ तर पूज्यभावले गरेनौ। गणपतिले मसँग प्रार्थना गर्नुभयो 'म तिम्रो यज्ञमा बाधा पारूँ। त्यसकारण म यहाँ आएको छु।'

गणपति महाराज विघ्नहर्ता पनि हुनुहुन्छ, विघ्नकर्ता पनि।

अब म तेस्रो चरण कहाँ राखूँ ?

भगवान्को विराट् स्वरूपलाई देखेर बलिराजा भयभीत भए। त्यस समयमा सत्त्व गुणस्वरूपा विन्ध्याले भनिन्—'यो सबै तिम्रो क्रियाभूमि हो। यस शरीरमा पनि जब जीवको अधिकार छैन तब सम्पत्ति र सन्ततिमा कसरी हुन सक्छ ? शरीर माटोले बनेको छ। जीव व्यर्थ यस्तो मान्दछ शरीर, सम्पत्ति आदि मेरो आफ्नै हो। वास्तवमा यस्तो छैन।'

गीताको आरम्भ 'धर्म' शब्दबाट गरेको छ। गीताको प्रथम शब्द हो 'धर्मक्षेत्रे' गीताको समाप्ति 'मम'। यी दुइ शब्दको मध्यमा अटाएको छ यो सारा गीता। ममको अर्थ हो 'मेरो'। 'मम धर्म' मेरो धर्म। धर्म अर्थात् सत्कर्म। मेरो हातबाट जे पनि सत्कर्म हुन पाउला त्यही र त्यतिनै मेरो धर्म हुनेछ।

सत्कर्म मात्र तिम्रो हो शरीर होइन। जति सत्कर्म जीवले गरेको हुन्छ, त्यति साथमा जान्छ। जति सत्कर्म गर्ने छौ त्यति नै तिम्रो हुनेछ।

धृतराष्ट्रले भनेको थियो—'मामकाः' यी मेरा पुत्र हुन्। यसै कारणले भगवान्ले उसका पुत्रलाई मारिदिनुभएको थियो। धृतराष्ट्रले भनेको थियो—'मामकाः पाण्डवाः'।

अर्जुनले भगवान्सँग भनेको थियो—'शिष्यऽस्ते हं शाधिमां त्वां प्रपन्नम्' म तपाईंको हुँ, म तपाईंको शरणमा छु। तब भगवान्ले उनलाई आफ्नो गराउनुपऱ्यो र उनको रथलाई चलाउनुपऱ्यो।

मनुष्य यो जान्दैन उसको आफ्नो के छ र के छैन, फलतः वाद-विवाद र सङ्घर्ष चलिरहन्छ। वास्तवमा मेरो भनिबुझेका खण्डमा उसको वास्तवमा के छ र सारा टण्टाफसाद मेटिने छ। द्रव्यको सिवाय पनि कुनै अन्य सुख छ या छैन र आत्मानन्दजस्तो पनि कुनै वस्तु छ, यो मनुष्यले जान्दै जान्दैन।

आफ्नो हातले गरेको सत्कर्म मात्र आफ्नो हो। यो जीव होइन प्रभु स्वामी हो। जीव कारिन्दा मात्र हो। यस शरीरमा जब जीवको सत्ता हुँदैन भने तब अरू कुनै वस्तुमा कसरी हुन सक्छ ? यमराजको आज्ञा हुनेसाथ शरीर त्यागनु परिहाल्छ। जगत्को कानून त्यहाँ चल्न सक्दैन। यो कुरा कहिल्यै नबिर्स तन र मनका स्वामी परमात्मा हुन्। फेरि पनि जीव मेरो-मेरो भन्छ।

जसले मेरो-मेरो भन्दछ त्यसलाई भगवान्‌ले मार्नुहुन्छ। जसले तेरो तेरो गर्दछ, उसलाई भगवान्‌ले तार्नुहुन्छ।

विन्ध्यावलीले भनिन्—हे प्रभु ! यो तर तपाईंकै लीला हो। तपाईंलाई कस्तो, के दान देला ? मेरा पतिले अभिमानवश दान दिन चाहनुभयो र दिनु पनि भयो। तपाईंलाई कसैले केही दिन सक्दैन। सर्वस्वको स्वामी तपाईं हुनुहुन्छ। यसै कारण वैष्णव सम्प्रदायले दानको साटो भेट शब्दको प्रयोग गर्छन्। जो ईश्वरको छ, त्यही उनलाई समर्पित गर्नु छ।

प्रभु ! मेरा पतिको भनाइमा तलमाथि पऱ्यो।

बलिमा सूक्ष्म अभिमान आजसम्म रहिरहेको थियो 'मैले दान दिएँ, यस अभिमानलाई दूर गर्नलाई विन्ध्यावलीले पतिलाई भनिन्—भगवान्‌लाई प्रणाम गर्नुहोस्। भगवान्‌लाई कसले के दिन सक्छ ? उहाँले जो दिनु भएको छ, त्यही उहाँलाई दिनु छ। यो शरीर बाँचेको छ, जो माटोकै हो। भगवान्‌लाई भन्नुहोस् अब उहाँको आफ्नो तेस्रो चरण मेरो शिरमाथि परोस्।'

शिर बुद्धि प्रधान हो। उसमा कामको बास छ। शिरमा भगवान्‌को चरण आएपछि त्यो बुद्धिगत कामको नाश हुन्छ। जसले तन, मन, धन भगवान्‌लाई अर्पित गर्छ त्यसैको शिरमा चरण राख्ने काम कृष्ण भगवान्‌ले गर्नुहुन्छ। परमात्माको हात या चरण शिरमा आउनाले शिरस्थित सूक्ष्म कामको नाश हुन्छ।

गोपिनीहरू पनि भन्दछन्—

'शिरसिदेहि नः श्री करग्रहम्।'

गोपिनीहरू गोपी गीतामा भगवान्‌सँग कामना गर्दछन् जो उनको शिरमा उनको कर-कमल राखियोस्। गोपी को हो।

गोभिः—इन्द्रियैः भक्तिरसं। या पिवति सा गोपी।

प्रत्येक इन्द्रियद्वारा जसले भगवत्-रसको पान गर्छ त्यही गोपी हो।

प्रभुसँग प्रार्थना गर अब आफ्नो चरण मेरो शिरमा राखिदिनोस्।

बलिराजाले भगवान्‌सँग भने—'पदं तृतीयं शिष्णं मे निजम्।' मेरो मस्तकमा तपाईंले आफ्नो तेस्रो चरण राख्नोस्।

मस्तकमा बुद्धि हुन्छ र बुद्धिमा सूक्ष्मरूपबाट काम रहेको हुन्छ। त्यसलाई नष्ट गर्नका निमित्त आफ्नो मस्तकमा चरण राख्नका निमित्त बलिले प्रार्थना गरे। यसो भएपछि सकाम बुद्धि नष्ट हुन्छ।

जीव र ईश्वरको मिलनमा बाधक, अवरोधक काम मात्रै हो।

मैले राम्ररी भन्न सकिनँ। मलाई क्षमा गरिदिनुहोस्। मेरो केही छैन। तपाईंको जो छ त्यही दिइरहेछु। अपराध क्षमा गरिदिनुहोस्, साँच्चै तपाईं हामी असुरहरूका गुरु हुनुहुन्छ, किनभने हाम्रो अभिमानको पर्खाल भत्काएर हाम्रो आँखा खोलिदिनुभयो।

यत्तिकैमा बलिराजाका पितामह प्रह्लादजीको त्यहाँ आगमन भयो। उनले भगवान्‌लाई भन्नलागे—'तपाईंले मेरो यस नातिलाई दिनुभएको इन्द्रपद खोसेर लिनुभयो र लक्ष्मीविहीन पनि गरिदिनुभयो। म मान्दछु यसो गरेर तपाईंले उसमाथि ठूलो अनुग्रह गर्नुभयो।'

दाताले कहिले पनि अभिमानी बन्नु हुँदैन। जसले वन्दना गर्छ, त्यसले प्रभुलाई पनि बन्धनमा पार्न सक्छ।

शरीरको अर्पण अर्थात् मेरोपन, अहङ्कार, अभिमानको अर्पण। यदि दाता दीन बन्दैन भने उसको दान पनि सफल हुने छैन।

बलिराजाको हृदयमा जब दैन्य आयो तब परमात्माको हृदय पग्लियो। उनले राजालाई भने—'तिमीले मलाई सर्वस्वको दान दियौ, त्यसकारण म तिम्रो ऋणी भएँ।'

नम्रता, दैन्य आएपछि परमात्मा ऋणी हुनुभयो।

मैले इन्द्र आदिलाई स्वर्गको राज्य दिएको छु, तर तिमीलाई पातालको राज्य दिन्छु। आजदेखि प्रत्येक द्वारमा म पहरा दिनेछु।

बलिराजाको कानमा र आँखामा ईश्वर अटाउनुभयो। बलिराजाले भने—'स्वर्गको राज्यको अपेक्षा यो सुतल पाताल राज्य ज्यादा राम्रो छ, यहाँ भगवान्‌को सधैं सान्निध्य छ।'

यस बलिराजाको कथामा अलिकति रहस्य पनि छ। बलि जीवात्मा हो र वामन परमात्मा। बलिराजाका गुरु हुन् शुक्राचार्य। यसको अर्थ यो हो जो व्यक्ति शुक्रको सेवा—वीर्य ब्रह्मचर्यको सेवा गर्छ र जो संयमी छ, त्यसलाई कसैले मार्न सक्दैन।

बलिराजालाई कसैले मार्न सक्दैन। कंस आदिलाई मारेको थियो तर वामन भगवान्‌ले बलिलाई मारेनन्। बलि निष्पाप छन्, शुक्राचार्यको सेवा गर्छन्, सदाचारी छन्।

भक्त शुक्राचार्यको सेवा गरेर जब बलि बन्दछ तब भगवान् आँगनमा आउनुहुन्छ। तिमी बलि बन्यौ भने भगवान् तिम्रो आँगनमा पनि आउनुहुनेछ। बलि बलियो छ। बलवान् मात्र भगवान्‌को बाटोमा हिँड्न सक्छ, प्रगति गर्न सक्छ।

तर बलवान् को हो ? जसले भित्री शत्रुहरूलाई—काम, क्रोध, मद, मोह, लोभ, मत्सरलाई मार्दछ सोही बलवान् हो।

जीवात्मा बलि जब बलियो बन्दछ तब उसको ढोकामा भगवान् आएर उभिदिनु हुन्छ। शारीरिक, बौद्धिक र ज्ञानबलको अपेक्षा प्रेम-बल अधिक श्रेष्ठ छ। प्रेम-बलका सामुन्ने अरू सबै बल गौण छन्। बलि त्यही हो जो एक प्रभुका साथ प्रेम गर्दछ। सबै बलहरूको अपेक्षा प्रेमबल श्रेष्ठ हुनाकारण तिमी परमात्माका साथ मात्र प्रेम गर। द्रव्यबलले प्रभुलाई जित्न सकिँदैन। प्रेम बलले परमात्मालाई जित्न सकिन्छ।

यदि परमात्माका साथ प्रेम गर्नुछ भने जगत्‌का पदार्थहरूप्रति प्रेमलाई छोड्नुपर्छ। परमात्माका साथ प्रेम गर्‍यौ र संयम बढ़ायौ भने तिमी बलि बन्न सक्ने छौ। तब वामन भएर भगवान् तिमीकहाँ आउने छन्।

भगवान्‌लाई माग्न सङ्कोच लागेकाले वामन बनेर आएका थिए। जीवले प्रेम-भाव बढ़ायो भने भगवान् बटुक बनेर, निर्बलजस्तो भएर आँगनमा आउनुहुनेछ।

कुनै एक स्त्री कथा सुन्न भनी हिँड़िन्। बाटामा उनको बालक रुन थाल्यो। आमाले त्यसलाई केही खेलौना दिइन् तर त्यो रुँदै रह्यो। त्यसले आमाको आँचल तान्न थाल्यो र कथामा जान दिएन। बालकको प्रेमले आमा कमजोर भइन्, त्यसकारण ती स्त्री कथामा गइनन्। त्यही बालक युवा बन्यो, विवाहित पनि भयो र आमाको प्रेम पनि बिर्सियो र समयको साथसाथै केही कमजोर पनि हुन गयो। अब युवकले आमालाई कथामा जान दिएन भने आमा मान्दिनन्। उनी भन्छिन् अब तेरो ममाथिको प्रेम पहिलेको जस्तो छैन। युवक जब बालक थियो तब उसमाथि आमाको प्रेम पूरा-पूरा थियो।

तिमीले प्रेम बढ़ायौ र बलि बन्यौ भने परमात्मा तिम्रो आँगनमा आउनुहुनेछ।

जसले सदाचारपूर्ण र संयमित जीवन बिताउँछ उसको घरमा मात्र भगवान् भिक्षा माग्न जानुहुन्छ।

परमात्मा जब ढोकामा आउनुहुन्छ तब तीन चीजहरू माग्नु हुन्छ। उहाँ तीन पाइलाभर पृथ्वी माग्नुहुन्छ अर्थात् जीवमात्रसँग तन, मन र धन माग्नुहुन्छ। यी तीनैलाई भगवान्‌लाई दान दिनुपर्छ। तनले सेवा गर्नाले देहाभिमान नष्ट हुँदै जान्छ। मनले सेवा गर्नाले अहङ्कार घट्दै जान्छ। धनले सेवा गर्नाले धनको माया-ममता-मोह नष्ट हुन थाल्छ। मनले सेवा गर्नाले परिश्रम हुँदैन। तन, मन, धन, भगवान्‌लाई दिएमात्र रासलीलामा स्थान पाइन्छ। जीव र ब्रह्मको मिलन हुन्छ। त्यसकारण यी तिनैले भगवान्‌को सेवा गर।

सबै वस्तुहरू भगवान्‌कै हो र उनलाई अर्पण गर्नु छ। उनैले दिएका उनैलाई दिनु छ।

**त्वदीयं वस्तु गोविन्द तुभ्यमेव समर्पये।**

जो व्यक्ति बलिको जस्तो तन, मन, धन भगवान्‌लाई अर्पित गर्दछ भगवान् उसको द्वारपाल हुनुहुन्छ। यस्ता दाताका शरीरको प्रत्येक इन्द्रियको द्वारमा भगवान् नारायण बस्नुहुन्छ। त्यसको रक्षा भगवान्‌ले गर्नुहुन्छ। यी इन्द्रियहरू शरीरका द्वार हुन्। यी सबैका द्वारमा रामको पालो हुनेछ अनि काम भित्र जान सक्ने छैन।

जुन व्यक्तिले आफ्नो तन, मन, धन परमात्मालाई अर्पण गरिदिन्छ उसका शरीर, इन्द्रियको रक्षा उहाँले गरिदिनुहुन्छ। तन, मन, धनबाट सेवा भएपछि भगवान्‌ले तिम्रा प्रत्येक इन्द्रियहरूको याद विचार गरिदिनुहुन्छ। यस्ता व्यक्तिको कानमा, आँखामा र हृदयमा भगवान्‌को वास हुने छ।

तीन चरण पृथ्वीको एक अर्को पनि अर्थ छ। सत्त्व, रज र तम। यी तीनै गुणहरू भगवान्‌लाई अर्पण गरिदेऊ। शरीरद्वारा ईश्वर सेवा गर्नाले तमोगुण घट्ने छ। ईश्वर सेवामा धनको उपयोग गर्नाले रजोगुण कम हुनेछ। तन र धन दियौ तर मन दिएनौ भने ईश्वर प्रसन्न हुनुहुने छैन। तन र धनले चाहिँ सेवा गर्ने तर मनले नगरेमा तब प्रभुसेवामा आनन्द आउँदैन। ईश्वरको साथ मनसँग सम्बन्ध जोड्नुपर्छ। मनुष्यले आफ्नो सर्वस्व ईश्वरलाई दिँदैन, अलिकति आफ्ना साथ राखिछोड्छ। त्यसकारण प्रभु प्रसन्न हनुहुन्न।

सत्त्वगुणको क्षयका निमित्त मन पनि ईश्वरलाई अर्पण गर्नुपर्छ। मनलाई उनको सेवामा लगाइराख्नु छ। मन विषयहरूमा र तन भगवान्‌का नजिक रह्यो भने काम बन्दैन। सेवा गर्दाखेरि आँखामा आँसू आयो भने भगवान्‌ले कृपा गर्नुभयो भन्ठान। सेवा गर्नाले थकाई मर्छ। ईश्वरका साथ सम्बन्ध भयो भने थकाइ मर्छ। ज्ञानी व्यक्ति ईश्वरका साथ शरीरले होइन मनले सम्बन्ध जोड्दछ।

समर्पण गर्नेले स्वयं आफूलाई पनि समर्पण गर्नुहुन्छ।

दान दिएपछि बलिराजाले भगवान्‌लाई नमस्कार गरेनन् र उनी अप्रसन्न भए। बलिको मनमा सूक्ष्म अभिमान थियो जो मैले सबै कुरा दिएको छु। अर्पण गरेर पनि उसको मनमा दीनता र नम्रता भन्ने चीज आएन।

सबै कुरा विधिपूर्वक गरेर पनि मान मैले केही पनि गरेको छैन।

भगवान्‌लाई निवेदन गर—

**मन्त्रहीनं क्रियाहीनं भक्तिहीनं जनार्दन।**

म भक्तिरहित, क्रियारहित, मन्त्ररहित छु। मेरो केही भूल भयो भने क्षमा गर्नु र मेरा कर्महरूलाई परिपूर्ण मानिदिनु।

सत्कर्म गरेपछि यदि दैन्य आएन भने सत्कर्म फल्दैन। कर्म होइन तर मैले कर्म गरेको छु, यस्तो अहङ्कार बाधक हुन्छ। म केही गर्दछु, म ज्ञानी छु—यस्तो अहङ्कार भएमा प्रभु उपेक्षा गर्नुहुन्छ।

हृदय देखि नमस्कार गर्‍यौ भने भगवान्‌को प्यारो हुनेछौ।

बलिको मनमा दैन्यता आयो र सेव्यलाई सेवक बन्नुपर्‍यो। प्रभु द्वारपालसम्म बन्नलाई राजी भए।

जसका इन्द्रियहरूले भगवान्‌को नाउँ रटना गर्छ त्यसको ती सारा इन्द्रियहरूमा भगवान् आएर राज हुन्छ। सुतल-पातालको द्वारमा भगवान्‌ले पहरा गरेको भनेको यही अर्थ हो सुतल-पातालमा बलिले प्रवेश गरे। प्रत्येक द्वारमा शङ्ख, चक्र, गदा, पद्मधारी श्रीकृष्ण विराजमान हुनुहुन्थ्यो। तन, मन, धनले सेवा गर्नेहरूको आँखामा र कानमा, प्रत्येक इन्द्रियमा श्रीकृष्ण रहनुहुन्छ।

एकपटक रावण घुम्दैफिर्दै बलिकहाँ आयो र लड्नलाई तयार भयो। उसले बलिको द्वारमा वामनजीलाई चौकीदारी गरिरहेको देख्यो। उसले वामनजीलाई भन्यो, 'म बलिसँग युद्ध गर्न चाहन्छु।' तब वामनले भने—'पहिले मेरा साथ युद्ध गर। म सेवक हुँ उहाँ स्वामी।' अनि रावणले वामनजीका साथ लड्न शुरू गर्‍यो। वामनजीले त्यसको छातीमा यस्तो एक लात्ती हानिदिनु भयो त्यो समुद्र किनारमा गएर लड्यो।

रावण काम हो। तिम्रा इन्द्रियहरूको द्वारमा यदि भगवान्‌ले पहरा दिन थाले भने तब काम त्यसमा प्रवेश गर्न पाउँदैन।

वामनले स्वर्गको राज्य इन्द्रलाई दिए। वामनजी बलिराजाको घरमा दान लिन गएका वहाँ उनलाई द्वारपाल बन्नुपर्‍यो।

जसले दान लिन्छ त्यो बन्धनमा फँस्दछ।

वामनजी बन्धनमा फँसे तब सबैलाई आनन्द आयो, तर महालक्ष्मीलाई दुःख भयो। घरमा सबै कुरा थियो तर नारायणको अनुपस्थितिले उनलाई छटपटी पर्‍यो। उनी सदा यही सोचमा पर्थिन्—उहाँ कहिले आउने हो ? कहाँ जानुभयो होला ? कहाँ हुनुहोला ? एक दिन उहाँले बहुतै पीर परेका वेलामा नारदजीलाई सोध्नुभयो—कहाँ हुनुहुन्छ मेरा स्वामी ? तपाईंलाई केही थाहा छ कि ? तब नारदजीले उत्तर दिनुभो—'सुन्दछु कि नारायण सुतल-पातालमा बलिराजाको घर-द्वारमा पालेको काम गरिरहनुभएको छ। बलिकहाँ दान लिन भनी जानुभएको थियो तर बन्धनमा पर्नुभयो। सर्वस्वको दान लिएर ऋणी हुनुभो।'

लक्ष्मीजी सुतल-पातालमा गइन्। घरमा भगवान्‌लाई प्रसन्नता साथ स्थापित गर्‍यो भने तब लक्ष्मीजी पनि उनका पछि-पछि विना निमन्त्रणा पनि आइहाल्नेछिन्। जहाँ भगवान् हनुहुन्छ वहाँ लक्ष्मीजी आइहाल्छिन्।

यो कुनै आश्चर्य भएन जुन घरमा नारायण द्वारपाल भएर बस्नु हुन्छ त्यहाँ लक्ष्मीजी पनि विना निमन्त्रणा आइहाल्नु हुनेछ। त्यसकारण लक्ष्मीजीको पछि होइन तर भगवान्‌को पछि लाग। नारायणको आराधना गर्‍यौ भने लक्ष्मीजी स्वयं आइहाल्नुहुनेछ।

लक्ष्मीजीले ब्राह्मण-पत्नीको रूप धारण गर्नुभयो। उहाँले बलिराजालाई भन्नुभयो—'म तपाईंकी धर्मबहिनी हूँ। जगत्‌मा न कोही मेरा भाइ छन् न तपाईंका बहिनी। आजदेखि म तपाईंकी धर्म बहिनी र तपाईं मेरा धर्म भ्राता।' बलिलाई आनन्द लाग्यो। उनले लक्ष्मीजीलाई नमस्कार गरे। उनलाई दुःख थियो जो आजसम्म उनकी बहिनी थिएनन्। लक्ष्मीको आगमनका साथ सबैलाई आनन्द भयो तर स्वयं लक्ष्मी-मातालाई केही आनन्द आएन, उनलाई दुःख थियो जो उनका स्वामी हातमा लट्ठी लिएर एक सामान्य पाले झैं पालो दिइरहनुभएको छ।

श्रावण मास आयो। लक्ष्मीले रक्षाबन्धनका दिन ( पूर्णिमाको दिन ) बलिराजालाई भनिन् म आज तपाईंलाई रक्षाबन्धन बाँध्ने छु। बलिराजाले रक्षाबन्धन बाँधेपछि वन्दना गर्दै लक्ष्मीजीलाई, भने, 'बैनी ! आज तिमीलाई मैले केही दिनुपर्छ जे मन लाग्छ माग। अलिकति पनि संकोच नगर।'

लक्ष्मीजीले भनिन्—माग्दाखेरि सङ्कोच लागिरहेछ।

बलिराजा—आज त्यही माग जो तिम्रा घरमा नहोस्।

लक्ष्मीजी—त्यसो तर मेरो घरमा सबै थोक छ तर एउटा त्यही चाहिँ छैन जसका विना म बेचैन छु। मलाई अरू केही चाहिँदैन। तपाईंले आफ्नो यस द्वारपाल मलाई दिनुहोस्। तपाईंले वहाँलाई मुक्त गरिदिनुहोस्।

बलिराजा—'किन ? के यो तिम्रो कोही नातेदार हो क्या ?'

लक्ष्मीजी—'यी मेरा नारायण हुन्। मेरा सर्वस्व हुन्।'

अनि नारायण चतुर्भुज स्वरूपमा प्रकट हुनु भयो—

शुकदेवजी वर्णन गर्नुहुन्छ—

राजन् माता महालक्ष्मी भगवान् नारायणका साथ श्रावण शुक्ल पूर्णिमाका दिन बैकुण्ठ धाममा जानुभयो। यसैको स्मृतिमा रामानुजाचार्यका मन्दिरहरूमा यस दिन पाटोत्सव मनाउने चलन चलिआएको छ।

यस प्रकार लक्ष्मीजीले दानद्वारा नारायणलाई मुक्त गरिदिनुभो।

अतः भगवान् भन्नु हुन्छ—

ब्रह्मन् यमनुगृह्णामि तद्विशो विधुनोम्यहम्।
यन्मदः पुरुषः स्तब्धो लोकं मां चावमन्यते॥

(भा० ८-२२-२४)

ब्रह्माजी—म जसमाथि कृपा गर्छु त्यसको धन खोसिदिन्छु किनभने धनद्वारा मानिस अभिमानी बन्दछ र मेरो र अरूहरूको अपमान गर्न थाल्दछ।

यसै कारणले प्रह्लादजीले भगवान्‌लाई भनेका थिए—मेरो नाति बलिलाई तपाईंले इन्द्रपद तथा स्वर्गको जो राज्य दिनुभएको थियो, त्यो खोसेर लक्ष्मी - भ्रष्ट पारिदिनु भयो, त्यो उसमाथि (बलिमाथि) कृपा गर्नका निमित्त गरिएको हो।

यस परम पवित्र वामनको चरित्र कथा सुनाइयो। पितृ-तिथिका दिनहरूमा यसको पाठ गर्नाले पितृहरूलाई सद्‌गति प्राप्त हुन्छ।

अब शरणागतिको कथा आरम्भ हुन्छ। रासलीलामा जानु छ। यदि मनमा वासनाको आवरण छ भने श्रीकृष्णसँग मिलन हुँदैन। वासनाको नाशका निमित्त उपाय बताइएको छ।

महाप्रभुले भनेको छ—'म भगवान्‌को शरणमा छु यस्तो जसलाई सतत् स्मरण रहन्छ, त्यही सिद्ध पुरुष हो।'

शुकदेवजी वर्णन गर्नुहुन्छ—

राजन्, कूर्म या मत्स्यको गुण-दोष परमात्मामा आउँदैन। परमात्मा कूर्म बनोस् या मत्स्य तर ती दुइ सदा परमात्मा बनिरहन्छन्। जीव जब पशुको अवतार लिन्छ तब त्यस पशुविशेषको गुणधर्म त्यसमा आउँछ।

महाराज सत्यव्रत मनु एक समय कृतमाला नदीको किनारमा तपश्चर्या गरिरहेथे। यो नदी त्रिवेन्द्रमतर्फ छ। त्यहाँ उनले धेरै वर्षसम्म तपस्या गरे। एक पटक उनी नदीमा तर्पण गरिरहेका थिए।

ऋषि तर्पणले बुद्धि शुद्ध हुन्छ। भारत धर्मप्रधान देश हो। ऋषिहरूको स्मरण गर्नाले दिव्य संस्कार हाम्रा हृदयमा अवतीर्ण हुन्छ। आजको शिक्षामा धर्मको कुनै स्थान छैन।

जलतर्पण गर्दागर्दै महाराज मनुको हातमा एउटा माछो आयो। मनुष्यले त्यसलाई जलमा छोड़िदिए।

मत्स्यले भन्यो—'म तपाईंको हातमा अर्थात् तपाईंको शरणमा आएको छु। नदीका अरू ठूला-ठूला माछाले मलाई खाइदिनेछन्, त्यसकारण मेरो रक्षा गर्नुहोस।'

तब राजाले त्यसलाई कमण्डलुमा राखिदिए। माछो जति-जति बढ्दै गयो त्यति-त्यति उसका निमित्त दिनदिनै विशाल स्थानको आवश्यकता पर्न थाल्यो। दिनदिनै उसले विशाल स्वरूप धारण गर्दै गयो। सत्यव्रतलाई आश्चर्य लाग्यो। उनले सोचे अवश्य यो कोही असाधारण मत्स्य हो।

वस्तुतः वृत्ति नै त्यो मत्स्य हो। वृत्ति विशाल बनोस्, जबसम्म त्यो ब्रह्माकार हुँदैन, त्यतिञ्जेल सम्म शान्ति छैन। मेरो अहम् एउटै स्थानमा रहन सक्तैन। अटाउन सक्तैन। म सर्वमा छु र ममा सबै छन्। मनको आवरणलाई खोलिदिन ब्रह्माकार वृत्ति आवश्यक छ। यस जीवको हृदयमा ईश्वर बस्नुहुन्छ। तैपनि जीवको पीड़ा या मृत्युले ईश्वरलाई व्यथित गर्न सक्दैन। मानौं भगवान्‌लाई यससित कुनै सम्बन्धै छैन।

दीपकको प्रकाशमा जसले चाहोस् भागवत पाठ गरोस्, या चोरी गरोस्। दीपकको मनमा न कसैका प्रति सुभाव हुनेछ न त कुभाव। दीपकको धर्म एउटै हो प्रकाशित हुनु, प्रकाश दिनु। प्रकाशको कसैको कर्मका साथ केही सम्बन्ध छैन।

## ईश्वर सर्वभूतानां हृद्देशेऽर्जुन तिष्ठति।

परमात्मा सबैको हृदयमा बसेर दीपकको जस्तै प्रकाश दिनुहुन्छ। जीवले पाप गरोस् वा पुण्य, तर साक्षीभूत परमात्मामा यसको प्रभाव पर्दैन। ईश्वर न निष्ठुर हुनुहुन्छ न दयालु। ईश्वरको आफ्नो कुनै धर्म छैन। ईश्वर आनन्दरूप हुनुहुन्छ, सर्वव्यापी हुनुहुन्छ। यस स्वरूपमा हामीलाई कुनै विशेष लाभ या हानि छैन। परमात्मा बुद्धिभन्दा टाढ़ा हुनुहुन्छ। ईश्वरले बुद्धिलाई प्रकाशित गर्छन्। ईश्वरलाई प्रकाश दिने अरू कोही छैन। ईश्वर स्वयंप्रकाशी हो। ईश्वरका सिवाय अन्य सबै परप्रकाशी छन्।

ईश्वरको दीपकजस्तो स्वरूपले हामीलाई प्रकाश दिन्छ। यस स्वरूपको अनुभव गर्नलाई ज्ञानी पुरुष ब्रह्माकारवृत्ति धारण गर्छन्। जब मनले ईश्वरको सतत चिन्तन गर्छ, वृत्ति जब कृष्णाकार ब्रह्माकार हुन्छ तब शान्ति पाइन्छ। ईश्वरलाई छोड़ेर मनोवृत्तिलाई जहाँ पनि राख त्यो स्थान उसलाई सानो हुन्छ। ईश्वरलाई छोड़ेर सबै कुरा थोरै छ। त्यसकारण अन्य कुनै पनि वृत्ति-प्रवृत्तिमा मनोवृत्तिलाई शान्ति पाईंदैन। वृत्ति—कृष्णाकार, ब्रह्माकार बन्ला, भगवत्स्वरूप बन्ला अनि आनन्दको प्राप्ति हुनेछ।

काठभित्र अग्नि छ तर त्यसको उपयोग कसरी गर्ने यो जान्नुपर्छ। काठमा बाहिरतिरबाट आगो सल्कायो भने त्यो बल्नेछ। स्वयंप्रकाशी परमात्मा सबैका हृदयमा बसेर प्रकाश मात्र दिनुहुन्छ अरू केही गर्नुहुन्न। प्रभुको सगुण स्वरूपलाई हृदयमा बसाएर त्यसैमा वृत्तिलाई तदाकार गर्‍यौ भने तब शान्ति पाइनेछ।

मनलाई मत्स्यको उपमा दिइएको छ।

मत्स्यनारायणले भन्नुभो—'राजन्! म तिम्रो कल्याण गर्नका निमित्त आएको छु। आजको सातौं दिनमा प्रलय हुनेछ र सर्वनाश हुनेछ। तब तिमीले मलाई संझनू। म तिम्रो रक्षा गर्नेछु। मसँग, आफ्नो नाउ बाँधिदिनु।'

मनु महाराज प्रभुको ध्यान गर्नथाले। पृथ्वी जलमय भइन्।

त्यसै वेला वृत्ति ब्रह्माकार हुन्छ जब कुनै ब्रह्मनिष्ठ गुरु भेटिन्छन्। मत्स्यनारायण सद्गुरुको स्वरूप हो। गुरुकृपा विना मन ईश्वरमा स्थिर हुन सक्दैन।

'म तपाईंको शरणमा आएको छु, मेरो नाउ तपाईंले पारि तारिदिनुहोस्।'

वृत्तिलाई ब्रह्माकार बनाऊ। सत्यव्रती बन। सत्यको पालन गर। सत्यनिष्ठ जीवन सत्यव्रत मनु हो। कृतमालाको किनारामा बस्नुको अर्थ हो सत्कर्मको परम्परामा जीउनु। यसो भएपछि मात्र सत्यव्रत, जीवात्माको वृत्ति ब्रह्माकार हुन्छ र मत्स्यनारायण भगवान् उनको हातमा आउनुहुन्छ। यस्ता अधिकारी जीवलाई मात्र परमात्मा भेटिनुहुन्छ।

प्रलयमा अन्य जुनसुकै वस्तुहरूको नाश भएर जाओस् तर भगवान् सत्यनिष्ठको नाश हुन दिनुहुन्न। सत्कर्मी र सत्यनिष्ठ व्यक्ति प्रलयमा पनि मर्दैन। जो भगवान्‌को शरणमा जान्छ, भगवान्‌ले जसलाई आफ्नो तुल्याउनुहुन्छ त्यसको प्रलयमा नाश हुँदैन।

शरीर नाउ हो। प्रभुको चरण सिङ् हो। यस शरीरलाई परमात्मांका चरणमा बाँधिदेऊ।

आदि मत्स्यनारायण भगवान्‌लाई शुकदेवजी बारम्बार प्रणाम गर्नुहुन्छ।

आदि मत्स्यनारायणको स्तुतिलाई महात्माहरूले गुरुष्ट भनेको छ।

यस मत्स्यनारायण कथाको जो कोहीले पाठ गर्छ त्यसका सबै सङ्कटहरूको विनाश हुन्छ।

मत्स्यनारायण प्रभुले वेदका चोर हयग्रीवलाई संहार गर्नुभो। मनु महाराजलाई मत्स्य-संहिताको उपदेश दिनुभो। यस्ता प्रभुलाई प्रणाम गर्दै हामी यस आठौं स्कन्धलाई समाप्त गर्दछौं।

दक्षिणे लक्ष्मणो यस्य वामे च जनकात्मजा ।
पुरतो मारुतिर्यस्य तं वन्दे रघुनन्दनम् ॥

## श्रीराम-स्तुति

श्रीरामचन्द्र कृपालु भज मन हरण भवभय दारुणं,
नवकंज-लोचन, कंज-मुख कर कंज, पद कंजारुणं।
कन्दर्प अगणित अमित छवि, नवनील-नीरद सुन्दरं,
पट पीत मानहु तडित रुचि शुचि, नौमि जनक सुतावरं।
भज दीनबंधु, दिनेश, दानव-दैत्य-वंश निकंदनं,
रघुनंद आनन्दकंद कोशलचंद दशरथ-नंदनं।
शिर मुकुट कुंडल तिलक चारु उदार अंग विभूषणं,
आजानुभुज शर-चापधर, संग्रामजित खरदूषणं।
इति वदति तुलसीदास शंकर-शेष-मुनि मनरंजनं,
मम हृदय कंज निवास कुरु, कामादि-खल-दल गंजनं।

सियावर रामचन्द्र की जय–

# नवम स्कन्ध

ॐ जन्माद्यस्य यतोऽन्वयादितरतश्चार्थेष्वभिज्ञः स्वराट्
तेने ब्रह्म हृदा य आदिकवये मुह्यन्ति यत्सूरयः।
तेजोवारिमृदां यथा विनिमयो यत्र त्रिसर्गोऽमृषा
धाम्ना स्वेन सदा निरस्तकुहकं सत्यं परं धीमहि।

(भा० १-१-१)

श्रीकृष्णं वन्दे जगद्गुरुम्।
जगत् गुरु श्रीशंकराचार्याय नमः।

प्रथम स्कन्ध अधिकार-लीलासँग सम्बन्धित थियो। शिष्यको अधिकार भनियो। जसको अधिकार सिद्ध हुन्छ त्यसलाई सन्त भेटिन्छन्।

मृत्युले लखेट्दै आइरहेछ भन्ने थाहा पाएर राजा परीक्षित्को विलासी जीवनको अन्त्य भयो र उनी सुध्रिए।

विलासी जीवनको अन्त र भक्ति सिद्धि भएपछि जीव अधिकारी बन्दछ।

वैराग्य धारण गरेर जो बाहिर निस्किन्छ, त्यो सन्त बन्दछ र उसलाई स्वयं सद्गुरु आएर भेट गर्छन्। सन्तको घरमै सन्तको आगमन हुन्छ। तिमी सन्त बन्यौ भने तिमीसँग पनि सन्त आएर भेट गर्ने छन्।

द्वितीय स्कन्धमा ज्ञानलीला आयो। मनुष्य मात्रको कर्त्तव्य के हो ? आसन्नमृत्यु व्यक्तिको कर्त्तव्य के हो ? यस्ता प्रश्नहरूको चर्चा गरेर ज्ञान दिइएको छ।

तृतीय र चतुर्थ स्कन्धहरूमा सर्ग-विसर्गका लीलाहरू वर्णित छन्। यिनमा ज्ञानलाई क्रियात्मक रूप दिनेको उपदेश दिइएको छ। ज्ञानलाई कुन भाँतिले जीवनमा लागू गराउने, त्यसलाई कसरी क्रियात्मक गराउन सकिन्छ यो ध्रुव आदिको दृष्टान्तद्वारा बताइयो।

ज्ञान जबसम्म शब्दात्मक हुन्छ, तबसम्म शान्ति पाइने छैन। जब त्यो क्रियात्मक, सक्रिय होला तब शान्ति पाइने छ।

पाँचौं स्कन्ध स्थिति-लीलाको हो। गुरुद्वारा प्राप्त ज्ञानलाई जीवनमा लागू गरायौ भने स्थिरता प्राप्त हुनेछ। यो पाँचौं स्कन्धमा उल्लेख भएको छ।

छेटौं स्कन्धमा पुष्टि-लीला, अनुग्रह-लीलाको वर्णन छ। जो साधना गर्छ उसैमाथि प्रभु कृपा गर्नुहुन्छ।

मानिस जब कुनै स्वरूपमा स्थिर ( निमग्न ) हुन्छ अनि भगवान् कृपा गर्नुहुन्छ। केही मानिस सम्झन्छ खाइपिइकन हृष्ट-पुष्ट हुनु मात्र पुष्टिमार्ग हो। तर, यस्तो होइन। पुष्टि मार्गले यो बताउँछ भगवान्को विरहमा मनुष्यको जीवन कस्तो हुनुपर्छ।

ईश्वरलाई आफ्नो सर्वस्व अर्पण गरिदेऊ। इन्द्रियहरूलाई भक्तिरसमा चुर्लुम्म डुबाइदेऊ। त्यसो गर्नाले मात्र इन्द्रियहरूले पुष्टि पाउँछन्।

मनुष्य यदि पुष्टिको ठीकसँग उपयोग गर्छ र वासनाको वेगमा बगेर जान्छ भने त्यो पुष्ट हुनाको साटो दुष्ट मात्र बन्दछ।

अनुग्रहपछि पनि यदि मनुष्य वासनाको अधीन भयो भने त्यो पुष्ट हुन पाउँदैन।

सातौं स्कन्धमा असत् वासनालाई हटाउनलाई सन्तहरूको धर्म बताइएको छ। सातौं स्कन्ध वासना लीला हो, प्रभुको कृपालाई मनुष्यले ठीकसँग उपयोग गरेन भने वासना मात्र जागेर आउँछ।

जे छ म त्यसलाई आफ्नो सुखका निमित्त मात्र उपयोग गर्नेछु भनेर सोच्नेलाई असत्वासना भन्छन्। प्रह्लादलाई जे-जति मिलेको थियो त्यसको उसले सबैका निमित्त उपयोग गरेको थियो।

मैले जो सुख पाएको छु त्यो प्रभुकै कृपा हो। सुख भोगेर जसले अरूलाई पनि सुख दिन्छ त्यो सज्जन चाहिँ हो तर सन्त होइन। जो स्वयं दुःख उठाएर अरूलाई सुख दिन्छ त्यो साँचो सन्त हो।

रासलीला भागवत्को फल हो। रासलीला वासनालाई साथ लिएर गयौ भने तब त्यहाँ प्रवेश पाउने छैनौ। पुष्टिका पछि जाग्ने वासनाले अनर्थ उत्पन्न गर्दछ।

पुष्टिलाई सदुपयोग गर्ने देव हो र दुरुपयोग गर्ने दैत्य हो।

प्रह्लाद देव मानिए किनभने उनले पुष्टिको सदुपयोग गरे, हिरण्यकशिपुले पुष्टिको दुरुपयोग गरेकाले उनी दैत्य कहलिए।

प्रह्लादको वासना सद्वासना हो, हिरण्यकशिपुको असद्वासना हो र सामान्य मनुष्यको मिश्रवासना हो। तर सबै जनाले बुद्धिको सदुपयोग गर्दैनन्।

ईश्वरद्वारा समय, सम्पत्ति र शक्तिलाई जसले सदुपयोग गर्‍यो त्यो देव हो र दुरुपयोग गर्ने दैत्य हो। ईश्वरले जीवमाथि कृपा गर्नुहुन्छ तर अज्ञानी जीव त्यसको दुरुपयोग गर्दछ, त्यसैले दुष्ट बन्दछ।

सातौं स्कन्धमा उल्लेख गरिएको वासनाका चार उपायहरूद्वारा नाश हुन सक्छ—

( १ ) आपत्तिमा, दुःखमा हरिको, भगवान्‌को स्मरण गर। दृष्टान्त :—गजेन्द्र।

( २ ) सम्पत्तिको अवस्थामा सर्वस्वको दान—यस अवस्थामा सर्वस्वको दान गर्नाले वासनाको क्षय हुन्छ। जस्तो :—बलिराजा।

( ३ ) विपत्तिको अवस्थामा स्व-वचनको पालन। दृष्टान्त :—बलिराजा।

( ४ ) सबै अवस्थामा भगवत् शरणागति। दृष्टान्त :—सत्यव्रत। सत्यव्रत भगवान् मत्स्यनारायणको शरणमा गएका थिए।

वासनालाई नष्ट गर्ने यी चार उपाय हामीले देख्यौं।

आठौं स्कन्धमा—सन्तहरूका चार धर्म वर्णित छन्।

वासनालाई यदि प्रभुको मार्ग तर्फ फर्काउन सकेमा त्यो वासना मात्र भक्ति बन्न जान्छ। रासलीलामा हामीलाई प्रभुसँग मिल्नु छ तर वासनाको आवरण जबसम्म बीचमा छ तबसम्म मिलनमा आनन्द आउन सक्दैन। वासनालाई विनाश गरेर निर्वासन भएर रासलीलामा जानु छ। वासना क्षय भएपछि रासलीलामा ईश्वर र जीवको मिलन हुन्छ। संयम र सदाचारको भर गर्‍यौ भने रासलीलामा स्थान पाइने छ।

अष्टम स्कन्धमा सन्तहरूका चार धर्म-उल्लेख छन्। अझै पनि परीक्षित् राजाको मनमा केही अलिकता सूक्ष्म वासना बाँकी छ जस्तो शुकदेवजीको मनमा लाग्यो। यदि राजाले त्यस सूक्ष्मवासनालाई मनमा लिएर रासलीलामा जान्छन् भने त्यहाँ पनि उनलाई काम मात्र देखिने हुन्छ। महाराजालाई रासलीलामा लैजान त लैजाउँला तर यदि उनको मनमा काम बाँकी रहेको देखियो भने उनलाई त्यहाँ पनि लौकिक कामाचार मात्रै देखिने छ।

जसको मनमा काम छ, त्यसलाई जहाँ पनि काम मात्र देखा पर्छ। एउटा गृहस्थकी जवान पुत्री पतिगृह जान लाग्दा रुन लागी। बाबुको मन पनि भरिएर आयो। रुँदै-रुँदै पितालाई वन्दना गर्न लागी तब पिताले उसलाई छातीमा टाँसेर सान्त्वना दिन थाले। यो चाहिँ वात्सल्यले भरिएको निर्दोष आलिङ्गन थियो, तर बाटामा हिँड्ने कुनै व्यक्तिले यसमा विकार देख्छ। उसलाई यो थाहा छैन यी दुइ को हुन्?

पिता-पुत्रीको मिलन शुद्ध छ, तर त्योभन्दा पनि लाख गुना शुद्ध गोपी र कृष्ण जीव र ईश्वरको मिलन। यो मिलन रासलीलामा हुन्छ। रासलीलामा कामभाव बिलकुलै छैन। शुकदेवजीको दर्शनमात्रले अप्सराहरूको काम नाश भएको थियो।

जो अतिशय निष्कामी हुन्छ, त्यसले कामको कथा कसरी भन्न सक्ला? शुकदेवजी निष्कामी हुनुहुन्छ। जसको दर्शन मात्रले अन्य मानिसहरूका मनमा बसेको कामको नाश हुन जान्छ। त्यस्ता महात्माले यो कथा भनिरहनुभएको छ।

जस्तो प्रकारले सूर्यका नजिक अन्धकार जान सक्दैन त्यसरी काम पनि कृष्णाको नजिक जान सक्दैन।

बुद्धिमा काम भयो भने तब कृष्णको दर्शन पाईंदैन। बुद्धिमा जबसम्म वासनारूपी विष कायम छ, तबसम्म ईश्वररूपी रस जम्न पाउँदैन।

राजाको बुद्धि स्थिर गर्नलाई, शुद्ध गर्नका निमित्त नवम स्कन्धमा सूर्यवंशी र चन्द्रवंशी राजाहरूको कथा आउँछ।

सूर्य हो बुद्धिको स्वामी र चन्द्र हो मनको स्वामी। बुद्धिको शुद्धिका निमित्त सूर्यवंशी रामचन्द्रजीको चरित्र वर्णन छ र मनको शुद्धिका निमित्त चन्द्रवंशी श्रीकृष्णको।

रामचन्द्रको-मर्यादाको पालन गऱ्यौ भने तिम्रो मनको रावण मर्ने छ। तिम्रो मनको काम मऱ्यो भने परमात्मा कृष्ण आउनुहुने छ। रामपछि कृष्ण आउनुहुन्छ। जो रावणलाई ( कामलाई ) मार्न सक्छ, त्यसैले कृष्णलीलाको दर्शन गर्न सक्छ।

रामचन्द्रजीको चरित्रको वर्णन रामायणमा विस्तारपूर्वक गरिएको छ। त्यसैको संक्षिप्त वर्णन यहाँ पनि केही हेतुपूर्वक गरिएको छ। जसले रामचन्द्रजीका मर्यादाको पालन गर्दछ, उसलाई नै भगवान् भेटिनु हुन्छ।

मनलाई शुद्ध गर्नका निम्ति मात्र यी लीलाहरू हुन्।

यस नवौं स्कन्धमा दुइ प्रकरण छन्, जो सूर्यवंशी तथा चन्द्रवंशी राजाहरूका विषयमा छन्। सूर्यवंशमा श्रीरघुनाथ र चन्द्रवंशमा श्रीकृष्ण अवतरित हुनुभयो।

सप्तम् स्कन्धमा वासनाको कथा थियो। त्यस वासनाको नाशका निमित्त अष्टम स्कन्धमा चार उपाय उल्लेख भए। सन्तहरूका यी चार धर्महरूलाई जीवनमा लागू गर्नाले वासनाको नाश हुन सक्छ।

वासनालाई विवेकपूर्वक प्रभुको मार्गमा फर्काउन सक्यो भने तब त्यो उपासना हुन जान्छ र मनुष्यलाई भुक्ति पनि दिलाउँछ। वासनाको विनाशपछि नवम स्कन्धमा प्रवेश गर्नु छ। मन बुद्धिका निमित्त यो नवम स्कन्ध हो।

इन्द्रियहरूमा बसेको वासना स्थूल वासना हो र मनोगत वासना सूक्ष्म हो। सन्तहरूका धर्मलाई जीवनमा लागू गराउनाले स्थूल वासनाको चाहिँ नाश हुन्छ तर मन र बुद्धिमा बसेको सूक्ष्म वासनाको नाश त्यस्तो सजिलैसँग हुँदैन।

मनका स्वामी हुन् चन्द्रमा र बुद्धिका स्वामी हुन् सूर्य। सूर्य र चन्द्र बुद्धि र मनका देव हुन्। यी दुवैको आराधना गरेपछि बुद्धिगत वासनाको क्षय हुन्छ। वासनाको पूर्णतः क्षय नभइकन मोहको क्षय हुँदैन र मोहको क्षयविना मुक्ति पाईंदैन। मनको सूक्ष्म मलको नाश भएपछि मुक्ति पाइन्छ।

ज्ञानी पुरुष बारम्बार सोच्दछन् संसारमा सच्चा सुख छैन। जबसम्म शरीर छ, तबसम्म सुखसुविधाको चाहना हुन्छ तर अन्त्यमा दुःखमय हुन्यै हो भन्ठानेर तिनीहरू भोगोपभोग गर्छन्।

सूर्य-चन्द्रको उपासनाविना बुद्धिगत वासनाको नाश हुन पाउँदैन।

मनमा सूक्ष्म मल पनि भएन भने मन मर्नेछ अर्थात् श्रीकृष्णमा मिलेर मन मऱ्यो भने मुक्ति पाइन्छ। आत्मा नित्य मुक्त छ, मुक्त तर मनलाई गर्नुछ। सन्त-धर्मको आचरणबाट इन्द्रियगत विकारको नाश हुन्छ। जो विकार-वासना मन र बुद्धिमा सूक्ष्म रूपले व्याप्त छ त्यसको शीघ्र विनाश हुन पाउँदैन। जसको जन्म अन्तिम छ त्यसैको मन अतिशुद्ध हुन सक्छ। मेरो मन चाहिँ शुद्ध छ भन्ने यस्तो विचार कहिल्यै नगर्नु किनभने यसो गर्नाले साधन-साधना उपेक्षित भइजाला भन्ने संभावना छ।

भोजनबाट सन्तुष्ट होऊ, तर भजनबाट होइन। सत्कर्मको असन्तोष बनिरहनुपर्छ।

इन्द्रियगत वासना नष्ट भएपछि पनि मनोगत वासना बाँकी रहन जान्छ। ईश्वरका साथ एक हुनु छ। मन र बुद्धिमा बसिरहेको वासनाले कृष्ण-मिलनमा बाधा उपस्थित गरिरहन्छ। हाम्रो लक्ष्य-विन्दु चाहिँ छ श्रीकृष्णमिलन। हामीलाई ईश्वरका साथ एकत्व साध्नुपर्छ। भगवान्‌का साथ एक हुनलाई मात्र यो भागवत कथा हो।

भागवत कथाले जीवलाई भगवान्‌का साथ तन्मय गराइदिन्छ। कथाश्रवण पुण्यको काम हो। कर्महरूको फल कालान्तरमा मात्र पाइन्छ, तर भागवत कथा श्रवणको फल चाहिँ तत्कालै पाइन्छ। यस कथा-श्रवणको फल हो सांसारिक विषयहरूको विस्मरण र ईश्वरका साथ तन्मयता। सबै साधनहरूको यही फल हो। कथा-कीर्तनमा अनायासै तन्मयता हुन जान्छ। जगत्‌लाई अनायास बिर्सिएर ईश्वरका साथ तन्मय हुनु चाहिँ सबै साधनहरूको फल हो।

हामीलाई जगत्‌मा बस्नु छ, तर जगत्‌लाई आफ्नो मनमा बसाउनु छैन। जसको मनमा सांसारिक विषय आउँदै आउँदैन उसका निमित्त मुक्ति सुलभ छ।

प्रभुद्वारा उत्पन्न जगत्, भजनमा विक्षेपकर्त्ता होइन, तर जीवले आफ्नो मनमा जुन जगत्‌लाई बसाउँछ सोही नै भजनमा विक्षेपकर्ता बन्दछ। मनमध्येबाट संसारको सूक्ष्म स्वरूपलाई निकालेर बाहिर फाल्यो भने तब त्यहाँ श्रीकृष्ण आएर बस्नुहुन्छ।

बुद्धिगत कामको विनाशका निमित्त यो नवम स्कन्धको कथा हो।

जसमा वर्षौंदेखि तेल मात्र राखिन्छ, यस्तो भाँड़ालाई पाँच-दस पटक धोएर त्यो स्वच्छ चाहिँ हुन जाला तर तेलको वासना जाँदैन। अब त्यस भाँड़ामा अचार राख्यौं भने त्यो बिग्रिने छ। मनुष्यको मस्तिष्क पनि ठीक यस्तै हो। यसमा कैयौं वर्षदेखि कामवासनारूपी तेल भरिएको छ। यस बुद्धिरूपी पात्रमा श्रीकृष्णरूपी रस राख्नुपर्छ। अब यस मस्तिष्करूपी भाँड़ामा कामको अंश मात्र पनि रह्यो भने त्यसमा प्रेमरस जम्दै जम्ने छैन।

जब बुद्धिमा परमात्माको निवाश हुन्छ तब पूर्ण शान्ति पाइने हुन्छ, जबसम्म बुद्धिमा ईश्वरको अनुभव हुन पाउँदैन तबसम्म आनन्दको अनुभव हुँदैन। संसारका विषयहरूको ज्ञान बुद्धिमा

आएपछि विषय सुखरूप बन्दछ। परमात्मालाई बुद्धिमा राख्नु छ। मस्तिष्कमा जब ईश्वर आएर बस्नुहुन्छ तब ईश्वरस्वरूपको ज्ञान पूर्ण आनन्द दिन्छ। तेलको अंशले चटनी, अचार बिग्रन्छ सोही किसिमबाट बुद्धिमा वासनाको अंश रहन गयो भने मात्र पनि त्यो अस्थिर हुनेछ।

बुद्धिलाई स्थिर र शुद्ध गर्नका निमित्त मनका स्वामी चन्द्र र बुद्धिका स्वामी सूर्यको आराधना गर्नुपर्छ। त्रिकाल संध्या गर्नाले बुद्धि विशुद्ध हुनेछ।

वासना विनाशको हेतु सन्त-धर्म भनेपछि पनि शुकदेवजीलाई लाग्यो परीक्षित्को मनमा अझ पनि सूक्ष्म वासना बाँकी रहेको छ। राजालाई रासलीलामा लैजानु छ। मृत्युको अगावै उनलाई परमानन्द दिनु छ। जबसम्म बुद्धिमा कामवासना छ, श्रीकृष्णाको दर्शन उनलाई हुने छैन। त्यसकारण राजाको मनमा शेष रहेको वासनाको पूर्णतः नाश गर्नका निमित्त शुकदेवजीले सूर्य र चन्द्रवंशको कथा सुनाउनुभयो।

जबसम्म राम आउनहुन्न, तबसम्म कृष्ण पनि आउनुहुन्न। भागवतमा मुख्यकथा श्रीकृष्णाको मात्र छ तर रामको आगमनपछि मात्र श्रीकृष्ण आउनुहुन्छ। जसका घरमा राम आउनुहुन्न उसको रावण ( काम ) मर्दैन। जबसम्म कामरूपी रावण मर्दैन तबसम्म श्रीकृष्ण आउनुहुन्न, यस रावणलाई मार्नु छ। रावण त्यसै वेला मर्दछ जब रामको मर्यादाको पालन हुन्छ। जुन सम्प्रदायमा विश्वास भए पनि जबसम्म रामचन्द्रको मर्यादाको पालन गर्दैनौ तबसम्म आनन्द पाइने छैन।

आरम्भमा रामचन्द्रका चरित्रको वर्णन छ। त्यसपछि दशम स्कन्धको कथा आउनेछ। भागवतको कथाका वक्ता र श्रोतालाई रामका मर्यादाको पालन गर्नुपर्छ। मनुष्यले अलिकति सम्पत्तिमा अलिकति अधिकार पाउनासाथै त्यसले रामको मर्यादालाई बिर्सिदिन्छ। राम नआईकन कृष्ण पनि आउँदैनन्। रामचन्द्रको उत्तम सेवा यही हो उनको मर्यादाको पालन होस्। उनको जस्तै व्यवहार गर। रामजीको भजन गर्नु अर्थात् उनको मर्यादाको पालन गर्नु। उनको मर्यादा आफ्नो जीवनमा लागू गराउनुपर्छ।

रामचन्द्रजीलाई मनमा बसायौ भने, मर्यादा पुरुषोत्तम रामचन्द्रको अनुकरण गऱ्यौ भने भगवान् पाइनुहुनेछ। उहाँका लीलाको अनुकरण गर। उहाँको चरित्र सर्वथा अनुकरणीय छ।

श्रीकृष्णाका सबै लीलाको अनुकरण गर्नुपर्ने होइन। उहाँको चरित्र चिन्तनीय छ। श्रीकृष्णाको लीला चिन्तन गर्नका निमित्त र चिन्तन गरेर तन्मय हुनका निमित्त हो।

रामचन्द्रले जो गर्नुभएको थियो त्यो गर्नु छ तर श्रीकृष्णाले जो भन्नु भएको थियो त्यो गर्नु छ। राम पूर्ण पुरुषोत्तम भएर पनि मनुष्यलाई आदर्शमय देखाउनुहुन्छ।

रामचन्द्रको मातृप्रेम, पितृप्रेम, बन्धुप्रेम, एकपत्नीव्रत आदि सब कुरा जीवनमा लागू गराउन योग्य छन्। रामायणका सबै पात्र आदर्श छन्। दशरथको पुत्र-प्रेम, सीताको पतिभक्ति, लक्ष्मण र भरतको बन्धुप्रेम आदि सब आदर्शमय छन्।

श्रीकृष्ण जो गर्नुहुन्थ्यो, ती सबै कुरा गर्न हामी सक्दैनौं। उहाँले कालीय नागलाई वशमा गरेर त्यसको टाउकोमा नृत्य गर्नुभएको थियो। गोवर्धन पर्वतलाई पनि कान्छी औंलाले उठाउनुभएको थियो। श्रीकृष्णको चरित्रको अनुकरण गर्नु छ भने पूतना-चरित्रबाट गर्नु। पूतनाको सारा विष उहाँले पिइदिनुभएको थियो। विषको पाचन भएपछि अन्य सबै लीलाको अनुकरण गर्नू।

रामचन्द्रले आफ्नो ऐश्वर्य लुकाउनुभएको थियो र मनुष्य-जीवनको नाटक गर्नुभयो।

साधकको आचरण कस्तो हुनुपर्छ त्यो रामचन्द्रजीले देखाउनुभएको छ। साधकको आचरण रामचन्द्र जस्तो हुनुपर्छ, सिद्धपुरुषको आचरण श्रीकृष्णजस्तो हुनुपर्छ।

रघुनाथको अवतार राक्षसहरूको हत्याका निमित्त नभएर मनुष्यलाई मानवधर्म सिकाउनलाई भएको थियो। उहाँले जीवमात्रलाई उपदेश दिनुहुन्थ्यो। उहाँले कुनै पनि मर्यादालाई भङ्ग गर्नुभएन।

रामचन्द्रको लीला सरल छ। उनको बाललीला पनि सरल छ। अर्कातिर श्रीकृष्णको सम्पूर्ण लीला गहन छ।

रामचन्द्रको सरलता तर अन्तिम कथाको मात्र हो। उहाँजस्तो सरल आजसम्म कोही भएको छैन।

अग्निले सीताजीलाई निर्दोष घोषित गरिदिए र पनि धोबीको कटुवचनलाई सुनेर रामचन्द्रले सीतालाई त्याग गरिदिनुभयो। जगत्का समक्ष आदर्श राख्नका निमित्त उहाँ निष्ठुर भइदिनुभयो। उहाँले जगत्लाई यो भन्न खोज्नुभएको थियो आदर्श राजाको आचरण कस्तो हुन सक्छ र कस्तो हुनुपर्छ।

सीताले नारीधर्मको आदर्श प्रस्तुत गरिन्। मेरा पति नै मेरा परमेश्वर हुनुहुन्छ।

राम मर्यादा पुरुषोत्तम र श्रीकृष्ण पुष्टि पुरुषोत्तम। कृष्ण नौनी चोर हुनुहुन्छ अर्थात् मृदु मनका चोर। उहाँ सर्वस्व माग्नुहुन्छ।

राम नाम जस्तो सरल छ त्यस्तै उहाँको काम, उहाँको लीला पनि सरल छ। रामको नाउँमा एउटा अक्षर पनि संयुक्त छैन। कृष्णको नाउँमा एकै अक्षर सरल छैनन् सबै संयुक्ताक्षर मात्र छन्।

श्रीराम दिनको बाह्र बजे आउनुभएको थियो तर श्रीकृष्ण रात्रिको बाह्रबजे। एक मध्याह्नमा आए भने अर्काचाहिं मध्यरात्रिमा। एक राजा दशरथको भव्य राजप्रासादमा अवतरित भएका थिए भने अर्का कंसको कारागृहमा। रामजीलाई चिन्नु, संझनु सरल छ तर कृष्णलाई संझनु बड़ो कठिन छ। तर रामजीको मर्यादालाई जीवनमा लागू गराउने काम सबैभन्दा कठिन छ।

सूक्ष्म वासनाको नाशका निमित्त नवम स्कन्धमा सन्तहरूको चरित्र वर्णन गरिएको छ।

सूर्यवंशको प्रकरणमा रामजीको चरित्र आउँछ।

रामचन्द्र मर्यादा हुनुहुन्छ तर श्रीकृष्ण प्रेम। मर्यादा र प्रेमलाई जीवनमा उतार्न सक्यौ भने सुखी हुनेछौ।

नरसिंह-अवतारको कथामा क्रोधनाशको, बामन-अवतारको कथामा लोभ नाशको र रामचन्द्रको कथामा कामनाशको रीति बताइएको छ। क्रोध, लोभ र कामको नाश हुन्छ अनि श्रीकृष्ण भगवान् प्रकट हुनुहुन्छ।

त्यसो तर भागवतको लक्ष्य कृष्णलीलाको कथा मात्र हो, तैपनि प्रथम स्कन्धमा कृष्णलीलाको वर्णन किन भएन? यसको कारण यो हो क्रोध, लोभ र काम आदिको नाश भएपछि मात्र परमात्मा कृष्ण भेटिनुहुन्छ।

अष्टम स्कन्धको समाप्ति-अंशमा सत्यव्रत मनु महाराजको र मत्स्यावतारको कथा भनिएको छ।

राजा परीक्षित्‌ले भने—'मलाई यस सत्यव्रत मनु वंशको कथा सुनाउनुहोस्।'

शुकदेवजी वर्णन गर्नुहुन्छ—राजन्! यस कल्पमा राजर्षि सत्यव्रत वैवश्वत मनु बन्नुभएको थियो। विवश्वनको घरमा वैवश्वत भएका थिए। मनु वैवश्वत सूर्यवंशका आदिप्रवर्त्तक हुन्। उनको विवाह श्रद्धा नामक स्त्रीका साथमा भएको थियो। उनका दस सन्तान भएका थिए। उनका नाउँ हुन्—इक्ष्वाकु, नृग, शर्याति, दिष्टि, धृष्ट, करुष, नरिष्यन्त, पृषध, नभग र कवि।

दिष्टि वंशमा मरुत् नामक चक्रवर्ती राजा भएका थिए। मरुत्का गुरु थिए वृहस्पति। उनी इन्द्रका पनि गुरु थिए। मरुत् राजालाई यज्ञ गर्नुपरेको थियो। वृहस्पतिले आउन मान्नुभएन। हरेक काममा पहिले कुलगुरुको पूजा तर गर्नैपर्ने हो। अब कसो गर्ने?

एक पटक मरुत्‌ले बाटामा नारदजीलाई भेटे तब उनले नारदजीसँग आफूलाई अप्ठ्यारो परेको सुनाए। तब नारदजीले भन्नुभयो—'बृहस्पतिका साना भाइ संवर्त्तलाई बोलाउनुहोस्। उनी पनि गुरुसमान हुन्। यज्ञ तर गर्नैपर्छ।'

राजा—संवर्त्त तर योगी हुन् र उनको केही ठेगाना पनि छैन।

नारदजी—उनको ठेगाना म भन्ने छु, तर मेरो नाउँ भने नभन्नुहोला।

कैयौं पटक ज्ञानी पुरुष पनि संसारसँग डराउँछन्। संसारका स्त्री-पुरुषहरूको सङ्ग हुनाले पनि ब्रह्माकार वृत्तिको भङ्ग हुन्छ।

संवर्त्तयोगीको नियम थियो चौबीस घण्टामा एक पटक उनी काशी आउने गर्थे। महापुरुष भजनमा पनि नियमको पालन गर्दछन्। संवर्त्त काशी विश्वनाथको दर्शन गर्नलाई आउँथे, तर बाटामा यदि मुर्दाको दर्शन भयो भने त्यसैलाई शिव रूप मानेर नमस्कार गरेर फर्किन्थे।

महाभारतको अनुशासन पर्वमा विस्तारसँग यस कथाको वर्णन पाइन्छ।

मरुत् राजा मुर्दा लिएर राती बाटामा बसे। एउटा बहुलाहाजस्तो मानिस आयो। उसले मुर्दालाई देख्यो अनि वन्दना गरेर फर्कन थाल्यो। मरुत् राजालाई विश्वास भयो पक्का यिनी संवर्त्तयोगी हुन्। राजाले उनको चरण समातेर प्रणाम गरे। संवर्त्तले भने—'म अज्ञानी छु, मलाई ज्ञान दिनुहोस्।'

मरुत्—'तपाईं संवर्त्त हुनुहुन्छ, मेरा गुरु हुनुहुन्छ। तपाईं गुरु बृहस्पतिका कान्छा भाइ हुनुहुन्छ। बृहस्पति देवहरूका गुरु बनिसक्नु भएको छ र उहाँले मेरो घर आउन छोड़िदिनुभएको छ। म यज्ञ गर्न चाहन्छु तर कसैले पनि मलाई यज्ञ गराउँदैनन्।'

संवर्त्त—'म यज्ञ चाहिँ गराउँला तर तिम्रो ऐश्वर्य देखेर बृहस्पति तिमीलाई भन्लान् तिम्रो यज्ञ गराउन म तयार छु र म तिम्रो गुरु हुन चाहन्छु। यदि त्यस्तो समय आयो र तिमीले मेरो त्याग गर्‍यौ भने म तिमीलाई भस्मीभूत गरिदिनेछु।'

राजाले संवर्त्तको शर्त मञ्जूर गरे। संवर्त्तले राजालाई मन्त्र-दीक्षा दिए। यज्ञ शुरू हुन थाल्यो। यज्ञका सबै पात्र सुवर्णका थिए। राजाको वैभव र यज्ञको तयारी देखेर बृहस्पति लोभिए। उनले राजालाई समाचार पठाए—'तिम्रो आचार्य म हुँ। म यज्ञ गराउन तयार छु।' बृहस्पतिले इन्द्रलाई भने र इन्द्रले अग्निद्वारा समाचार पठाए 'बृहस्पतिलाई गुरु बनाइयोस्। यसो नभएका खण्डमा इन्द्रले यज्ञमा बाधा उपस्थित गर्नेछन्।' अग्निले संवर्त्तलाई भने—'मेरो आज्ञाको उल्लङ्घन भने म तिमीलाई भस्मीभूत गरिदिनेछु।'

जुन देवलाई संवर्त्त योगी आज्ञा गर्नुहुन्छ, त्यो उहाँ उपस्थित हुन्छ र यो देवले प्रत्यक्ष हविर्भाग ग्रहण गर्दछ। जस्तो यज्ञ मरुत्को भएको थियो त्यस्तो यज्ञ न कहिले कसैको भएको थियो न कहिल्यै होला। मरुत्को यस यज्ञको वर्णन ऋग्वेदमा पनि छ। भागवतमा यो संक्षिप्तमा मात्र वर्णन छ।

मनुपुत्र नभगका घर नाभाग भए र भगवान् शङ्करका कृपाले नाभागको घरमा भक्त अम्बरीषको जन्म भयो। अम्बरीष मर्यादा—भक्तिका आचार्य हुन्। कांकरोलीमा राज भएका द्वारिकानाथ राजा अम्बरीषका सेव्य भगवान् हुनुहुन्छ। यी भगवान् सधै बाउन्न मनभोग ग्रहण गर्थे। कति सामग्री जम्मा गरिँदो हो।

अम्बरीषको अर्थ पनि हेर्नुहोस्। अम्बर अर्थात् आकाश र ईश अर्थात् ईश्वर। आकाशभित्र पनि छ र बाहिर पनि, जसको भित्र-बाहिर सबैतर्फ ईश्वर छन्, ती मात्र अम्बरीष हुन्। चारैतर्फ जसलाई परमात्मा देखिन्छ त्यही अम्बरीष हो।

ज्ञानमार्गमा इन्द्रियरूपी द्वार बन्द राख्नुपर्छ। भक्तिमार्गमा सबै इन्द्रियहरू भगवान्को मार्गमा लगाउनुपर्छ। भगवान्को चरणमा भक्त आफ्ना इन्द्रियहरू अर्पित गरिदिन्छ। भक्त आफ्ना सम्पूर्ण इन्द्रियहरूलाई भगवान्का साथ विवाह गरिदिन्छ। भगवान् हृषीकेश हुनुहुन्छ इन्द्रियहरूका स्वामी।

राजा अम्बरीष महान् भक्त थिए। उनको मन भगवान्का चरणमा, वाणी भगवद्‌गुण वर्णनमा,हात हरिमन्दिरको सफाइमा, गोड़ा प्रभुको क्षेत्रादिको पदयात्रामा, कान भगवान्का उत्तम कथाहरूका श्रवणमा तथा दुवै नेत्र मुकुन्द भगवान्का मूर्तिको दर्शनमा व्यस्त रहन्थे। शिरले उनी भगवान् श्रीकृष्णलाई वन्दना गरिरहन्थे।

भगवान्को सेवामा जो व्यक्ति आफ्नो शरीर लगाइदिन्छ, त्यसको देहाभिमान कम हुँदै जान्छ।

भक्तिमार्गमा धन या तन होइन, मन मात्र प्रधान हो। जबदेखि भक्तमा धनको प्राधान्य भएको छ तबदेखि भक्ति छिन्नभिन्न भइरहेछ।

राजा अम्बरीष त्यसैले सर्वपथम भन्नुहुन्छ—मेरो मन सदा कृष्णको चरणकमलमा रहिरहोस्—

**तस्मात् कारुण्यभावेन रक्ष रक्ष महेश्वर।**

सेवामा धन होइन, मन मात्र मुख्य हो। सेवाको अर्थ हो सेव्य—श्रीकृष्णमा मनलाई गाँसिराख्नु। सेवाको सम्बन्ध मनसँग छ। शरीरद्वारा जो काम गरिन्छ र त्यसमा यदि मनको सहयोग छैन भने त्यो व्यर्थ हुन्छ।

सेवाको क्रम अम्बरीषले बताएका छन्। त्यसले जगत् र ईश्वरका साथ एकसाथ सम्बन्ध राख्न सक्दैन। मनलाई मनायौ भने त्यो मान्दछ, कसैको उपदेशले होइन। तिमीले स्वयं आफ्नो मनलाई संझायौ भने त्यसको असर पर्ला। आफ्नो मनलाई अरू कसैले कसरी सम्झाउन सक्दछ?

राजा अम्बरीषका इष्टदेव द्वारिकानाथ हुनुहुन्छ। राजा भएर पनि स्वंयं सेवा-पूजा गर्नुहुन्छ। घरमा प्रशस्त सेवक भएर पनि उहाँ भन्नुहुन्छ—'म भगवान्को दास हुँ। उहाँको सेवा स्वयं मैले गर्नुपर्छ।'

दास्यभावमा सेवा मुख्य हो।

त्यसैको पेट भरिन्छ जसले स्वयं भोजन गर्छ। जसले भजन र सेवा स्वयं गर्दछ, त्यसले फल पाउँछ। चारवटा काम स्वयं आफूले गर्नुपर्छ—भोजन, विवाह, भगवान्को सेवा र मृत्यु।

अम्बरीष चक्रवर्ती राजा थिए तर पनि उनी प्रभुसेवा स्वयं गर्थे। भगवान्का मन्दिरको सफाई पनि गर्थे। त्यसो गर्नाले वैष्णवहरूको चरणरजको लाभ पाइन्छ। भागवतमा लेखिएको छ अम्बरीष भगवान्को दर्शन गर्नलाई खालीखुट्टा हिँड़ेर जान्थे। हामीले अम्बरीषको पूरापूरा अनुकरण गर्न नसके पनि उनको केही न केही अनुकरण गर्नैपर्छ।

एक पटक अम्बरीषले भगवान् श्रीकृष्णको आराधना निमित्त एक वर्षसम्म एकादशी व्रत लिएका थिए।

एकादशी व्रत सबै व्रतहरूमा श्रेष्ठ छ। यसका दुइ प्रकार छन्—निषेधव्रत र परिपालन व्रत। अन्नाहारबाट दोष नहोस् यसका निमित्त निषेधव्रत लिइन्छ। भगवान्को आराधना निमित्त गरिएको व्रत परिपालन व्रत सुखदायी हुन्छ। हुनसक्छ भने हविष्यान्नको भोजन गरेर दूध र चामलजस्तो सात्त्विक आहार गर्नु। यस दिन अजीर्ण हुने किसिमबाट भोजन नगर्नु। एकादशीमा यदि सकिन्छ भने निर्जला मात्र गर्नु। यस्तो हुन सक्दैन भने दूध या ऋतुफलको संयमपूर्वक आहार गर्नू। यसो गर्नाले मात्र यस व्रतको फल पाइन्छ अन्यथा पाइँदैन।

व्रत गर्ने विचार दृढ़ भयो भने भगवान्ले शक्ति दिनुहुनेछ। एकादशी गर्ने सङ्कल्प गऱ्यौ भने प्रभुले सहायता गर्नुहुनेछ। सत्यनारायणको कथामा एउटा दाउरेको कथा आउँछ, जसले आफूसँग पैसा नभएर पनि सत्यनारायणको व्रत लियो र परमात्माले उसको सङ्कल्प परिपूर्ण गरिदिनुभयो।

परमात्मा सत्कर्मका सदा सहायक हुनुहुन्छ। मानिस भन्छन् एकादशी के आयो, तिहारको समाचार ल्यायो। यस्तो कदापि नसोच। एकादशीका दिन अन्न पकाउनु त के उसको दर्शनसम्म नगर्नू। यस दिनमा अन्नमा सबै पापको वास हुन्छ। तिनीहरू सबै अन्न नामको खेदो गर्न पुग्दछन्। एकादशीका दिन पानसुपारी पनि खानु हुन्न। दिउँसो नसुत पनि। रातमा एक-दुइ घण्टा बढ़ी भजन गर। यस दिन पुंढरपुरमा विट्ठलनाथजी पनि सुत्नुहुन्न।

पाँच कर्मेन्द्रिय, पाँच ज्ञानेन्द्रिय र एकमन—यी सबैलाई प्रभुमा लगाइराख्नु एकादशी हो। यद्यपि एकादशीमा हिजोआज मानिसहरू एघारै रसको भोग लगाउँछन् र यसलाई सानो-सानो तिहार बनाइदिन्छन्, तर यसो गर्नु हुँदैन। यस्तो एकादशीले कुनै फल पाईंदैन।

उप-समीप, वास—रहनु। उपवासको अर्थ हो प्रभुको समीपमा बस्नु र त्यही सच्चा एकादशी हो।

द्वादशीका दिन एकै पटक भोजन गर। सुपात्र ब्राह्मणलाई खानापिना गराएपछि आफूले प्रसाद ग्रहण गर्नू। द्वादशीका दिन दुइ पटक भोजन गर्नाले एकादशी-व्रत भङ्ग हुन्छ। एकादशी व्रत विधिपूर्वक गर। यदि विधिपूर्वक गर्न सक्दैनौ भने मर्यादानुसार अन्नाहारलाई त्यागेर फलाहार गर। यो व्रत आरोग्यका निम्ति आवश्यक छ। मानिस आजकलका डाक्टरहरूको विश्वास गर्छन्। डाक्टरले टाइफाइड भनेर एकाईस दिन अनशन गरायो भने मानिस गर्छन्, तर एकादशीको एक दिन मात्र व्रत गर भन्दा गर्दैनन्। एकादशी नगर्नेलाई यस्तो एकसाथै कैयौं एकादशीहरू अनिवार्य गर्नुपर्दछ।

राजा अम्बरीषले विधिपूर्वक एकादशीको व्रत गरे र व्रतको पूर्णाहुतिका समयमा यमुना-किनार आए। त्यहाँ उनले स्नान गरी ब्राह्मणहरूलाई पूजा गरेर व्रतको पूर्णाहुति गर्ने तयारी हुन थाल्यो। यत्तिकैमा त्यहाँ दुर्वासा अतिथि बनेर आए। भगवान्लाई भोग लागिसकेको थियो। राजाले मुनिको स्वागत गर्दै भने, पाल्नुहोस्, महाराज ! मकहाँ प्रसाद ग्रहण गर्नुहोस्। दुर्वासाले भने—'म मध्याह्न कर्म आदिबाट निवृत्त भएर आउने छु।'

ईश्वरको धर्ममर्यादा नाघ्नुजस्तो कुनै अरू पाप छैन। ईश्वरको धर्ममर्यादा उल्लङ्घन गऱ्यौ भने भक्ति असफल हुने छ। ईश्वरका साथ तन्मयता भएपछि देहभान विस्मृत भै यदि धर्म छुट्छ भने कुनै आपत्ति छैन। तर जानी-बुझीकन कहिल्यै धर्मका मर्यादाको उल्लङ्घन हुनुहँदैन।

यता राजालाई त्रयोदशीको पहिले व्रत छोड़ेर प्रसाद लिनु छ र उता दुर्वासा सन्ध्यापूजामा यस्तो लीन भए उनलाई समयको ख्यालै भएन।

राजालाई चिन्ता भइरहेछ। ब्राह्मणहरूलाई भोजनका निमित्त निम्ता गएको छ। उनलाई भोजन गराउनुभन्दा आघिबाट भोजन गर्न सकिँदैन। मैले प्रसाद ग्रहण गरें भने ब्राह्मणको मर्यादा भङ्ग हुन्छ र ग्रहण नगरूँ भने त्रयोदशीको आरम्भ भएपछि व्रतभङ्ग हुनेछ। द्वादशीको समाप्तिमा केही पल मात्र शेष छ। ब्राह्मणहरूको आज्ञा पाएर राजाले प्रसाद लिए।

राजाले दुर्वासाको स्वागत गरे। दुर्वासाले अनुमान गरेर थाहा पाइसके राजाले प्रसाद लिइसकेका छन्। उनले राजालाई भने—राजन् तिमीले मलाई निम्ता दियौ तर भोजन गरेर ठीक गरेनौ। म अतिथि मैलाई भोकै राखेर तिमीले भोजन गर्‍यौ। यो कस्तो हो तिम्रो विष्णु-भक्ति।

राजा—मैले तर जलपानमात्र गरेको छु, महाराज।

तर दुर्वासा कहाँ सुन्नेवाला थिए? उनले क्रोधवश राजाको एउटै कुरा पनि सुनेनन्।

जबसम्म दुर्वासना छ, तबसम्म क्रोध पनि शेष रहन्छ।

दुर्वासाले आफ्नो शिरको केशबाट कृत्या उत्पन्न गरे र त्यसलाई 'राजा मार' भनी आज्ञा दिए।

कृत्या अम्बरीषलाई मार्न भनी हिँड़ी तब अम्बरीषको प्रार्थनाबाट भगवान्‌ले सुदर्शन चक्र छोड़िदिनुभयो र कृत्याको हत्या भयो। अब त्यो सुदर्शन चक्र दुर्वासाका पछि-पछि दौड़िन थाल्यो, मुनि एक लोकबाट अर्को लोक भाग्न थाले, तर चक्र पछि लाग्न छोड़ेन। दुर्वासाको रक्षा कसैले पनि गर्न सकेन। अन्तमा उनी बैकुण्ठमा आएर नारायणसँग प्रार्थना गर्न थाले—भगवान् मेरो रक्षा गर्नुहोस्। नारायणले स्वागत गर्नुभयो। मुनिले भन्नुभयो—मेरो पछि तपाईंको चक्र दौड़िरहेछ, मेरो रक्षा गर्नुहोस्।

भगवान्‌ले मुनिलाई भन्नुभयो—जो वैष्णव अनन्य भावले मेरो सेवा गरेर मलाई उसको सर्वस्व अर्पण गर्छ त्यसलाई म पनि आफ्नो सर्वस्व दान गर्दछु। म भक्ताधीन छु। मेरो चक्र यस समय राजा अम्बरीषको आज्ञाको अधीन छ।

अहं भक्तपराधीनो ह्यस्वतंत्र इव द्विज।
साधुभिर्ग्रस्त हृदयो भक्तैर्मत्कजन प्रियः॥

दुर्वासाजी, म तर पूर्णतः भक्ताधीन छु, म लेशमात्र पनि स्वतन्त्र छैन। मेरा सीधा-साधा र सरल भक्तहरूले मेरो हृदयलाई आफ्नो वशमा गरिसकेका छन्। भक्तजन मसङ्ग प्रेम गर्छन्, म भक्तजनसङ्ग।

भक्तका अगाड़ि न म आफ्नो वास्ता गर्छु न लक्ष्मीकै। भक्त मेरा निमित्त सबै कुरा छोड़ेर मेरो शरणमा आउँछन्। मेरा निमित्त उनी आफ्नो सर्वस्वको त्याग गर्छन्। मलाई छोड़ेर उनलाई अरू कुनै आश्रय छैन। यस्ता भक्तहरूलाई त्याग्ने विचार मात्र पनि म कसरी गरूँ?

भक्तहरूले मेरो हृदयलाई वशमा पारेका छन्। ती मलाई अत्यन्त प्रिय छन्। मेरो सिवाय अन्य कुनै पनि प्रकारको मुक्तिको तिनीहरू कहिल्यै इच्छासम्म गर्दैनन्। म भक्तहरूको हृदय हुँ र भक्तजन मेरा हृदय हुन्।

भगवान् भन्नुहुन्छ—

ये दारागारपुत्राप्तान् प्राणान् वित्तमिमं परम्।
हित्वा मां शरणं याताः कथं तां स्त्यक्तुमुत्सहे॥

(भा० ९-४-६५)

आफ्नी पत्नी, पुत्र, घर, स्वजन, धन, इहलोक, परलोक, प्राण आदि सबै कुराको त्याग गरेर जो मेरा शरणमा आएका छन्। उनलाई म कसरी त्याग गरूँ ?

मयि निर्बद्ध हृदयाः साधवः समदर्शनाः।
वशीकुर्वन्ति मां भक्त्याः सस्त्रियः सत्पतिं यथा॥

भक्तले मलाई भक्तिद्वारा वशमा गर्छन्।

साधवो हृदयं मह्यं साधूनां हृदयं त्वहम्।

मेरा भक्तजन मेरा हृदय हुन् र म उनको हृदय हुँ।

भगवान् भन्नुहुन्छ—'तप र विद्या अति उत्तम हुन्। तैपनि त्यसलाई विनयविवेकको सहारा भएन भने व्यर्थ हुन्छ। तपाईं तपस्वी हुनुहुन्छ र तपाईंसँग प्रबल शक्ति पनि छ तर तपाईंले त्यसको दुरुपयोग गर्नुभयो। तपाईं स्वयं अलिकति विचार गर्नुहोस्, के अम्बरीषले केही अपराध गरेका थिए ? उनको केही भूल थियो ? उनले व्रतको पालनका निमित्त जलपान मात्र गरेका थिए र पनि तपाईं रिसाउनुभयो। तपाईं उसैकहाँ जानुहोस्, ऊसँग प्रार्थना गर्नुहोस् र क्षमा माग्नुहोस्। यदि भक्तराज अम्बरीषले क्षमा गरिदिन्छन् भने यस सुदर्शन चक्रको गति रोकिने छ।'

दुर्वासाले अम्बरीषकहाँ आएर क्षमायाचनाका निमित्त उनलाई प्रणाम गर्न लागेका थिए तब राजाले भने—'होइन, होइन, महाराज ! तपाईं वन्दना गर्नुहुने, यो शोभास्पद भएन। प्रणाम मैले पो तपाईंलाई गर्नुपर्ने थियो।'

राजाले सुदर्शन चक्रसँग प्रार्थना गरे—'शान्त भइजाऊ। यदि आजका दिनसम्म मैले कहिल्यै कुनै दान, पुण्य, यज्ञ, सेवा गरेको रहेछु भने ती सबैको पुण्यले तिम्रो वेग रोकियोस्।' सुदर्शन चक्र शान्त भएर फर्कियो।

अम्बरीषको कथामा पनि एक रहस्य छ। अम्बरीष शुद्ध भक्तिस्वरूप हुन्। त्यसकारण चरित्रको आरम्भमा सबै इन्द्रियहरूको भक्तिवर्णन गरिएको छ। अम्बरीषको चरित्र भक्तिको चरित्र हो।

भक्तिमार्गमा दुर्वासा अर्थात् दुर्वासना बाधा उपस्थित गर्दछ। मै ठूलो हुँ र अरू बाँकी सबै साना हुन्, छोटा हुन्। यस्तो दुर्भावना, दुर्वासना हो। सुखलाई ममात्र भोगूँ। यस्तो भावना पनि दुर्वासना हो। अरूलाई दुःखी गर्ने दुर्वासना भक्तिमा बाधारूप हुन जान्छ।

भक्ति गर्दागर्दै पनि यदि अहङ्कार आयो भने मान दुर्वासना आइपुग्यो। दुर्वासनाबाट अभिमान जाग्दछ र अभिमानबाट क्रोध। क्रोधले कृत्या कर्कशा वाणीलाई उत्पन्न गर्दछ। कृत्या—कर्कशा वाणी भक्तिलाई मार्ने तयारी गर्छे, तर ज्ञानरूपी सुदर्शन चक्र भक्तिलाई बचाउन आइपुग्छ। ज्ञानले कृत्यालाई विनष्ट गरिदिन्छ। यदि भक्ति शुद्ध छ भने कर्कशा वाणीले उसको केही गर्न सक्तैन। भक्तिको रक्षा सुदर्शन चक्र अर्थात् ज्ञानले गर्दछ।

सबैमा श्रीकृष्णको दर्शन हुनु सुदर्शन हो। भक्तिको नजीक जब कृत्या ( कर्कशा वाणी ) आउँदछे तब वैष्णव उसको ज्ञानलाई दर्शन ( सुदर्शन ) चक्रद्वारा नाश गर्छन्। मन यदि निन्दाबाट प्रभावित भयो भने त्यो सच्चा वैष्णव होइन। कर्कश वाणीलाई सहन गऱ्यौं भने सुखी हुने छौं। कर्कश वाणी बोल्ने ज्यादा दुःखी हुन्छ।

भक्ति शुद्ध छ भने ज्ञान र वैराग्य दगुर्दै आउनेछन्। जसरी सुदर्शन आएथ्यो। ज्ञानवैराग्यले कृत्या ( कर्कशा वाणी ) र निन्दालाई नाश गर्नेछन्।

दुर्वासाले राजा अम्बरीषलाई कटु वचन सुनाए र पनि उनी क्रोधित भएनन्। जसका शिरमा भगवान् राज हुन्छ, तिनै अम्बरीष हुन्। जब दुर्वासाले प्रशंसा गरे तब पनि राजालाई त्यस्तो केही प्रसन्नता भएको थिएन अर्थात् उनी दुवै स्थितिमा एक समान रहेका थिए।

सच्चा भक्तले निन्दा र स्तुतिलाई एकसमान मान्दछन्। 'तुल्य निन्दा स्तुतिः।' यदि भक्तलाई कसैले केही कर्कश कुरा भन्दियो भने, उसको निन्दा गरिदियो भने पनि उसमा अम्बरीषको जस्तो असर हुँदैन।

भक्ति गरे अम्बरीषको जस्तो गर। अम्बरीषको भक्ति यस्तो सच्चा र बलशाली थियो भगवान्ले पनि भन्नुपरेको थियो 'अहं भक्तपराधीनः।'

सबैका प्रति समभाव र समता राख्ने जो हो त्यही ज्ञानी हो। सबैमा ईश्वर छ भन्ने ज्ञान हुनु पनि सच्चा ज्ञान हो।

ईश्वर स्वरूपको ज्ञानका विना न भक्ति हुन्छ र न भक्ति दृढ़ हुन्छ। त्यसकारण भक्तिमा ज्ञान पनि आवश्यक छ।

विषयका प्रति जबसम्म वैराग्य उत्पन्न हुँदैन तबसम्म भक्ति हुन सक्दैन। भक्तिका पहिले ज्ञानवैराग्य आउँछ। जहाँ भक्ति छ त्यहाँ ज्ञानरूपी सुदर्शन चक्र रक्षा गर्छ।

भक्ति सिद्ध भयो भने सबै शास्त्रहरूको ज्ञान प्राप्त भयो। नामको महिमा पनि बहुतै ठूलो छ।

नाम लिया उन्होंने जान लिया सकल शास्त्रका भेद।
विना नाम नरकमें गया पढ़-पढ़ चारों वेद॥

अम्बरीषले दुर्वासालाई प्रेमसाथ भोजन गराएर क्षमा मागे। अम्बरीष सच्चा वैष्णव थिए। न उनी दुर्वासाको क्रोधबाट व्यथित भए र न आफ्नो प्रशंसाबाट खुशी भए।

सच्चा वैष्णवले कहिले पनि अर्काको दोष देख्दैनन्, बरु आफ्नै दोष बारम्बार देख्छन्।

अम्बरीषले माने जीत उनको नभै ईश्वरको भयो। जसले आफ्नो जीत मान्दछ त्यसको हार अवश्य हुन्छ।

अलिकति विचार गरिहेर। यी राजाहरूको इतिहास भन्नुपर्ने काम शुकदेवजीलाई किन परेको थियो ? तर अम्बरीषजस्ता राजा शुकदेवजीलाई बहुतै प्रिय छन्। राजा अम्बरीषलाई धन्य छ। उनी घरमा पनि संन्यासी जस्तो जीवन बिताउँछन्। जबकि म ( शुकदेवजी ) वनवासी भएपछि संन्यासी जस्तो जीवन बिताइरहेछु।

शुकदेवजी सोच्नुहुन्थ्यो सबै कुरा त्यागेर वनवासी बनेर संन्यासी भएँ। यता यी अम्बरीष चाहिँ राजप्रसादमा, वैभवयुक्त वातावरणमा रानीहरूका साथ बसेर पनि संन्यासी जस्तो जीवन बिताइरहेछन्। म सबै कुरा छोड़ेर प्रभुका पछि दौड़िरहेछु र यता अम्बरीष घरमा बसेर पनि द्वारिकाधीशका साथ छन्। निस्सन्देह उनी मभन्दा श्रेष्ठ छन्। यही कारण हो मैले यिनको कथा सुनाएको।

ज्ञानले प्रभुलाई परतन्त्र गर्न सक्दैन, बाँध्न सक्दैन। भक्तिले भगवान्लाई बाँध्दछ, परतन्त्र गर्दछ। ज्ञानी महात्मा ब्रह्मानुभव गर्न सक्दछन् तर भगवान्लाई स्वाधीन गर्न सक्दैनन्। पराश्रयी गर्न सक्दैनन्, बाँध्न सक्दैनन्।

भक्ति माता हुन् र ज्ञान वैराग्य सन्तान। जहाँ शुद्ध भक्ति छ, त्यहाँ ज्ञान वैराग्य दौड़ेर आइपुग्छन्।

मनु महाराजका पुत्र भए—इक्ष्वाकु। त्यस वंशमा मान्धाता भए। यी राजा मान्धाताका पचास कन्याहरूको विवाह सौभरी ऋषिका साथ भयो।

सौभरी तपश्चर्याद्वारा सिद्ध बने। त्यहाँ दर्शनार्थी जनताको भीड़ लागिरहन्थ्यो। भीड़ जम्मा भइदिँदा भजनमा भङ्ग हुनु स्वाभाविक छ। सौभरीले सोच-विचार गरिकन यमुनाजीमा प्रवेश गरे र त्यहाँ जलमा तप गर्न थाले।

सौभरीको मनमा एकपटक विचार आयो—परमात्माको मायाले मलाई बिलकुल प्रभावित गर्न सक्तैन। त्यसकारण भगवान्ले मायाको रचना गर्नुभयो। ऋषिले बारंबार एक जोड़ी माछाको प्रेम-लीला देखे र उनको मनमा काम जाग्यो र त्यस्तै किसिमबाट सुख भोग्ने इच्छा गर्न थाले। पचासी वर्षको वृद्धावस्थामा पनि विवाह गर्न सोचे र राजा मान्धाताकहाँ गए।

राजाले सोचे यी बृद्ध मुनिसङ्ग कुनै कन्याले विवाह गरी भने ऊ जीवनभर दुःखी हुन्छे र विवाह भएन भने उनले मलाई श्राप देलान्। फेरि उनले मुनिलाई भने—तपाईं राजमहलमा जानोस् र जुन कन्या तपाईंलाई मन पर्छ उसैसङ्ग तपाईंको विवाह हुनेछ। भगवान् शङ्कराचार्यले भनेको छ—

अङ्गं गलितं पलितं मुडं दशनविहीनं जातं तुंडम्।
वृद्धोयाति गृहित्वादण्डं तदपी न मुंचति आशा पिण्डम्।
भज गोविन्दं भज गोविन्दं गोविन्दं भज मूढ़मते॥

ऋषि सौभरीको मनमा विवाह भावना जाग्यो तब उनले स्वरूप बदलिएर गए। उनी सिद्ध थिए, सुन्दर स्वरूप धारण गरेर राजमहलमा पुगे। उनको स्वरूप देखेर उनीसँग विवाह गर्नका निमित्त पचासै राज कन्याहरू आपसमा झगड़ा गर्न थाले। यस्तो हाल देखेर राजाले सबै कन्याहरूको विवाह यिनै ऋषिसँग गरिदिए। सौभरी सुखोपभोग गर्न थाले।

तर अगाड़ि गएर ऋषिको विवेक-बुद्धि जाग्रत भएर आयो, उनी पछुताउन थाले। हरे ! मैले यस्तो कस्तो अनर्थ गरें ? म थिएँ तपस्वी, तर मत्स्य दम्पत्तीको प्रेमकेलि देखेर मति भ्रष्ट भयो, विलासी बनें।

जसले साधना गर्न खोज्छ, जो यसै जन्ममा साध्यको प्राप्ति गर्न चाहन्छ, त्यसले कामसुखको भोगीको सङ्ग गर्नु हुँदैन। कामसुखको भोक्ताको सङ्ग पनि कुसङ्ग नै हो। स्त्रीसङ्गको सङ्ग पनि कुसङ्ग हो। यो स्त्री-पुरुषसँगको सम्बन्धको होइन, कामको निन्दा हो।

सँगको रँगको यो घटना हो। त्यसकारण मोक्षको इच्छा गर्नेले मैथुनधर्मी स्त्री-पुरुषहरूको सँगीको पनि सँग नगरोस्—

मुमुक्षुः मिथुनव्रतिनां सँगं त्यजेत्।

नारी र नारीको सँगीको सँग पनि साधकले गर्नुहुन्न।

स्त्रीणां स्त्रीसंगिनां संगं त्यजेत्।

सौभरी ऋषिले जगत्लाई उपदेश दिएको छ—कामी र विलासी मानिहरूका बीच बसेर ब्रह्मचारी हुन सक्नु बड़ो कठिन छ। मानवका साथ बसेर मानव बन्न सरल छ। सत्संग गर्न नसकेमा केही आपत्ति छैन, तर कामीको संगत कहिल्यै नगर्नु।

यसपछि सगर नामक चक्रवर्ती सम्राट् भए, उनको यज्ञको घोड़ा इन्द्रले लुकाइदिए तब उनका पुत्र घोड़ाको खोजीमा निस्किए। उनले आफ्नो घोड़ा कपिलमुनिको आश्रममा देखे र भन्ठाने यसै ऋषिले घोड़ा चोरेको हो। पिट यसलाई, यही चोर हो भन्दै ती ऋषितर्फ बढ्दै गइरहेका थिए तब सबै कपिलको तेजोग्निमा सल्केर भस्मीभूत भए।

अब तिनको खोजीमा सगरका नाति अंशुमान निस्किए। उनले कपिल भगवान्‌को स्तुति गरे तब मुनिले उनलाई भने—'यो घोड़ा तिम्रै पितामहको यज्ञको हो। लैजाऊ यसलाई।'

अंशुमानले ऋषिसँग आफ्ना काकाहरूको उद्धारको उपाय सोधे। ऋषिले भने—'यिनको उद्धार गंगाजलले मात्र हुन सक्छ। यदि गंगाजी यहाँ आउनुभयो भने तब हुन सक्छ, अरू कुनै उपाय छैन।'

गङ्गालाई प्रसन्न गर्नका निमित्त अंशुमानले, उनको पुत्र दिलीपले र दिलीपको पुत्र भगीरथले तप गरे। तीनै पुरुषहरूका पुण्य एकत्र भयो अनि गङ्गावतरण भयो।

तीन-चार जन्मको तप, पुण्य एकत्र भएपछि ज्ञानगङ्गाको अवतरण हुन्छ।

भगीरथ राजाले भगवान् शङ्करको प्रार्थना गरे तब गङ्गाको धारालाई शिरमा थाम्नलाई तयार हुनुभयो। शिवजीले आफ्नो जटामा गङ्गालाई ओऱ्हाल्नु भयो र त्यसपछि पृथ्वीमा बगिन्। गङ्गाजी अनेक स्थानहरूलाई पवित्र गर्दै पातालमा गइन्। गङ्गाजीको स्पर्श भएपछि त्यो भस्मबाट दिव्य पुरुष उत्पन्न भए। यसप्रकार सगरका पुत्रहरूको सद्‌गति प्राप्त भयो।

राजन् ! गङ्गाजलको स्पर्श यदि मृत्युका पश्चात् पनि मुक्ति दिन्छ भने तब जिउँदै त्यसको पान गर्नाले सद्‌गति पाउनु कुनै आश्चर्यको कुरा होइन।

जीवलाई शिव हुनु छ। यदि ज्ञानगङ्गालाई उसले आफ्नो शिरमा धारण गऱ्यो भने शिव बन्न सकिन्छ। गङ्गा ज्ञानकै स्वरूप हो।

गङ्गाजीलाई भगीरथ राजाले अवतरित गरे। त्यसकारण उनको एउटा नाउँ भागीरथी पनि भयो। गङ्गाजी नारायणजीका चरणबाट प्रकट भएकी छन्। गङ्गाजी नारायणका चरणमा छिन् तर शिवजीको शिरमा पनि छिन्।

अगाड़ि गएर यस देशमा एउटा खट्वाङ्ग राजा भए। उनले देवहरूका तर्फबाट थाहा पाए दुइ घड़ीपछि उनको मृत्यु हुनेछ। उनले सबै कुरा छोड़ेर भगवान्‌सँग मन जोड़े। परमात्माको ध्यान गर्दै उनले देहत्याग गरे। उनले सद्‌गति पाए। यसप्रकार दुइ घड़ी ( उनन्चालीस मिनेट ) मात्र खट्वाङ्गले आत्मकल्याग गरे।

खट्वाङ्गपछि दीर्घबाहु राजा भए र त्यसपछि भए रघु। रघु महाज्ञानी र उदार थिए। अन्तमा उनले सर्वस्वको हकमा धोतीसम्मलाई त्यागेर हिंड़े। उनको बड़ो कीर्ति फैलियो, यसै कारणले सूर्यवंशको नाउँ भयो रघुवंश। रघु राजाले कैयौं यज्ञयाग पनि गरेका थिए।

जसले भगवान्‌को वंश सम्बन्धलाई सँभाल्दछ, उसको आफ्नो वंशको कहिले पनि नाश हुँदैन। राजा रघुका घर अज नाउँ गरेका राजा भए र अजका पछि दशरथ। दशरथ अयोध्यामा राज्य गर्थे। उनी पूर्वजन्ममा ब्राह्मण थिए।

यी पूर्वजन्मको ब्राह्मणको नियम थियो गाउँको बाहिर भएको रणछोड़ रामजीको मन्दिरमा प्रतिदिन एक हजार तुलसीदल चढ़ाउने। वृद्ध भए, पचासी वर्षका भए। एक पटक ज्वरो आयो

तब उनले ज्वरोलाई भने, 'तँ आइछस् यसमा मलाई केही आपत्ति छैन, तर मेरो ठाकुरजीको पूजापछि मात्र आइज। मेरो सेवाको क्रम अटूट हुनुपर्छ।' यस्तो सङ्कल्प सुन्नासाथ ज्वरो भाग्यो।

उनी मन्दिरमा सेवा पूजा गर्न आए तब त्यहाँ कोही रोएको आवाज सुनियो। हेर्दा यौटी पिशाचिनी रोइरहेकी। ऊ भन्न थाली—'पूर्वजन्ममा मैले दुराचार गरेकी थिएँ। आफ्नो दुलहालाई मैले धेरै दुःख दिएकी थिएँ र यस जन्ममा मलाई पिशाचिनी हुनुपर्‍यो। तपाईंले कृपया मेरो उद्धार गरिदिनुहोस्।'

ब्राह्मण दयालु थिए। उनले प्रतिदिनको नियमानुसार विष्णुसहस्र नाम पाठसाथ तुलसी-दल अर्पण गर्दै भगवान्सँग प्रार्थना गरे—'हे प्रभु ! यो पापी जीव व्यथित भइरहेछ। म आफ्नो सारा पुण्य अर्पण गर्छु। तपाईंले यसको उद्धार गरिदिनुहोस्।' प्रभु प्रसन्न भए। उनले ब्राह्मणलाई भने—'आगामी जन्ममा तिमी दशरथ हुनेछौ र यो पिशाचिनी कौशल्या। म पुत्र रूपबाट तिम्रो घरमा आउनेछु। आफ्नो सारा पुण्य तिमीले एक जीवको उद्धार गर्नलाई दिएका छौ। त्यसकारण त्यो अनन्त र अतुलनीय भएको छ। ब्राह्मणले त्यहीं शरीर त्यागिदिए।'

तिनै ब्राह्मण अब यस जन्ममा दशरथ भए। उनका तीन रानीहरू थिए—कौशल्या, कैकेयी र सुमित्रा। कौशल्या धर्म पत्नी थिइन् र कैकेयी, सुमित्रा भोगपत्नी। तीन पत्नी भएर पनि दशरथ निःसन्तान थिए, त्यसकारण उनी वशिष्ठ कहाँ गए। वशिष्ठले भने—'पुत्रकाशष्टि यज्ञ गर। यस यज्ञमा तिम्रा चार पुत्र हुनेछन्।'

पुत्रकाशष्टि यज्ञ गरियो तब यज्ञकुण्डबाट खीर लिएर स्वयं अग्निदेव प्रकट भए र उनले राजालाई भने—'यो प्रसादलाई रानीहरूलाई ख्वाइदिनू। तपाईंकहाँ दिव्य सन्तानहरू हुनेछन्।'

वशिष्ठमुनिले राजालाई आज्ञा दिए—'धर्मपत्नी कौशल्यालाई यस प्रसादको आधा भाग दिनू र बाँकी रहेको प्रसादलाई कैकेयी र सुमित्रालाई बाँडेर दिनू।' दशरथ राजाले त्यस्तै गरे।

तुलसीदासले रामचरित मानसमा कैकेयीका तर्फबाट बड़ो सफाइ दिनुभएको छ, तर एकनाथ महाराजले उनलाई कर्कशा भनेका छन्।

कर्कश वाणीद्वारा पतिको अपमान गर्ने स्त्री कैकेयी हुन्।

कैकेयीले दशरथको अपमान गरिन्, ( झगड़ा गरिन् ) - प्रसाद सबैभन्दा पछि किन दिइयो भनेर। उनले प्रसाद उठाएर बाहिर फ्याँकिदिइन्। त्यस प्रसादलाई समड़ी ( गिद्धजस्तो पक्षी )-ले लिएर एउटा पर्वतमा गई। त्यहाँ अञ्जनी देवी तपश्चर्या गरिरहेकी थिइन्। त्यस समड़ीले अञ्जनी देवीको शिरमा छाया पारेर प्रसाद पनि दिइन्।

अञ्जनी देवीले प्रसाद खाइन् तब उनलाई हनुमानजी प्राप्त हुनुभयो।

अब कैकेयीलाई प्रसाद त्यागेको दुःख र पश्चात्ताप हुन थाल्यो। कौशल्या बड़ो उदार थिइन्। उनले आफ्नो भागको प्रसादबाट केही अंश कैकेयीलाई दिइन्। सुमित्राले पनि कैकेयीलाई अलिकति प्रसाद दिइन्। यसप्रकारले तीनै रानीहरूले प्रसाद खाए।

आफ्नो घरलाई अयोध्याजस्तो बनाऊ। जहाँ युद्ध, क्लेश छैन त्यहीं अयोध्या हो। सरयू नदी अर्थात् भक्तिप्रवाहको किनारामा बसेर शरीर पनि अयोध्या बन्ला र यस्तो नगरीमा बसेको जीवात्मा दशरथ—( जितेन्द्रिय ) बन्ने छ।

मानव-जीवन क्षणभंगुर छ भन्ठानेर निरपेक्षता र नम्रता धारण गर्नुपर्छ।

आफ्ना इन्द्रियरूपी घोड़ाहरूलाई नियन्त्रित गरेर शरीररथलाई योग्य मार्गमा चलायौ भने रामचन्द्रजी आउनुहुनेछ। आफ्ना इन्द्रियहरूलाई वशमा राख, जितेन्द्रिय बन।

ईश्वरको सल्लाह लिनु, मनको होइन। मन विश्वासघाती हुन्छ।

दश इन्द्रियरूपी घोड़ाहरूलाई नियन्त्रित गरेर शरीररथलाई लिएर जो रामचन्द्रजीका तर्फ जान्छ, त्यही दशरथ हो। यस्ता दशरथका घरमा भगवान् पुत्र रूपले आउनुहुन्छ।

दशानन रावण—( विषयहरूको अमर्यादा भोक्ता )—को घर भगवान् कालरूपले आउनुहुन्छ।

दशरथ जीवात्मा हो। यी दश इन्द्रियहरूलाई वशमा गरेर जो जितेन्द्रिय बन्न सक्दछ उनै दशरथ हुन्।

जो सबैलाई प्रसन्न गर्दछ, उनीकहाँ सर्वेश्वर आउँछन्। दशरथ सबै रानीहरूको इच्छा थाहा पाउँथे। सुमित्रा भन्दछिन् म कौशल्याको सेवामा बस्न चाहन्छु। दशरथले विचार गरे यसको छोरा महाज्ञानी हुनेछ।

रामको गर्भ जन्मैदेखि कौशल्या ईश्वरको ध्यानमा लागिहालिन्। उनको सहज संज्ञना चलिरहेको थियो. कौशल्याका रोम-रोमबाट परमात्माको मङ्गलमय नामको जप भइरहेको थियो।

दशरथले कौशल्यालाई सोधे—महारानी, तिम्रो के इच्छा छ ?

कौशल्या—इच्छा दुःखको कारण हो। मलाई सुखको इच्छा छैन। म आनन्दरूप हुँ। मलाई एक्लै ध्यान गर्न दिनुहोस्।

दशरथले वशिष्ठसँग बने—'गुरुजी कौशल्या यस्तो कुरा गरिरहिछन्।' वशिष्ठ—'यो एउटा शुभ चिह्न हो।'

नौ महीना पूरा हुन थालेको थियो। एक रात दशरथले स्वप्नमा देखे उनका आँगनमा केही ऋषि महात्मा आएका छन् र उठाइरहेछन्। राजाले स्वप्नमै सरयूमा नुहाए। श्रीनारायणको पञ्चामृतले अभिषेक गरे। स्वप्नामै लक्ष्मीनारायणको आरती र दर्शन गरिरहेथे। उनलाई लाग्यो प्रभु पनि प्रसन्न हुनुहुन्छ।

यस सुन्दर स्वप्नका पछि उनी बिउँझे। राम्रो सपना देखिएपछि सुत्नु हुँदैन। राजाले सोचे यस स्वप्नका विषयमा गुरुजीसँग निवेदन गर्नुपर्‍यो। उनी वशिष्ठकहाँ गए।

वशिष्ठले सोधे—'तपाईं यस्तो सबेरै किन आउनुभएको हो ?'

दशरथ—मैले आज स्वप्नामा लक्ष्मीनारायणको आरती गरें। मैले यो पनि देखें नारायणको दिव्य तेज कौशल्याको गर्भमा गइरहेछ।

वशिष्ठ—'यस सपनाको फल असल हुनेछ। तिम्रो घरमा भगवान् नारायणको आगमनको यसमा सूचना छ। मलाई विश्वास छ यस स्वप्नाको फल तिमीले २४ घण्टाभित्रै पाउने छौ।'

राजा आनन्दसाथ झुम्न थाले। उनको घर स्वयं भगवान् जो आइरहनु भएको छ। उनले सरयूमा स्नान गरेर भगवान्‌को पूजामा लीन भए।

यता कौशल्या पनि प्रभुध्यानमा मग्न छिन्। आज परम पवित्र रामनवमीको दिन हो।

जेहि दिन राम जनम श्रुति गावहि।<br>
तीरथ सकल तहाँ चलि आवहिं॥

भगवान् शङ्कर ज्योतिषीको वेशमा अयोध्याका गल्लीहरूमा घुमिरहेछन्। यिनका इष्टदेव हुन् बालक राम। प्रातःकालदेखि देव-गन्धर्व प्रतीक्षा गरिरहेछन्।

वैष्णवजन जबसम्म अत्यन्त आतुर हुँदैनन् तबसम्म भगवान्‌को जन्म हुँदैन।

परम पवित्र समय आयो। चैत्र मास, शुक्लपक्ष र नवमी तिथि। मध्याह्नको समय भयो र.....

भए प्रगट कृपाला दीनदयाला कौशल्या हितकारी।<br>
हरषित महतारी मुनिमनहारी अद्भुत रूप विचारी।<br>
लोचन अभिरामा तनु घनश्यामा निज आयुध भुजचारी।<br>
भूषन वनमाला नयन विशाला शोभा सिन्धु खरारी।<br>
कह दुइ कर जोरी स्तुति तोरा केहि विधि करौं अनन्ता।<br>
माया गुन ज्ञानातीत अमाना वेद पुरान भनन्ता।<br>
करुना सुख सागर सब गुनआगर जेहि गावहिं श्रुति सन्ता।<br>
सो मम हित लागी जन अनुरागी भयउ प्रगट श्रीकन्ता॥

*दोहा*

विप्र धेनु सुर संत हित लीन्ह मनुज अवतार।<br>
निज इच्छा निर्मित तनु माया गुन गो पार॥

सियावर रामचन्द्र की जय।
रघुपति रामचन्द्र की जय॥

दशरथको घरमा साक्षात् परब्रह्म श्रीहरि प्रकट भए। जो निर्गुण थिए उनी भक्तहरूको प्रेमको कारणले आज सगुण बने।

अगुन अरूप अलख अज जोई।
भगत प्रेम-बस सो होई॥

वेदहरूले जसको यसप्रकार वर्णन गरेका छन् तिनै श्रीहरि भक्तहरूका हितको निमित्त आज दशरथको घर पुत्रको रूप लिएर आउनुभएको छ।

बिनु पद चलइ सुनइ बिनु काना।
कर बिनु करम करइ विधि नाना॥
आनन रहित सकल रस भोगी।
बिनु बानी वक्ता बड़ जोगी॥
तन बिनु परस नयन बिनु देखा।
ग्रहइ घ्रान बिनु बास अशेषा॥
अति सब भाँति अलौकिक करनी।
महिमा जासु जाइ नहिं बरनी॥

जेहि इमि गावहिं बेद बुध जाहिं धरहिं मुनि ध्यान।
सोइ दशरथ सुत भगत हित कोशलपति भगवान॥

आकाशबाट देवगन्धर्वहरूले पुष्पवृष्टि गरे। म आफ्ना भक्तहरूको चारैतर्फ रक्षा गर्छु आज भनेर चतुर्भुज रूपबाट प्राकट्य भयो।

आमाले स्तुति गर्नुभयो—प्रभु ! मेरा निमित्त तपाईं बालक बनिदिनुहोस्। मलाई आमा भनेर बोलाउनुहोस्। उहाँले आमालाई देखाउनुभयो म परमात्मा हुँ। उहाँको चतुर्भुजस्वरूप अदृश्य भयो र साना-साना दुइ हातवाला बालक हुनु भयो।

दासीहरूमा पनि यो शुभ समाचार फैलियो। कौशल्याले दासीलाई नौलखावाला हार दिइन्। 'मेरो राम सुखी होस्। म यो आनन्दसाथ दिइरहेछु।' दासीले भनी—'मलाई केही पनि चाहिन्न। म रामलाई ख्वाउन चाहन्छु।' राम दासीको काखमा गए। आज उसको पनि ब्रह्मसम्बन्ध भयो।

दासी दगुर्दै राजाका नजिक आई र बधाई दिई। 'बालक भएको छ। साक्षात् नारायणै आएका हुन् जस्तो लाग्छ।' वृद्ध दशरथजीका घरमा पुत्रजन्म भयो। पुत्र पनि साधारण होइन, साक्षात् परमात्मा पुत्रको रूप लिएर आएका छन्। दशरथजीले वस्त्रादि द्वारा शृङ्गार गरे।

प्रथम गणपतिको पूजा गरियो। दान पनि दिइयो। सारा अयोध्यामा कोही पनि दरिद्र रहेनन्। वशिष्ठले वेदमन्त्रहरूको उच्चारण गरेर मानसिक अभिषेक गरे। दशरथजी अन्तःपुरमा गए। आज रामको दर्शनले गर्दा सारा दासीहरू अति हर्षान्वित भएका थिए। उनीहरूले आफ्नोपना बिर्सिदिएका थिए। देहभान नभएपछि मानमर्यादा र लाजको कुरै के रह्यो र?

परमानन्द भयो। देव-गन्धर्व आदि पनि सूक्ष्म रूपबाट रामको दर्शन गरिरहेछन्।

रामजन्मबाट सबैलाई आनन्द भयो। रामललाको दर्शनबाट सूर्यनारायण आनन्दले स्तब्ध भएर स्थिर भए। अगाड़ि बढ्दै-बढ्दै थिए। सूर्यास्त विना चन्द्रले रामको दर्शन कसरी गर्ने? तब चन्द्रमाले रामसङ्ग प्रार्थना गरे—'यस सूर्यलाई अगाड़ि बढ्नलाई आज्ञा दिनुहोस्। उसले मलाई तपाईंको दर्शन गर्न दिँदैन।' चन्द्रमा रुन थाले। तब रामचन्द्रजीले आश्वासन दिँदै भन्नुभयो—'आजदेखि म तिम्रो नाउँ धारण गर्ने छु।' तैपनि उनी प्रसन्न भएनन्।

अनि उनलाई रामचन्द्रजीले भन्नुभयो—'तिमी धैर्य गर। यसपटक मैले सूर्यलाई लाभान्वित गरिदिएको छु। तर भविष्यमा कृष्णावतारमा सबैभन्दा पहिले तिमीलाई दर्शन दिनेछु। कृष्णावतारमा रात्रिको बारह बजे जन्मने छु। त्यसो हुनाले तिमीलाई लाभ हुनेछ।'

कृष्णाजन्मका समयमा तीन व्यक्तिहरू जागिरहेका थिए। वसुदेव, देवकी र चन्द्रमा।

जो रातिका समयमा जाग्दछन् उनलाई कृष्ण भेटिनुहुन्छ। जाग्नुको अर्थ के हो?

**जानिय तबही जीव जग जागा।**
**जब सब विषय विलास विरागा॥**

गीताजीमा भनेको छ—

**या निशा सर्वभूतानाम् तस्यां जागर्ति संयमी।**
**यस्यां जाग्रति भूतानि सा निशा पश्यतो मुनेः॥**

नित्य शुद्ध परमात्मालाई प्राप्त गर्नेतर्फ जो कहिल्यै ध्यान दिँदैनन्, ती सबै भूत प्राणीहरूका निमित्त जो रात्रि छ, सोही समयमा योगी जागेर प्रभु स्मरण गर्छन्। प्राणी जुन सांसारिक नाशवान् क्षणिक सुखहरूमा जान्छन् त्यो रात्रि समान हो। त्यस्ता पुरुषहरूलाई परमात्माको ज्ञान हुन सक्दैन।

वसुदेव-देवकीको स्थितिलाई हेर। सम्पत्ति, राज्य, सन्तति सबै कुरा खोसियो। निरपराध भएर पनि हात र गोड़ामा सांग्ला लगाइयो। तैपनि उनीहरू सँधै प्रभुको स्मरण गर्दै रहे।

दुःखमा पनि प्रभुको नाम स्मरण गर्न नबिर्सनु। दुःखमा सचेत भएर जो व्यक्ति ईश्वरको भजन गर्छ उसका घर स्वयं भगवान् आउनु हुन्छ।

स्वामी विद्यारण्यले भन्नु भएको छ नल र राम जस्ता विभूतिहरूका जीवनमा पनि दुःखद प्रसङ्ग आएको थियो भने हामी जस्ता साधारण मानिसहरूको के कुरो गर्नु र? त्यसकारण दुःखसङ्ग कहिले पनि नडराउनु।

वियोगमा कथा बन्दछ, संयोग भयो कथा बन्द हुन्छ। जबसम्म जीवको ईश्वरसङ्ग विरह छ तबसम्म कृष्णकथा हुन्छ। जीव र ईश्वरको मिलनपछि कथाको प्रश्नै छैन।

भागवतको दशम स्कन्धको चौधौं अध्यायमा सुदामा चरित्रका समय शुकदेवजीले प्रेमलाई नियन्त्रित गर्नुपरेको थियो, दबाउनुपरेको थियो, यदि प्रेममा समाधि जस्तो लागेको भए राजा परीक्षित्‌को के गति हुने थियो?

दशरथले बालस्वरूप देखे तब उनको हृदय प्रेमले भरियो। दशरथको आनन्दको वर्णन सरस्वतीले पनि गर्न सक्नुभएन। पिता-पुत्रको दृष्टि मिल्यो। बालक हाँसिदियो। दशरथले रामलाई मह चटाउन लाग्नुभो। उहाँले वशिष्ठलाई वेदमन्त्रको पाठ गर्न भन्नु भयो।

वशिष्ठ रामको दर्शन गरेपछि मैले वेदमन्त्र मात्र होइन आफ्नै नाउँसम्म बिर्सिएँ। 'म बोलूँ के बोलूँ।'

दर्शन गर्दा नामरूप बिर्सियो भने दर्शन बड़ो आनन्दको हुन्छ। ब्रह्म-दर्शनको आनन्द हुन्छ।

**तत्र वेदा अवेदा भवन्ति।**

ईश्वर दर्शन भएपछि वेदपनि विस्मृत हुन्छ। ईश्वरको साक्षात्कार पछि वेदको केही आवश्यकता छैन। प्रभुको साक्षात्कार पछि वेद, जगत्‌को नामरूप र आफ्नोपन सबै कुरा विस्मृत हुन्छ। त्यसकारण वशिष्ठ भन्नुहुन्छ मैले आफ्नो नाउँ पनि बिर्सिएछु।

कौशल्याले बालक रामलाई काखमा लिएर बाहिर आइन्। अयोध्याका प्रजाले रामललाको दर्शन गरे। कसैलाई पनि भोक र प्यासको भान भएन।

रामविना आराम छैन। जीवमात्र आराम चाहन्छ। जीवमात्र शान्तिको उपासक छ, यस्तो शान्ति जो कहिल्यै भङ्ग हुन नपाओस्। रामको मर्यादाको पालन गर्‍यौं भने जीवनमा शान्ति पाइने छ। मानिस रामको जीवन मर्यादालाई जीवनमा उतार्दैन, त्यसकारण उसलाई सच्चा शान्ति मिल्दैन।

धर्मको फल हो शान्ति। अधर्मको फल हो अशान्ति। धर्मको मर्यादाको पालन नगरेमा शान्ति पाईदैन। स्त्री र पुरुषले आफ्नो-आफ्नो मर्यादामा बस्नुपर्छ, मानवले जब मर्यादाको उल्लङ्घन गर्दछ अनि अशान्ति आउँछ। धर्म मर्यादाका विना ज्ञान, भक्ति या त्याग सफल हुन सक्दैन।

आजकल मन्दिरहरूमा र कथा आख्यानहरूमा भीड़ बढ्दै गइरहेछ। आजकल ज्ञान र भक्ति बढ़ेजस्तो लाग्छ। तैपनि शान्ति कसैले पनि पाइरहेका छैनन्। यसको यही कारण हो मानिस धर्म मर्यादाको पालन गर्दैनन्। मानिसले आज धर्मलाई बिर्सिएका छन्। धर्मविना शान्ति छैन। धर्मको मर्यादा कहिले ननाघ। धर्मपालनका विना ज्ञान र भक्ति व्यर्थ छ। चन्द्र, सूर्य, समुद्र कहिले पनि आफ्नो मर्यादाको उल्लङ्घन गर्दैनन्। तर आजका मानिस अलिकति रुपियाँ, पैसा, अधिकार या मान पाएपछि आफूलाई लाठ साहब मान्दछन्। मलाई सोध्ने रोक्नेवाला छ को ?

तिमीलाई ज्ञान दिएको छ धर्म मर्यादाको पालनका निमित्त, उल्लङ्घन गर्नका निमित्त होइन।

रघुनाथजी मर्यादा पुरुषोत्तम अरू सबै सद्गुणहरूका भण्डार हुनुहुन्छ। उहाँ स्वयं परमात्मा भए पनि धर्म-मर्यादाको पूर्ण पालन गर्नुहुन्छ।

सबै दिव्यगुण जसमा एकत्र हुन्छन् ऊ मात्र परमात्मा हो। लक्ष्मण विवेकको, भरत वैराग्यको, शत्रुघ्न सद्विचारका स्वरूप हुन्। भरत र शत्रुघ्न अर्थात् वैराग्य र सद्विचार यदि अयोध्यामा छैनन् भने दशरथ-कैकेयीका अधीन भइहाल्छन्।

चन्दनपुष्पद्वारा रामको सेवा गर्नु असल कुरा हो, तर उहाँको मर्यादाको पालन गर्नु सर्वोत्तम सेवा हो। उहाँको मर्यादाको पालन गरेनौ भने संभव छ उहाँले तिम्रो प्रार्थना नसुन्नुहोला। भगवान्का आज्ञाहरूको पालन गर्नु उहाँको सर्वोत्तम सेवा हो। यसो नगर्नाले ईश्वरको भनाई छ मैले भनेको तँ नमान्ने भएपछि तेरो सेवा मलाई स्वीकार्य छैन।

श्रीरामको जीवन यस्तो पवित्र छ जो उहाँको स्मरण मात्रले हामी पवित्र हुन्छौं। बेहोरा यदि रावणको जस्तो छ र जप रामनामको छ भने नामजपको फल कहिल्यै पाईंदैन। रामजस्तो बेहोरा भयो भने तब कुण्डभित्रबाट अमृत झर्नेछ। रामका एक-एक गुणलाई आफ्नो जीवनमा उतार्ने प्रयत्न गर्नु उनको सर्वोत्तम सेवा हो।

रामचन्द्रजीको अवतार राक्षसहरूको संहारका निमित्त होइन, मनुष्यहरूलाई उच्च आदर्श बताउनका निमित्त भएको हो। राक्षसहरूलाई मार्न भनी होइन, मानवको आदर्श मानव धर्म सम्झाउनका निमित्त उहाँ आउनुभएको थियो। उहाँको अवतार जगत्लाई मानवधर्म उपदेशका निमित्त थियो।

वाल्मीकिले रामका निमित्त उहाँ जस्तै नमूना खोजे तर एउटा पनि पाइएनन्। राम तर रामै हुनुभयो।

मनुष्य चाहे जुनचाहिँ देव या देवीमा श्रद्धा राखोस्, चाहे उसले विष्णुको पूजा गरोस्, चाहे शङ्करको तर त्यसको बेहोरा चाहिँ रामजस्तै हुनुपर्छ। जसको व्यवहार रामजस्तो होला ऊ पनि सफल होला।

कृष्णका लीलाहरू अनुकरणका निमित्त होइन श्रवण गरेर तन्मय हुनका निमित्त हो। गोकुल लीलामा पुष्टि छ, द्वारिका लीलामा मर्यादा।

यस्तो होइन जो रामका अमुक लीलाहरू अनुकरणीय छन् र अमुक चिन्तनीय। उहाँका सबै लीलाहरू अनुकरणीय छन्। उहाँ सबै गुणहरूका भण्डार हुनुहुन्छ। उहाँ प्रत्येक स्त्रीलाई मातृ-भावले हेर्नुहुन्थ्यो, कुनै पनि स्त्रीलाई उहाँले काम-भावले हेर्नु भएन।

मनुष्य एकतर्फ पुण्य गर्छ तर अर्कोतिर पाप पनि गर्दछ। परिणाममा उसको हात केही पनि लाग्दैन।

राम माता-पिताको आज्ञा सदा मान्नुहुन्थ्यो। कहिले पनि स्वछन्द नबन। उहाँ सदा दशरथ-कौशल्याको वन्दना गर्नुहुन्थ्यो। आजकलका सन्तान आफ्ना माता-पितालाई प्रणाम गर्नुपर्‍यो भने लाज मान्दछन्, तुच्छ छ तिम्रो यस्तो पढ़ाइ जसले तिम्रा माता-पितालाई ढोग्नबाट रोकिरहन्छ। पिताको धन सम्पत्ति लिनमा तिमीलाई कुनै लाज संकोच हुँदैन तर वन्दना गर्नमा चाहिँ संकोच लाग्छ, लाज लाग्छ। माता-पिता भनेका लक्ष्मी नारायणका स्वरूप हुन्। उनलाई वन्दना गर।

रघुनाथजीको दीनवत्सलता र उदारता जगत्मा बेजोड़ छ। उहाँ जस्ता राजा न पहिले कोही भएको छ न पछि कोही होला।

ऐसा को उदार जग माहीं।<br>
विन सेवा जो द्रवे दीन पर राम सरिस कोउ नहीं॥<br>
जो गति योग विराग जतन करि नहिं पावत मुनि ग्यानी।<br>
सो गति देत गीध शबरी कहँ प्रभु न बहुत जिय जानी॥<br>
तुलसीदास सब भाँति सकल सुख जो चाहसी मन मेरो।<br>
तौ भजु राम काम सब पूरन करहिं कृपानिधि तेरो॥

रामचरित्र दिव्य हो। उहाँको चरित्रले सबैलाई डोलायमान गरिदिन्छ। सर्पको कान हुँदैन। कारण जान्नुहुन्छ यसको ?

शेषनाग सर्पहरूको राजा हो। उसैको फणामा पृथ्वी अड़िएको छ। राम कथाको श्रवणले यदि शेषनाग हल्लन थाले भने तब धरतीको विनाश हुनेछ। त्यसकारण ब्रह्माजीले सोच्नुभयो भलाइ यसैमा छ उसलाई कान नदिइयोस्। यसो भनौं भने यो कुरा कविकल्पना मात्र हो।

राममा सबै सद्गुणहरू जम्मा भएका छन्। उहाँले एक पत्नीव्रतको पालन गर्नुभयो। उहाँले आफूभन्दा ठूलोको जो गुण राम्रो लाग्यो तिनलाई पनि जीवनमा उतार्नुभयो। उहाँले दशरथबाट धेरै कुरा ग्रहण गर्नुभयो तर बहु पत्नित्वचाहिँ लिनुभएन।

पुरुषले एउटी स्त्री ( पत्नी )-मा मात्र कामभाव राख्छ र धर्मानुकूल कामोपभोग गर्छ भने त्यो गृहस्थ भए पनि ब्रह्मचारी हो। कामलाई व्यापक नहुन दिन त्यसलाई एउटै पात्रमा संकुचित

गरिदिनका निमित्त मात्र विवाहको आयोजना गरिएको हो। काम-भावलाई एउटै पात्रमा निहित गरेर त्यसलाई नाश गर।

निर्दोष चाहिँ केवल ईश्वर मात्र छ। सम्भव छ, गुरुमा पनि कुनै दोष होओस्। तर गुरुको दोषको अनुकरण गर्नुहुन्न। राम कुनै स्त्रीतर्फ र सीता कुनै पुरुषतर्फ हेर्दैनथे। शास्त्रको यो मर्यादा हो। यस्तो मर्यादाको पालन गर्नाले जीवन सुध्रिनेछ। रामचन्द्रजीले एक स्त्री-व्रतको पालन गरे, ईश्वरको धर्म-मर्यादाको जो पालन गर्छ, त्यही सच्चा मनुष्य हो।

वाल्मीकि रामायणको सुन्दरकाण्डमा एउटा प्रसङ्ग छन्। हनुमानजी सीताजीलाई भेट्न भनी अशोक वनमा गएथे। फर्किंदाखेरि उहाँले माताजीलाई भन्नुभयो—'लौ अब म गइरहेछु।'

सीताजी—'ठीक भयो तिमी मसँग भेट्न आयौ, तिमी गएपछि यी राक्षसहरूले मलाई सताउने छन्।'

हनुमान्जी—'तपाईंको आज्ञा पाएदेखि तपाईंलाई आफ्नो काँधमा राखेर यसै समय रामजीका समीप लैजाऊँ, म रामदूत हुँ। मलाई कसैले पनि मार्न सक्दैन।'

सीताजी—'होइन, यसो हुन सक्दैन। तिमी मेरा पुत्रसमान छौ, बालब्रह्मचारी छौ, पवित्र छौ। फेरि तिमी पुरुष हौ र म स्त्री। मेरा निमित्त कुनै पनि परपुरुषको स्पर्श वर्जित छ। पर-पुरुषको स्पर्शले सती नारीको पातिव्रत्यको भङ्ग हुन्छ। म तिम्रो काँधमा बसें भने मानिसले के भन्लान्?'

रघुनाथजी मेरा सिवाय अरू कुनै पनि स्त्रीको स्पर्श गर्नुहुन्न। मैले पनि उहाँका सिवाय कुनै अन्य पुरुषको छायाँसम्म स्पर्श गरेकी छैन।

मनबाट पनि कसैको स्पर्श नगर। स्वास्नीमानिसहरूले पतिका सिवाय कुनै साधुसन्तको चरणको पनि स्पर्श नगर्नु। उनलाई टाढैबाट प्रणाम गर्नु।

बाबु, तिमी ब्रह्मचारी छौ र फेरि मैले तिम्रो स्पर्श गरें भने धर्मको मर्यादा उल्लंघन हुन्छ।

सीताजी जगत्लाई आदर्श स्त्रीत्व देखाउनुहुन्छ। यसै कारणले उहाँ प्रकट हुनुभएको हो। राम सरल हुनुहुन्छ, तर सीताजीको सरलता अलौकिक छ।

रामको मातृ-पितृ भक्ति अलौकिक छ। बन्धुप्रेम पनि दिव्य छ।

ठूलाको मन कहिल्यै नदुखाउनु। कैकेयीले रामलाई वनवास दिइन् तर उहाँले उनलाई प्रणाम गरेर भन्नुभयो—'आमा, मेरा भाइ भरत यदि राजा बन्ने भएदेखि म चौध वर्ष मात्र होइन आजीवन वनवासी हुन तयार छु। यो तपाईंको मेरातर्फ पक्षपात भयो। भरतको अपेक्षा ममाथि तपाईंको प्रेम ज्यादै छ। मलाई ऋषि मुनिहरूको सत्सङ्गको लाभ पाइयोस् भनेर तपाईंले यो वनवास दिएको हो। मेरा कल्याणका कारण तपाईंले आज मलाई वनमा पठाइरहनु भएको छ।'

रामकथा सागर जस्तो छ। शिवजीले एक करोड़ श्लोकहरूमा यो कथा वर्णन गर्नुभएको छ। रामका सबै गुण जीवनमा उतार। राजा रामको प्रत्येक मर्यादा जीवनमा लागू गर्न सक्यौ भने तब रामनवमीको उत्सव परिपूर्ण हुने छ। सफल हुने छ।

शिवजी प्रतिदिन उमालाई यो राम कथाको रसास्वादन गराउनुहुन्थ्यो। हनुमानजी पनि प्रतिदिन सुन्थे। यस रामकथाका एक-एक श्लोकले पापहरूलाई नाश गर्ने छ।

एकपटक देव ऋषि र मनुष्य शिवजीका छेउ रामायण माग्न गए। रामायणका एक करोड़ श्लोकलाई शिवजीले तिनैलाई बराबर बाँडिदिनुभयो र एक श्लोक शेष रह्यो, देव, ऋषि र मनुष्य यी शेष रहेका श्लोकका निमित्त झगड़ा गर्नथाले।

शिवजीलाई लड़ाईं-झगड़ा मन पर्दैन। जहाँ युद्ध, वैर, स्वार्थ, वासना, विषमता छैन त्यही स्थान अयोध्या हो र राम पनि त्यहीं अवतार लिनुहुन्छ। जब कैकेयीको मनमा विषमता, स्वार्थ वासना जन्मे रामले अयोध्या त्यागिदिनुभयो। विषमता, लड़ाइँ-झगड़ा भयो भने रामले अयोध्या छोड़िदिनुहुन्छ।

शिवजीको सभामा गोरु र सिंह, मूसा र सर्प, मयूर र सर्प सबै आफ्ना-आफ्ना जन्मजात शत्रुता बिर्सिएर एकैसाथ बस्दछन्। गरुड़ र सर्प पनि आफ्नो दुश्मनी बिर्सिएर विष्णुभगवान्को सामुन्ने शान्त भएर बस्दछन्। दुश्मनीलाई बिर्सिदेऊ।

शिवजीले भन्नुभयो—श्लोक एउटा छ र त्यसको इच्छा गर्नेवाला तीन। यस श्लोकमा बत्तीस अक्षर थिए। त्यसकारण तीनै जनालाई दश-दश अक्षर दिनु भयो। अब बाँकी बचे दुइ अक्षर तब शिवजीले भन्नु भयो—यी दुइ अक्षरलाई म कण्ठमा राख्छु। दुइ अक्षर हुन् 'राम'। शिवजीले रामलाई आफ्ना साथै आफ्ना हृदयमा राख्नुभयो। यस्तै किसिमबाट तिमीले पनि रामलाई सदा आफ्ना हृदयमा राख्नु। शिवजीको जस्तै हृदयमा रामको स्थान र नाम सदा रहे पनि सन्तोषको कुरा हो।

श्रीरामको नामको जपले सबै कष्ट दूर हुन्छ र सबै कुरा शुभ हुन्छ।

भगवान् शङ्कर रामायणका आचार्य हुनुहुन्छ। उहाँले जगत्लाई भन्न खोज्नुभएको छ मैले विष पिएँ र पनि रामनामको प्रतापले मलाई केही भएन। जीवनमा विष पिउने कति प्रसङ्ग आउँछन्। जहिले पनि यस्तो फाल्टु प्रसङ्ग आयो भने प्रेमसँग 'श्रीराम श्रीराम' भन। रामनामले कण्ठद्वारा अमृत झार्दछ, जसले विषलाई नष्ट गरिदिन्छ।

रामको नाउँ लिएर विष पिए तब त्यो अमृत बन्यो। संसारमा पनि निन्दा, वैर, व्याधि आदि विषसरह हो। यस्तो सांसारिक विषले जसै पोल्न आउला तब रामनामको जप गर्नू। जुन वेला पनि परिस्थिति प्रतिकूल भयो भने पन्द्र मिनट रामनामको जप गर, यसैले शिवजीलाई श्मशानमा पनि शान्ति छ—

श्मशानेश्वाक्रीड़ा स्मरहर पिशाचाः सहचराः।
चिताभस्मालेपः स्त्रगपि नृकरोटी परिकरः॥
अमंगल्यं शीलं भवतु तव नामैवमखिलम्।
तथाऽपि स्मर्तृणां वरद परमं मङ्गलमसि॥

भगवान् शिव सदा रामनामामृतको पान गर्नुहुन्छ, त्यसकारण उहाँ शिव हुनुहुन्छ। भन्नुहुन्छ 'रामको कथा म भन्छु तर पनि म यो जान्दिनँ उहाँ कस्तो हुनुहुन्छ।' शिवजीको यो विनयशीलता हो।

जो जानेर पनि अज्ञानीजस्तो भएर जप गर्दछ, त्यसैले मात्र केही न केही जान्दछ।

अयोध्यामा रघुनाथजीको प्राकट्य भयो। लक्ष्मण, भरत र शत्रुघ्नको पनि जन्म भयो। चारै बालक कौशल्याको आँगनमा खेल्न थाले र प्रतिदिन बढ्दै गए।

रामचन्द्रजी तर खेल-कूदमा आफ्ना साना भाइहरूलाई पनि सताउँदैनथे। उनले जीत सदा आफ्ना साना भाइलाई मात्र दिन्थे। उनी मान्दथे मेरा साना भाइहरूको जीत पनि मेरै जीत हो। यदि उनको हार भयो भने उनलाई दुःख होला भन्ठान्थे। त्यसकारण उनी स्वयं हार स्वीकार गर्थे। भरतको आँखाको आँसु उनी हेर्न सक्दैनथे।

आजकल तर मानिस एकातिर रामायण पढ्दछन्, राम नाम जप गर्छन् र अर्कातिर धन-सम्पत्तिका निमित्त भाइहरूसङ्ग अड्डामा गएर झगड़ा गर्छन्। यदि ठूलो राम बन्यो भने साना भाइ भरत, लक्ष्मणजस्तै हुनेछन्। यदि ठूलो भाइ रामजस्तो बन्यो र सानो भाइ भरत जस्तो भयो भने सारा जगत् आज पनि अयोध्या बन्न सक्छ र राम राज्य स्थापित हुन सक्छ। भरतलाई राज्य मिल्यो तापनि उनले त्यागिदिए। ठूलो दाजू अयोध्यामा थिएनन् र पनि स्वयं महलमा बसेर पनि तपश्चर्या गर्न थाले। भरतजीको तपश्चर्याको जगत्का सबै महापुरुषले धेरै-धेरै प्रशंसा गरेका छन्।

भारत-भूमि कर्मभूमि हो। यस कर्मभूमिमा जस्तो काम गरौला त्यस्तै फल पाउनेछौ। जस्तो भाव अन्यका निमित्त तिमीले राख्नेछौ त्यस्तै भाव उसका मनमा तिम्राप्रति हुनेछ। अभिमानले मूर्खहरूलाई सताउँदैन तर जसलाई जगत् कीर्तिमान दिन्छ त्यसैलाई सताउँछ। मानका एकदम पछिल्तिर अभिमान पनि उभिरहेको हुन्छ।

विष्णुसहस्त्रनामावलीमा भगवान्‌लाई 'अमानी मानदः' भनेको छ। भगवान् मानको दाता हुनुहुन्छ। भरत कैकेयीलाई भन्छन्—'रामठूला भएतापनि मान दिनुहुन्छ। रामले बाललीलामा पनि मर्यादा भङ्ग गरेको थिएन।'

जसले आफ्नो भाइमा प्रभुको दर्शन गर्न पाउँदैन उसलाई जगत्‌मा ईश्वर कहीं देखिनुहुन्न। रामले आमालाई कहिल्यै सताएको थिएन। कृष्णले सोचे रामावतारमा मैले मर्यादाको अतिशय पालन गरेको थिएँ र मलाई धेरै कष्ट उठाउनुपऱ्यो। अब कृष्णावतारमा म मर्यादाको पालन गर्नेछैन। कृष्ण आमालाई सताउँछन्। 'आमा' मलाई छोड़ेर अन्त कतै नजानु। तपाईंले सबै कामकाज छोड़िदिनु र मसँगै खेल्नु।

यशोदा अर्थात् बुद्धि ईश्वरदेखि टाढ़ा भयो भने उसलाई दुःख हुन्छ। त्यसकारण कृष्ण आमालाई भन्छन्, 'मलाई काखमा लिइराख्नोस्। मलाई छोड़ेर नजानोस्।' यशोदा बुद्धिलाई उनी आफ्ना साथमै राख्न चाहन्छन्।

रामचन्द्रको अवतार मर्यादा पुरुषोत्तम रामको हो। कृष्णको अवतार पुष्टि पुरुषोत्तमको हो। रामको लीलामा मर्यादा छ, कृष्णलीलामा प्रेम।

कृष्ण भन्दछन्—'मैले रामावतारमा मर्यादाको पूरा-पूरा पालन गरें। म सरल पनि धेरै भएँ, एकपत्नीव्रत पालन गरें। तैपनि संसारले मेरो केही कदर गरेन। त्यसकारण यस कृष्णावतारमा मैले सारा मर्यादा फ्याँकिदिएँ। अब म पुष्टि पुरुषोत्तम हुँ। जो पनि जीव मेरा निकटमा आएमा उसलाई अपनाउने छु।' कृष्णावतारमा सबैका निमित्त द्वार खुला छ। जसले चाहोस् सो आउन सक्छ।

कृष्णको वाणीलाई कसैले बाँध्न सक्दैन। एक-एक गोपीलाई उहाँले बाँध्नुभयो। तिनीहरू कृष्णलाई प्रार्थना गर्छन् हामीलाई छोड़िदेऊ। तब कृष्ण भन्दछन्—मेरी आमाले मलाई बाँध्न मात्र सिकाएको छ, छोड्न सिकाएकै छैन। म चाहिँ जान्छु। जय जय। कृष्णले जसलाई बाँध्छन् उसलाई कहिल्यै छोड्दैनन्।

ईश्वरले जसलाई आफ्ना बन्धनमा बाँध्नुहुन्छ, अपनाउनुहुन्छ त्यसलाई मायाको प्रवाहमा बग्न लागेको भए पनि भगवान् बचाउनु हुन्छ।

कृष्णको बाललीला अनौठो छ। कृष्णले नौनी चोरिरहेको एउटी गोपिनीले देखिन्। कृष्णलाई उनले बाँधिदिइन्। कृष्णले भने 'मलाई छोड़िदेऊ।' गोपिनीले-पिताको कसम, पतिको कसम तिमीलाई अहँ, म बाँध्छु भनेर एउटा खाँबामा बाँधिदिइन्। गोपिनीले कृष्णजीलाई सोधिन्—'तिमीलाई केही दुःख भएको छैन ? कृष्ण रुन थाले, अभिनय गर्न लागे—बड़ो कष्ट भइरहेछ। अलिकति गाँठो खोलिदेऊ।' गोपिनीले सोचिन् धेरै कसेर बाँध्नु ठीक छैन। कृष्णलाई दुःख होला। उनले अलिकति बन्धन ढीला गरिदिइन्। यसो गर्नासाथ कृष्ण भागिहाले। गोपिनी भन्दछिन्—दुइ सन्तानकी आमा भएर पनि मलाई बाँध्न आएन।

श्रीकृष्ण गोपिनीहरूलाई बाँधिदिनु हुन्छ। श्रीकृष्णलाई मनले स्पर्श गरे पनि हृदय पग्लिन्छ भने प्रत्यक्ष श्री अङ्गस्पर्शले तब कति बढ्ता आनन्द हुँदो हो। गोपीको ब्रह्मसम्बन्ध भयो। उनले कृष्णलाई भने—'हामीलाई छोड़िदेऊ'। कृष्णले भने—'छोड्न म जान्दै जान्दिनँ।' परमात्माले जसलाई बाँध्नु हुन्छ उसलाई कहिल्यै छोड़नुहुन्न। उहाँले त्यस जीवलाई आफूसँगै राख्नुहुन्छ।

ईश्वर शीघ्रतासँग कसैलाई अपनाउनुहुन्न र एकपटक जसलाई अपनाउनुहुन्छ त्यसलाई कहिल्यै त्याग्नुहुन्न। जीव स्वार्थी हो। त्यसले आफ्नो गराएर पनि छोड़िदिन्छ। स्वार्थको समाप्तिका साथ-साथ सम्बन्ध पनि समाप्त गर्छ। तर ईश्वर सम्बन्धलाई सदा कायम राख्नु हुन्छ।

मन भन्छ कृष्ण जब तिम्रो प्राकट्य होला, मलाई गोपी बनाइदेऊ।

प्रेम माग्ने होइन, दिनुपर्छ। सर्वेश्वरलाई त्यही मन पर्छ जो सबैसँग प्रेम गर्छ। विकार, वासना, स्वार्थ आए भने प्रेम खण्डित भयो। अर्कालाई सुखी गराउने भावना गर्नेवाला कहिल्यै दुःखी हुँदैन।

कृष्णलीलामा प्रेम शुद्ध छ। रामजीको लीलामा विशुद्ध मर्यादा छ। कृष्णलाई त्यसले मात्र बुझ्न सक्छ, जसले रामजीको मर्यादालाई पालन गर्दछ।

कृष्ण कहिल्यै सोझो उभिँदैनन्। उनी बाँकेबिहारी हुन्। उनी बाँकाका साथ बाँका छन् र योगीका साथ योगी, भोगीका साथ भोगी, बालकका साथ बालक र संन्यासीका साथ संन्यासी हुन्छन्।

श्रीकृष्णले भनेका थिए—'जगत् मिथ्या छ। सुवर्णको द्वारिका पनि डुब्यो।'

जसको लँगौटीसम्म फुस्किएको छ त्यस्ता विरक्त शुकदेवजस्ता महात्मा पनि श्रीकृष्णप्रेममा पागल बन्दछन्। श्रीकृष्णको बाललीला पनि यस्तो दिव्य छ जो शुकदेवजी जस्ता उनको वर्णन गर्दै आँसुले भिज्दछन्। महायोगी हाँस्तै हाँस्तैनन्, त्यसकारण उनलाई रुने प्रसङ्ग पनि आउँदैन। श्रीकृष्ण भोगी होइनन्, योगी हुन्।

भक्तिमा दुराग्रह नगर। रामजी अलिकति थोरै हुनुहुन्छ यस्तो कहिल्यै नभन्ठान्नु। कृष्ण र राम दुवै अवतार परिपूर्ण छन्, श्रीकृष्ण पुष्टि प्रेमको आनन्द दिनुहुन्छ।

रामचन्द्रजीका बाललीलाका वर्णन धेरै छन्। उनीहरू वशिष्ठको आश्रममा पढ्न गए।

संसार माया हो। यस मायामा आएपछि तर भगवान्‌लाई पनि गुरुको आवश्यकता पर्दछ। कुनै सद्‌गुरुको अनुग्रहविना मन सदाका निमित्त पवित्र हुन पाउँदैन। संसारमा आएपछि आफ्नु स्वरूपको विस्मरण हुन्छ र गुरुको आवश्यकता पर्छ।

श्रीराम हुनुहुन्छ तर परमात्मा। उहाँलाई मायाले स्पर्शसम्म गर्न सक्तैन। तैपनि जगत्‌लाई आदर्श देखाउन निमित्त उनीहरू गुरुका पास विद्याभ्यासका निमित्त गए। गुरुजीको सेवा पनि गरे। विद्याभ्यास समाप्त गरे।

श्रीराम सोह्र वर्षका उमेरमा यात्रा गर्न भनी गए। यात्रा गर्नाले उनलाई वैराग्य आयो। यस वैराग्यलाई दूर गर्नका निमित्त वशिष्ठजीले योगवाशिष्ठ महारामायणमा उपदेश गर्नुभयो। यसको प्रथम प्रकरण वैराग्यसँग सम्बन्धित छ। यो प्रकरण सबैले पढ्नुपर्छ। यसमा वशिष्ठजी भन्नुहुन्छ—वैराग्यलाई भित्र राख। प्रारब्ध तर भोग्नै पर्छ। तर नयाँ प्रारब्ध उत्पन्न हुन नपाओस्, यो पनि विचार गर्नुपर्छ। वनमा संसार साथसाथ घर आउने छ। घर बाधक छैन, तर घरका वस्तुहरूको आसक्ति बाधक हो।

राम, यदि तिमीले राजप्रासादलाई त्याग गऱ्यौ भने तब कुटीको आवश्यकता उपस्थित भयो। सुन्दर वस्त्र छोड़िदिनुभयो भने लँगौटी चाहियो। राम्रो भोजन छोड्यौ भने पनि कन्दमूल तर खानैपऱ्यो। त्यसकारण राज्यलाई त्याग्नुपर्ने कुनै आवश्यकता छैन। छोड्नु चाहिँ पर्ने हो—काम, क्रोध, लोभ, मोह, मत्सर, वासना आदिलाई।

वैराग्य भित्रबाट हुनुपर्छ, जगत्‌लाई देखाउन होइन। साधु बन्ने होइन, सरल हुनुपर्ने आवश्यकता छ।

भजनका निमित्त भोजन हो—यसो मान्यौ भने भोजन साधन हो। केवल भोजनका निमित्त भोजन बाधक हुन्छ।

सुखी हुनु छ भने भन—जो होला सो चल्नेछ, मन पर्नेछ। प्रभुले मलाई जुन स्थितिमा राख्नुहुनेछ त्यसैमा म रहनेछु। थालमा जे पाइएला खानेछु।

ज्ञानी पुरुषलाई भाग्य खप्नैपर्छ। रामचन्द्रजीको वैराग्य दूर भयो। उनी अब सोह्र वर्षका भए।

त्यस समय विश्वामित्रको यज्ञ सम्पन्न भइरहेको थियो। त्यसमा मारीच, सुबाहु आदि राक्षस बाधा पारिरहेका थिए। विश्वामित्रले सोचे—'रामचन्द्रजीले मात्र मेरो यज्ञको रक्षा गर्न सक्नुहुन्छ। अयोध्या गएर राम-लक्ष्मणलाई ल्याउनुपर्‍यो। दर्शन पाएर कृतार्थ पनि हुनेछु।' भागवतमा रामचन्द्रको आरम्भ यसै प्रसङ्गबाट गरिएको छ। विश्वामित्र अयोध्या आउनुभयो। सरयूमा स्नान गर्नुभयो र फेरि महाराज दशरथको सभामा आउनुभयो। दशरथजीले स्वागत गर्दै नमस्कार गर्नुभयो। 'मेरा पूर्वजहरूको पुण्यप्रतापबाट तपाईंजस्ता ऋषि मेरा घरमा आउनुभएको छ। म तपाईंको सेवा के गरूँ?' विश्वामित्रले आशीर्वाद दिँदै भने—'मेरा यज्ञमा राक्षस विघ्न गरिरहेछन्। त्यसकारण राम र लक्ष्मणलाई मेरो यज्ञको रक्षाका निमित्त मेरासाथ पठाइदिनुहोस्।' विश्वामित्रको यस्तो मागले राजा आत्तिए।

दशरथजीले भन्नुभयो—'मुनिवर, तपाईंले ठीक माग्नु भएन। यी बालक मैले आफ्नो वृद्धावस्थामा पाएको छु। मलाई सन्तानको कुनै आशा थिएन, तर तपाईं सबैको आशीर्वादले चार सन्तान पाएको छु। मलाई यी अति प्रिय छन् र राम सर्वाधिक प्रिय छन्। रामविना म रहन सक्तिनँ। उसलाई मेरा आँखाबाट टाढ़ा नपारिदिनोस्। म तपाईंलाई के भनूँ? राम मलाई प्रतिदिन दुइ पटक साष्टाङ्ग प्रणाम गर्दछ। मेरा प्रत्येक आज्ञाको पालन गर्दछ। यस्तो पुत्र न कहिल्यै भएको छ र न कहिले होला। साना भाइहरूसँग पनि उसको धेरै प्रेम छ। ऊ बहुतै सरल छ। मर्यादाको पूर्णतः पालन गर्दछ।'

रामको प्रशंसा गर्दागर्दै राजा मन भरी भए। पानीविना माछा शायद बाँच्नसक्छ तर रामविना दशरथ बाँच्न सक्दैनन्। उनले फेरि भने—'गुरुजी! म तपाईंलाई ठीक भन्दछु राम टाढ़ा भए मेरो प्राण जानेछ। तपाईंले चाहनुहुन्छ भने म आफ्नो सारा राज्य दिन्छु, आफ्नो प्राणसम्म पनि दिन तयार छु तर मदेखि मेरो रामलाई टाढ़ा नपारिदिनुहोस्।'

राम देत नहिं बनई गोसाईं।

म आफ्नो रामविना एक क्षण पनि बाँच्न सक्तिनँ। म प्राण दिनसक्छु, राम भएन भने।

देह प्राण तें प्रिय कछु नाहीं।
सोउ मुनि देउँ निमिष एक माहीं॥

जगत्मा दशरथजस्ता पिता भएका छैनन् र रामजस्ता पुत्र पनि छैनन्। राम जब वनमा गएथे तब दशरथले आफ्नो अन्तिम साससम्म रामको मात्र नाउँ लिएथे। उनले कौशल्यासँग बारंबार सोधे—'मेरो राम कहाँ छ ? मलाई कसैले रामका नजिक लिएर हिँड़। म रामविना बाँच्न सक्दिनँ' र रामको वनगमनको साथै दशरथजीको प्राण पखेरू उड्यो।

रामायणका एक-एक पात्र दिव्य छन्। भरत जस्तो कोही भाइ छैन। सीताजस्ती कोही स्त्री छैनन्। रामजीको अपेक्षा सीताजीको हृदय अति कोमल थियो। वाल्मीकि पनि सीताको चरित्रको वर्णन गर्दै पग्लिनुभएको थियो। उहाँले भन्नुभएको थियो—'रामायणमा रामजीको होइन, सीताजीको चरित्र अलौकिक छ। रामजी सरल हुनुहुन्छ, तर सीताजीको सरलता झन अद्भुत छ।'

वाल्मीकि रामायणमा एउटा प्रसङ्ग छ। रावणका साथ युद्धको समाप्ति भएपछि हनुमानजी अशोक वनमा आए। सबै राक्षसहरूको विनाश भैसकेको थियो र श्रीरामको विजय भएको थियो। सीताजीले हनुमानजीलाई धेरै आशीष दिइन् 'काल तिम्रो सेवक बन्नेछ। अष्टसिद्धिहरूले तिम्रो सेवा गर्नान्।'

हनुमानजी ज्ञानी पुरुषहरूका आचार्य हुन्।

मनोजवं मारुततुल्य वेगं जितेन्द्रियं बुद्धिमतां वरिष्ठं।
वातात्मजं वानरयूथमुख्यं श्रीरामदूतं शरणं प्रपद्ये॥

हनुमानजीको वर्णन गर्न कसले सक्छ ?

माता सीताले भित्रबाट आशीर्वाद दिइन्। तैपनि हनुमानजीलाई तृप्ति भएन। उहाँले भन्नुभयो—'तपाईंले मलाई आशीष चाहिँ धेरै दिनुभयो तर पनि हृदयमा एक इच्छा बाँकी रहन गएको छ।'

सीताजी—'वत्स, जे चाहिन्छ त्यो मागिलेऊ।'

हनुमानजी—'पहिले जब म लङ्का आएको थिएँ त्यसवेला तपाईंलाई राक्षसका स्त्रीहरूले धेरै सताएको देखेको थिएँ। तपाईंलाई तर्साउँथे, अहिले तर राक्षसहरूको विनाश प्रभुले गरिदिनुभयो। तर यी राक्षस—स्त्रीहरू बाँकी रहेका छन्। म चाहन्छु तपाईंको आज्ञा र आशीर्वादले यिनको विनाश गरिदिऊँ।'

सीताजी—'अरे, यो तिमीले के मागिरहेछौ ? यस्तो वरदान माग्नु कुनै ठीक कुरा होइन।'

हनुमानजी—'यिनीहरूले तपाईंलाई धेरै सताएका थिए। मैले आफ्ना आँखाले देखेको थिएँ।'

माताजी हनुमानलाई उपदेश दिन थालिन्—'बाबु, अपकारको बदला जसले उपकारद्वारा दिन्छ, त्यो मात्र सन्त हो। यी राक्षसीहरूको केही दोष छैन। तिनीहरूले रावणको आज्ञाको

कारणले मात्र मलाई सताउँथे। त्यो दुःख मेरो कर्मको फल थियो। मैले लक्ष्मणको अपमान गरेकी थिएँ, त्यसकारण दुःखी हुनुपऱ्यो। म यो सोचिरहिछु यी राक्षसीहरूलाई वर दिएर अयोध्या जाऊँ। म त्यस्तो आशीर्वाद तिमीलाई दिन सक्तिनँ।'

हनुमानजीले वन्दना गर्दै भने—'माताजी, तपाईंका सिवाय यस्तो दया कसैले गर्न सक्दैन।'

राक्षसहरूलाई राम कठोर थिए तर राक्षसीहरूका निमित्त सीताजी दयालु थिइन्। राक्षसीहरूलाई सीताजीले आशीर्वाद दिइन्। सीताजी जस्ती दयालु स्त्री कोही भएका छैनन्। उनी साक्षात् दयाकी मूर्ति हुन्। माताजीका गुणहरूका संझनाले लाग्छ रामका अपेक्षा सीताजी श्रेष्ठ हुन्।

जब दशरथले रामलाई छोड्न चाहेनन् तब उनलाई वशिष्ठजी संझाउन थाल्नुभयो। दशरथलाई उनीमाथि पूर्ण विश्वास थियो। उनी सद्‌गुरुको अधीन थिए। वशिष्ठले दशरथलाई भने—'राजकुमार रामको जन्मकुण्डलीले बताउँछ यस वर्ष विवाहको योग छ। यस वर्षमा यी चारै कुमारहरूको विवाहको योग छ। त्यस कारण यिनलाई पठाउनमा केही बाधा छैन। सबै कुशल-मङ्गल हुने छ। म तर मान्दछु विश्वामित्र यिनलाई विवाहका निमित्त लिन आएका हुन्।'

विवाहको कुरा सुनेर दशरथ हर्षित भए। 'के मेरो रामको विवाह होला ? तब म आजै पठाउन तयार छु।' राम-लक्ष्मण राजसभामा बोलाइए। तिनीहरूले आएर प्रणाम गरे।

दशरथ—'तिमी दुवैलाई विश्वामित्रको यज्ञरक्षाका निमित्त जानु छ।'

राम—'जस्तो यहाँको आज्ञा।'

राम-लक्ष्मण तयार भएर माता कौशल्याकहाँ आज्ञा-आशीर्वाद लिन गए। कौशल्याले पनि पिताको आज्ञापालन गर्न भनिन्। नारदजीले पहिलेदेखिनै कौशल्यालाई राम-लक्ष्मणको विवाहको योग छ भनेका थिए।

रामकृष्णलाई नौनी र सखरसँग बहुतै प्रेम छ। जीवनलाई मधुर बनाउनु छ। जीवनमा सद्‌गुणबाट मात्र मिठास आउँछ। सबैलाई मान गऱ्यौ भने तिम्रो जीवन पनि सखरजस्तो मीठो र मधुर हुनेछ। सबैलाई मानको दान गर्नु उत्तम छ। अरूलाई मान गरिदिनाले, आफ्नो जीवनमा संयम बढाउनाले जीवन मधुर र उत्तम बन्दछ।

जसको जीवनमा मधुरता छैन, त्यो भगवान्‌लाई प्यारो हुन सक्दैन। महादान र द्रव्यदानभन्दा पनि मानदान अधिक श्रेष्ठ छ। मानदान श्रेष्ठ दान हो। यसमा एक पैसासम्मको व्यय छैन। सबैलाई मान गर। जो कर्कशवाणी बोल्दैन, जो कसैको अहित गर्दैन त्यसको जीवन सखरजस्तो मीठो हुन्छ।

कौशल्याले विश्वामित्रलाई भनिन्—'मेरो रामलाई नौनी-मिश्री खुवाउनुहोला, नत्र त्यो दुब्लाउने छ।'

जुन समयमा विश्वामित्रका साथ राम-लक्ष्मण हिँड़िदिए त्यसवेला तिनीहरू कति शोभायमान थिए।

अरुन नयन उर बाहु बिसाला।
नील जलज तनु श्याम तमाला॥
कटि पट पीत कसे वर भाथा।
रुचिर चाप सायक दुहुँ हाथा॥

विश्वामित्र अर्थात् सारा विश्वको मित्र। विश्वस्य मित्रः—विश्वामित्र पाणिनीले अर्थ लाएका छन्। विश्वामित्रले आशीर्वाद दिए। पाणिनीको व्याकरण अमर हुनेछ। विश्व जसको मित्र छ सोही विश्वामित्र हो। जगत्को मित्र जीव हो। मनुष्य अर्थात् जीव मित्र बन्दछ, तब शब्द, ब्रह्म उसका पछि-पछि आउँछन् र त्यसका पछि परब्रह्म पनि आउँछ। तिमी जगत्, मित्र बन्यौ भने तब राम-लक्ष्मण तिम्रा पछिपछि आउनेछन्। राम परब्रह्म हो, शब्दब्रह्म हो। शब्दब्रह्मका विना परब्रह्म प्रकट हुँदैन।

विश्वामित्रका पछि-पछि राम-लक्ष्मण हिँड़े। बाटामा ताड़काको उद्धार गरे। विश्वामित्रले राम-लक्ष्मणलाई बला र अतिबलाको विद्या दिएको थियो। यसैले उनीहरूलाई भोक-प्यास लाग्दै लाग्दैन थियो।

ती सबै आश्रममा आए। रामले विश्वामित्रलाई भने—'गुरुजी, तपाईं आफ्नो यज्ञ प्रारम्भ गर्नुहोस्। म त्यसको रक्षा गर्ने छु।'

जनकपुरको नजिक ऋषि विश्वामित्रको सिद्धाश्रम छ। त्यहाँ उनी तप र यज्ञ गर्छन्।

विशाल यज्ञमण्डप बनाइएको छ। राम-लक्ष्मण धनुषबाणले सज्जित भएर यज्ञको रक्षा गर्न खड़ा छन्।

द्वारिकामा द्वारिकानाथ खड़ा छन्।
डाकोरमा रणछोड़ राय जी खड़ा छन्॥
श्री नाथजीमा गोवर्धन नाथ खड़ा छन्।
पंढरपुरमा विट्ठलनाथजी खड़ा छन्॥

भगवान् भन्नुहुन्छ—'जब जीव मेरो दर्शनका निमित्त आउँछ तब म उभिएर जसलाई दर्शन दिन्छु। म जीवसँग भेट्न आतुर छ। मलाई प्रेमसाथ भेट्न जो आउँछ, त्यससँग भेट्न म पनि आतुर छु। आफ्ना वैष्णवहरूसँग, भक्तहरूसँग भेट्ने प्रतीक्षामा म उभिइरहेछु। म उभीउभी भक्तहरूको प्रतीक्षा गर्छु। मबाट विभक्त भएको जीव मसँग भेट्न कहिले आउला?'

ईश्वरको दृष्टि जीवका ऊपर अखण्ड रूपसँग छ, तर जीव ईश्वरका तर्फ दृष्टि दिँदैन।

राम जीवलाई आफ्नो तुल्याउन तयार छन्, तर यो अभागी जीव उनीसँग भेट्नलाई आतुर कहाँ छ ?

श्रीराम आजानबाहु छन्। कसैले यसको कारण सोध्यो। उनले उत्तर दिए—'मेरा भक्त मसँग भेट्न आउँछन्। तिनमा यदि कोही भक्त मोटो भयो भने उसलाई पनि म अँगालो मार्न सकूँ भनेर मैले आफ्नो हात लामो राखेको हुँ।'

मलाई भेट्नलाई आउने भक्तहरूलाई आलिङ्गन दिनका निमित्त मैले आफ्नू हात लामो राखेको हुँ।

राम बाँदर आदि पशुहरूलाई पनि आलिङ्गन गर्नुहुन्छ। रामजी सबैसँग प्रेम गर्नुहुन्छ। आफ्नो धनुषबाण सदा आफ्नासाथ राख्नुहुन्छ। धनुषबाणको विना रामको दर्शन पाईंदैन। चाहे राज्य सिंहासनमा बसेका हुन्, चाहे अन्तःपुरमा सीताजीका साथमा उनका हातमा धनुषबाण भइहाल्छ। उपनिषद्मा पनि भनेको छ—'प्रणवो हि धनुः।' उपनिषद्मा धनुषलाई ॐकारको रुपमा दिएको छ। ॐकार अर्थात् ज्ञान धनुष हो।

बाण विवेकस्वरूप हो।

धनुष र बाण अर्थात् ज्ञान र विवेकद्वारा सदा सज्जित रहू, किनभने कामरूपी राक्षस नजाने कुनवेला विघ्न गर्न आइपुग्ने हो। कामराक्षस तिम्रो पछि दौड़िरहेछ, तिमीलाई हराउन आइरहेछ। रामका भाँति धनुष-वाणद्वारा सदा सज्जित रहू। ज्ञान र विवेकलाई सतेज राख्यौं भने राक्षसले बाधा पुऱ्याउन सक्दैन। धनुषवाणद्वारा सज्जित भयौ भने राक्षस भाग्नेछ। जसका आँखामा पाप छ, सोही राक्षस हो। राक्षस जीव मात्रका पछि लागेको छ। काम, लोभ, मोह आदि राक्षसै हुन्। जीव मात्रलाई सताउँछन्। जो प्रतिक्षण सावधान रहन्छ, त्यसलाई राक्षसले मार्न सक्दैन।

रामको स्वरूप अद्भुत छ। शूपर्णखा राक्षसी थिई तर पनि त्यसको मनमा रामलाई पतिस्वरूपमा पाउने इच्छा जागेको थियो। हाम्रो हृदय अझ त्यो राक्षसीभन्दा पनि कठोर छ किन भने हाम्रो मनमा रामलाई पाउने इच्छै हुँदैन।

श्रीधर स्वामीले राम-विजय-लीलाकथामा भनेको छ—यज्ञका चारै द्वारको रक्षा राम-लक्ष्मणले गर्थे। उनीहरूले यति रूप धारण गरेका थिए जो सबै द्वारमा राक्षसहरूलाई यिनको उपस्थिति देखिन्थ्यो।

विश्वामित्र आहुति दिन्थे यज्ञकुण्डमा र हेर्थे राम-लक्ष्मणलाई। श्रुति वर्णन गर्दछ—अग्नि भगवान्को मुख। परमात्मा अग्निमुखले आहारा लिनुहुन्छ। अग्निज्वाला प्रभुको जिब्रो हो। ब्राह्मणगण वेदमन्त्रको उच्चारण गर्दै अग्निमा आहुति दिइरहेछन्। विश्वामित्र राम-लक्ष्मणमाथि दृष्टि लगाउँदै यज्ञ गरिरहेछन्।

मनको मलिनतालाई दूर गर्नका निमित्त यज्ञ गर्नुपर्छ। यज्ञ, स्वाध्याय, तप, ध्यानको फल हो मन शुद्धि। मन शुद्धिको फल हो परमात्माको दर्शन।

राक्षसले थाहा पाए विश्वामित्रले यज्ञ आरम्भ गरेका छन्। ती बाधा हाल्न आइपुगे। रामचन्द्रको दर्शन बारंबार हुन गएकाले मारीचको स्वभाव बदलियो। जसको दर्शनले स्वभाव बदलिन्छ, उनै ईश्वर हुन्। मारीचले सोच्यो विश्वामित्रको यस यज्ञमा बाधा पुऱ्याउनु ठीक होइन। आज मेरो मनमा यस्तो विचार किन आइरहेछ। शायद यी बालकहरूलाई देखेर मेरो मन बदलिएको छ। आज मेरो मन वशमा छैन। यी बालकहरूसँग भेट्ने इच्छा भइरहेछ। मारीच थियो तर राक्षस, तर पनि रामको दर्शनले उसको बुद्धि सुध्रियो।

आजकलका मानिस रामदर्शनका निमित्त जान ता जान्छन्, तर दर्शन गरेर पनि यिनको बुद्धि सुध्रिँदैन। रामको दर्शन पाएर पनि बुद्धि नसुध्रिएमा मान तिमी राक्षसभन्दा पनि अधम रहेछौ। रोज रामायण पढ़ोस्, देवदर्शन गरोस् र पनि यदि जीवनमा संयम, सदाचार, सरलता नभए मान तिमी मारीचभन्दा पनि गए-बितेका भयौ।

राम परमात्मा हुनुहुन्छ। उहाँको प्रत्यक्ष दर्शनबाट मारीचको बुद्धि बदलियो भने के आश्चर्य भयो। रामको नक्कल गर्दा-गर्दै र रामकै चिन्तन गर्दा-गर्दै रावणको काम मर्दछ।

रामको संझना गर्नाले सारा जगत् मातृवत् देखिन्छ।

एकनाथ महाराजले राम-रावण युद्धको समयको एउटा प्रसङ्गमा लेख्नुभएको छ—गाढ़ा निद्रामा परेको कुम्भकर्णलाई ब्यूँझाउँदा उसले सोध्यो मलाई किन ब्यूँझाइएको हो?

रावण—'जानकीका निमित्त युद्ध भइरहेको के थाहा छैन?'

कुम्भकर्ण—'तपाईंको इच्छा पूर्ण भयो?' रावण—'अहँ'। कुम्भकर्ण—'तपाईं आफ्नो मायाद्वारा रामको रूप धारण गरेर सीताकहाँ जानुहोस्। तपाईंलाई राम मान्नेछिन् र तपाईंको वशमा भइहाल्नेछिन्।'

रावण—'यस रामका साथमा केही जादूजस्तो लाग्छ। म उसको रूप धारण गर्नका निमित्त उसको रूपको विचार गर्छु तर तुरुन्त मेरो मन बदलिन्छ। जो रूप धारण गर्ने इच्छा हुन्छ त्यसको विचार तर गर्नैपर्छ। जब म रामको रूप मायाद्वारा धारण गरेर हेर्दछु तब सीता मलाई मातास्वरूप देखिन्छिन्। मेरो मनमा कामसम्म पनि रहन पाउँदैन।'

तब कुम्भकर्णले भन्यो—'रामको माया रूपले तपाईंको कामलाई मार्दछ। जसको नक्कली रूप पनि यति प्रभावशाली छ भने उसको मूल रूप तब कति बढ़्ता प्रभावशाली होला? त्यसकारण निश्चय राम परमेश्वर हुन्। तपाईं अतिशय कामी हुनुहुन्छ। फेरि रामको स्मरणले निष्कामी बन्दछ। त्यसकारण राम ईश्वरै हुन्। यस्ता रामका साथ वैमनस्य गर्नु ठीक होइन। देवाधिदेवसँग वैमनस्य गर्ने तपाईं मूर्ख हो। म तपाईंको सहायता गर्न सक्तिनँ। विभीषणको जस्तै म रामको चरणमा आश्रय लिनेछु।'

रावण—'म शत्रुभावले रामको भक्ति गर्छु। मैले एक्लैले मात्रै भक्ति गरें भने मेरो मात्र कल्याण हुनेछ। तर शत्रुभाव राखें भने मेरा सारा वंशको कल्याण हुनेछ। यी सबै राक्षस तामसी

हुन्। तिनीहरू जप, तप, ध्यान, सेवा पूजा पनि गर्न सक्तैनन्। रामचन्द्रका साथ शत्रुता भयो भने युद्ध हुनेछ र रामको प्रत्यक्ष दर्शन हुने छ। रामदर्शनबाट हामी सबैको उद्धार हुनेछ। आफ्ना सारा वंशको कल्याण निमित्त मात्र मैले रामसँग शत्रुता गरेको हुँ।'

यज्ञ गर्दाखेरि तिमीले पनि आफ्नो प्रत्येक द्वारमा राम-लक्ष्मणलाई बसाइदिनु, जप, कथा, श्रवण, नारायणसँग मानसिक मिलन आदि यज्ञै हो, जो गरीबभन्दा गरीब मानिसले पनि गर्न सक्छ।

कति यज्ञ यस्ता छन् जसका निमित्त कुलको श्रेष्ठता र अत्यधिक धनको आवश्यकता पर्छ। विधुर र विधवालाई यी निषिद्ध छन्। प्रायश्चित्त पनि गर्नुपर्छ। साधारण ब्राह्मण मात्र तिनलाई गर्न सक्छन्। धेरै धन खर्च गर्नुपर्छ। केही यज्ञलाई देशकालको मर्यादा पनि तोकिएको छ।

उपनिषद्मा एउटा यज्ञको यस्तो उल्लेख भएको छ जो जाति, समय, स्थल आदिको कुनै प्रकारको बन्धन विना पनि गर्न सकिन्छ। त्यो हो जपयज्ञ। सबै यज्ञहरूमा यो श्रेष्ठ हो। आँखाबाट दर्शन, कानबाट श्रवण र मनबाट स्मरण गर्दै जप गर्‍यौ भने समाधिको अवस्था प्राप्त हुन सक्ला। कृष्ण मिलन महायज्ञ हो।

कृष्णमिलन यज्ञमा श्रद्धा पत्नी हो, आत्मा यजमान हो, शरीर यज्ञ भूमि हो र फल हो परमात्मा विष्णुसँगको मिलन। परमात्मासँगको मिलन महानतम यज्ञ हो। जीवात्मा र परमात्माको मिलन महायज्ञ हो।

यज्ञबाट चित्तशुद्धि हुन्छ। चित्तशुद्धिको फल हो परमात्माको प्राप्ति। सबै इन्द्रियहरू यज्ञमण्डपका द्वार हुन्। यस यज्ञमा काम, क्रोध, लोभ, मोह आदि राक्षस बाधा गर्न आउँछन्। यस महायज्ञमा विषयरूपी मारीच बाधा गर्छ। द्वारमा राम-लक्ष्मणलाई स्थापित गर्‍यौ भने तब काम, क्रोध, वासनारूपी मारीच, सुबाहु विघ्न गर्न आउन पाउँदैनन्।

आँखामा, कानमा, मुखमा, सबै इन्द्रियहरूका द्वारमा राम-लक्ष्मणलाई बसाइदेऊ। यसो गर्नाले मारीच-विषय विघ्न गर्न सक्दैन। मारीच छिट्टो मर्दैन। आफ्ना प्रत्येक इन्द्रियका द्वारमा राम-लक्ष्मणलाई, शब्दब्रह्मलाई परब्रह्ममा आसीन गर्‍यौ भने काम मारीच तिम्रो यज्ञमा बाधारूप हुन सक्दैन। जब तिम्रो जीवन-यज्ञ निर्विघ्न समाप्त होला माया-मारीचलाई—रामचन्द्रजी विवेक वाणद्वारा मार्नु हुन्छ।

जसको चिन्तन मात्र गर्नाले कामको नाश हुन्छ, उही ईश्वर हो।

ज्ञानी महात्मा आफ्ना इन्द्रियहरूका द्वार बन्द राख्छन्। वैष्णवहरू द्वारमा राम-लक्ष्मणलाई स्वागत गर्छन्। भागवतको राहू र रामायणको मारीच विषय दुवै एकनासका हुन्, तुरुन्त मर्दैनन्।

विश्वामित्रको यज्ञ समाप्त पनि भएको थिएन जनकपुरबाट निमन्त्रण-पत्रिका आयो। सीताजीको स्वयंवर हुने भइरहेछ। यज्ञादिबाट निवृत्त भएर राम-लक्ष्मणलाई लिएर विश्वामित्र जनकपुरतर्फ लागे। बाटामा अहिल्याको उद्धार गर्ने प्रसङ्ग आयो। विश्वामित्रले रामलाई एउटा शिला स्पर्श गर्न आज्ञा दिए। यस शिलारूप अहिल्याको उद्धार गर।

राम सोचमा परे। किनभने जो साधक हो उसले तर काठको स्त्रीको पनि स्पर्श गर्दैन।

**न स्पृशेत् दारवी मपि।**

एकादश स्कन्धको एक श्लोकको चरण हो।

रामले भने—'म यसलाई प्रणाम गर्छु।'

विश्वामित्र—'प्रणाम गर्नाले तर केही पनि हुँदैन।' राम—'मैले चरणले छोइदिएँ भने पापको भागी हुने छु।'

राम पापबाट डराउनुहुन्छ। आजकल मानिस पापदेखि डराउँदैनन्। जे मन लाग्छ गर्छन्। पापदेखि डराएर हिँड्यौं भने तब कल्याण हुनेछ। पाप र ईश्वरसङ्ग डरायौं भने मन शुद्ध रहने छ।

राम—'म परस्त्रीलाई वन्दना गर्छु, स्पर्श गर्दिनँ।'

राम परस्त्रीको र सीता परपुरुषको स्पर्श गर्दैनथे।

जहाँसम्म होस्, पर पुरुष र परस्त्रीको स्पर्श गर्नु हुँदैन। ब्रह्मचर्यको यही आदर्श हो। कविहरूले कल्पना गरेका छन्—रामले अहिल्यालाई चरणले स्पर्श गरेनन्। बगिरहेको हावाले रामको चरणधूली उड़ायो जो त्यस शिलामाथि पर्‍यो, फलतः शिला अहिल्या भयो। एकनाथजीले पनि यही भनेको छ। रामचरणको रजमा यस्तो शक्ति थियो जसले अहिल्याको उद्धार भयो।

अहिल्या अर्थात् बुद्धि, कामसुखको मात्र विचार गर्ने बुद्धि जड़-पत्थरजस्तो बन्न जान्छ। कमलो बुद्धि मात्र ईश्वरको नजिक जान सक्छ, जड़-पत्थर जस्तो होइन, कमलो बुद्धि मात्र कृष्णसेवामा पग्लिन सक्छ। कृष्ण कीर्तनले आज आनन्द पाईंदैन किनभने काम-सुखको चिन्तन गर्दै रहनाले बुद्धि पत्थर जस्तो भएको छ। जड़-बुद्धि चैतन्यमयी कसरी हुन सक्छ ? जब कुनै सद्गुरु, सन्त-महात्मा भेटिन्छन् अनिमात्र पत्थर-जस्तो जड़बुद्धि प्रभुको चरणबाट जागृत चेतनायुक्त बन्दछ।

अहिल्या-बुद्धि राम-चरण-रजबाट शुद्ध, सचेतन बनी। अहिल्याले प्रभुसङ्ग प्रार्थना गरिन्, मेरा पतिले मलाई श्राप दिएर ठिकै गरेका थिए किनभने यसै कारणले मैले तपाईंको दर्शन पाउन सकें। त्यसै बखत ऋषि गौतम पनि त्यहाँ आए। उनले पनि भगवान् रामलाई भने, 'मेरी पत्नीको तपाईंले उद्धार गरिदिनुभयो। म तपाईंलाई आशीर्वाद दिन्छु जो तपाईंको विवाह सुन्दर गुणवती कन्याका साथ होस्।'

विश्वामित्र राम-लक्ष्मणलाई लिएर राजा जनकको सभामा आए। यी कुमारहरूलाई देखेर जनक सोच्न थाले यी ऋषिकुमार हुन् या राजकुमार।

उनले विश्वामित्रलाई सोधे—'यी को हुन् ?'

विश्वामित्र—'तिमी महाज्ञानी छौ स्वयं निर्णय गर यी को हुन् ?'

जनकको अर्को नाउँ हो विदेह, जो देहयुक्त भएर पनि देहधर्मबाट अस्पृश्य छ त्यसैलाई विदेह भन्दछन्। विदेह भनेको जिउँदै मुक्त, जनक भनेका शुकदेवजीका पनि गुरु हुन्।

धर्मराज भन्नुहुन्छ—'ब्रह्मानुभवमा जसले विषयरसको भानलाई बिर्सिदेला त्यही ज्ञानी हो। आसक्ति र अभिमानले जीवलाई बाँधिरहन्छ। ज्ञानीले यी दुवैलाई त्याग गरिदिन्छन्।'

सबै इन्द्रियहरू आफ्ना-आफ्ना कार्य र अर्थमा काम गर्दछन्, यस्तो मानेर ज्ञानी कुनै पनि विषयमा आसक्त हुँदैन।

इन्द्रियाणीन्द्रियार्थेषु वर्तन्त इति धारयन्।

यस जगत्मा सबै कुरा गर्दै रहे पनि उहाँ यस्तो तर भावना राखेर काम गर्नुहुन्छ जो आफूले केही गरिरहेकै छैन।

जनक राजाले त्राटक गरे। यी कोही परब्रह्म हुन्। जनक भन्दछन् 'आफ्नो आँखाले म अरूलाई हेर्छु, तर मेरो मन कतै पनि आकर्षित हुँदैन, ममा वैराग्य भरिएको छ। यी कुमारहरूलाई देखेर मेरो मन आकर्षित भइरहेछ। मेरो मनलाई ईश्वरको सिवाय अन्य कसैले पनि आकर्षित गर्न सक्दैन। त्यसकारण यी अवश्य पनि ईश्वर हुन्। ईश्वरका विना मेरो मन कुनै पनि विषयमा जान सक्दैन।' उनलाई आफ्नो मनमाथि कत्रो विश्वास थियो।

जनक भन्छन्—

सहज विराग रूप मन मोरा।
थकित होत जिमि चन्द्रचकोरा॥

त्यसकारण यी राम हुन्—'ब्रह्म जो निगम नेति कहि गावा।'

जनकराजाले रामलाई चिने। उनले भने—'यी ऋषिकुमारहरू होइनन्, राजकुमार पनि होइनन्। वेद जसको वर्णन नेति-नेति भनेर गर्दछन्, शङ्कर जसको सदा सर्वदा चिन्तन गर्छन् तिनै साक्षात् परब्रह्म परमात्मा हुन् यी।'

यी रामले मेरो मन खिँचिरहेछन्; त्यसकारण यी ईश्वरै हुन् भन्ने लाग्छ। यी प्रभु नभएका भएदेखि मेरो मनलाई खिँच्न सक्दैन थिए।

कण्व मुनिको आश्रममा प्रथम मिलनका समय दुष्यन्तले शकुन्तलालाई सोधे—'को हौ तिमी?'

शकुन्तला—'म महर्षि कण्वकी कन्या हुँ।'

दुष्यन्त—'तिमीलाई देखेर मेरो मन चञ्चल भएको छ। त्यसो तर मेरो मन पवित्र छ। ब्राह्मणकन्या मेरा निमित्त मातासमान हुन्। तिमीलाई देखेर मेरो मन चञ्चल भएको छ। त्यसकारण म मान्दछु तिमी मेरी जातिकी हौ। मेरो मन यस कुराको प्रमाण हो। 'प्रमाणमन्तःकरण प्रवृत्तयः।' आफ्नो मनमाथि कति विश्वास थियो।'

शकुन्तला—'तपाईं पवित्र हुनुहुन्छ, महान् हुनुहुन्छ। मेरा पिता हुनुहुन्छ क्षत्रिय विश्वामित्र। कण्व ऋषि तर मेरा पालक पिता हुनुहुन्छ। म क्षत्रियकन्या हुँ।'

जनक राजा भन्नथाले—'आजसम्म म निराकार ब्रह्मको चिन्तन गर्थें। आज मेरो मनले भनिरहेछ निराकार ब्रह्मको चिन्तन छोड़ेर यी सगुण रामको चिन्तन गरे राम्रो हो। मलाई अब लाग्दछ निराकार होइन, साकारको ध्यान गरूँ। यी राम निश्चय ईश्वर हुन्।'

विश्वामित्रले भन्नुभयो—'राजन्, यो तिम्रो दृष्टिको गुण हो। ज्ञानी अभेदभावले चिन्तन गर्छन्। तिम्रो वृत्ति ब्रह्माकार छ, त्यसकारण तिमीलाई यस्तो लागेको हो। अन्यथा यिनी दशरथ राजाका पुत्र हुन्।'

जनक तर महाज्ञानी छन्। उनको प्रशंसा गीतामा श्रीकृष्णले पनि गर्नुभएको छ—

कर्मणैव हि संसिद्धिमास्थिता जनकादयः।

जनकराजाले कर्मद्वारा परमसिद्धि प्राप्त गरेका थिए, अन्यथा गीतामा अरू कसैको पनि प्रशंसा गरेको छैन।

विश्वामित्र, राम र लक्ष्मण जनकपुरको बाहिर एउटा बगैंचामा बसिरहेछन्। सायंकालको सन्ध्योपासना पनि नियमित रूपले गर्दछन्। विश्वामित्रका साथ उनले सत्सङ्ग गरे। रात्रिका समयमा विश्वामित्रको चरण सेवा गर्न थाले। आशीर्वाद मागेर पाइन्न, स्वयं हृदयबाट पाइन्छ।

विश्वामित्रले पनि यी राजकुमारहरूलाई हृदयदेखि आशीर्वाद दिए—'कल्याण होस् तिमीहरूको।'

लक्ष्मण रामको सेवा गरिरहेछन्। उनी सोच्न थाले भोलिदेखि सम्भवतः चरणसेवाको लाभ पाउन नसकुँला। भोलि ठूला दाजुको विवाह हुने, त्यसकारण उनको चरण-सेवाको अधिकार अब भाउजुले मात्र पाउने होला। सेवा गर्ने अन्तिम दिन मेरो यही हो। भोलिदेखि म सेवा गर्न नपाउँला। रामको सेवाविना मलाई शान्ति हुँदैन।

सेवा र स्मरणविना जसलाई चैन मिल्दैन, त्यही सच्चा वैष्णव हो, जो सेवा र स्मरणका निमित्त बाँच्दछ, त्यही वैष्णव हो।

लक्ष्मणलाई बड़ो दुःख हुन थाल्यो अब सेवाको अधिकार र अवसर खोसिने भयो। उनको मन व्याकुल हुन लाग्यो। उनको हृदय भरियो। आँखामा बलिन्द्र आँसु आउन थाले। प्रभुले देख्नु भो भाइ लक्ष्मण रोइरहेछन्। प्रभुले लक्ष्मणलाई रुनाको कारण सोध्नुभो 'किन रुन्छौ ? के आमालाई ता संझिएनौ ? तिमी रोइदियौ भने मलाई साह्रै दुःख लाग्छ।'

रामचन्द्रको प्रेम आदर्श प्रेम थियो। लक्ष्मणले संकोचवश केही बोल्न सकेका छैनन्। राम लक्ष्मणको हृदयलाई चिन्नुहुन्छ। उहाँले लक्ष्मणलाई भन्नु भो—'भाइ, मेरो विवाह भएपछि दाहिने चरणको सेवा तिमीले गर्नु र बायाँ चरणको सेवा सीताले गर्लिन्। तिमीलाई देखिनँ भने मलाई निद्रा लाग्दैन। बिहापछि पनि म तिमीलाई छोड्ने छैन। चाहे तिम्री भाउजुलाई छोड्नुपरे पनि तिमीलाई छोड्ने छैन।'

राम सबैका अन्तर्यामी हुनुहुन्छ, तर लक्ष्मण रामको पनि अन्तर्यामी छन्।

तब यस्तो थियो रामको बन्धुप्रेम।

भोलिपल्ट प्रातःकाल भएपछि लक्ष्मण सबैभन्दा पहिले उठे।

स्त्रीको धर्म हो पतिको भोजनभन्दा पहिले भोजन र शयनको पहिले शयन नगर्नु। यही धर्म सेवकको पनि हो।

विश्वामित्र शालिग्रामको पूजा गर्थे, त्यसकारण राम-लक्ष्मणलाई पूजाका निमित्त फूल, तुलसीदल आदि लिन उनले उद्यानमा पठाए।

राम, लक्ष्मण पुष्प र तुलसीदल जम्मा गर्न भनी उद्यानमा पस्न थाले। मालीलाई 'काका' भनेर बोलाए। मालीले पछिल्तिर फर्केर हेर्‍यो राम-लक्ष्मण उसलाई बोलाइरहेका थिए। उसले भन्यो—'म एउटा अधम सेवक हुँ।' रामले भने—'तिमी सेवक किन नहौ, तर तिमी हामीभन्दा ठूलो छौ।' रामको विनयले माली उनलाई बारम्बार नमस्कार गर्न थाल्यो।

राम सबैलाई एकसमान मान्दथे। त्यसकारण उनको वनगमनका वेलामा अयोध्याका समग्र प्रजाले अश्रुवर्षा गर्दा कुनै आश्चर्य भएन।

राम-लक्ष्मण तुलसीलाई पनि वन्दना गर्छन्। तुलसीको नित्य वन्दना गर्नेलाई कहिल्यै बिरामी हुनु पर्दैन।

प्रणाम नगरी तुलसीदल नलेऊ। त्यसलाई नङले नटिप्नु जहिले पनि तुलसीदल टिप्नुपर्‍यो भने उसलाई प्रणाम गरेर भगवान्‌को चरणारविन्दमा चढ़ाउनका निमित्त अनुमति माग्नु र टिप्नु। तुलसी राधाजीकी अवतार हुन्। सायङ्काल भएपछि तुलसी स्पर्श नगर्नु। प्रतिदिन बिहान-बेलुका तुलसी र पार्वतीको पूजा गर। यसो गर्नाले सौभाग्य अखण्डित रहन्छ।

यसै समयमा सीताजी पनि उद्यानमा आइन्। राम र सीताको दृष्टिको मिलन भयो। यस दृष्टिमिलनको कथा मात्र तुलसीदासजीको रामचरित्र मानसमा छ। बाल्मीकि रामायण, भावार्थ रामायण, आनन्द रामायण, अध्यात्म रामायण आदिमा छैन।

सीताजीले जगदम्बालाई प्रणाम गरेर रामजस्ता पति मागिन्। सीताजी प्रार्थना गर्छिन्—

जय जय गिरिवर राज किशोरी।
जय महेश मुखचंद चकोरी॥
देवि पूजि पदकमल तुम्हारे।
सुर नर मुनि सब होहि सुखारे॥

रामलक्ष्मण पुष्पादि लिएर फर्किआए र विश्वामित्रलाई भने जुन कन्याको स्वयंवर हुन गइरहेछ उनी पनि उद्यानमा आएकी थिइन्। रामको स्वभाव बड़ो सरल छ। उनको मनमा छल-कपट छैन।

# सरल सुभाउ छुअत छल नाहीं।

विश्वामित्रले भने—'वत्स ! म जान्दछु यस समय प्रतिदिन उनी उद्यानमा आउँछिन्, त्यसैले मैले तिमीलाई त्यहाँ पठाएको थिएँ जो उनले तिमीलाई देखून्।'

स्वयंवरको समय आयो। राजा जनकले राजसभामा भने—'मेरी पुत्री तीन वर्षकी छँदा उनी यस धनुषको घोड़ा बनाएर खेल्दथिन्। यो धनुषलाई जसले भङ्ग गर्ला तिनैसँग म आफ्नी पुत्रीको विवाह गरिदिनेछु।'

यस सभामा रावण पनि उपस्थित थियो। विना कारण क्लेश गर्ने, आफ्नो जयकार स्वयं गर्ने, जो आत्मप्रशंसा गर्दै फिर्ने हो त्यही रावण हो। यस सभामा ऊ आफ्नो जयजयकार गराउन थाल्यो। विना कारणनै राजा जनकसँग झगड़ा गर्न खोज्यो। धनुष उठाउने कोशिश गर्दै त्यसले आफ्नो जयजयकार गराउन थाल्यो।

आफ्नो प्रशंसा आफूले स्वयं गर्ने रावण हो।

पार्वतीले शिवजीलाई भन्नुभयो—तपाईंको शिष्य रावण बहुतै अभिमानी भयो। केही यस्तो उपाय गरौं जो उसले धनुष उठाउन नसकोस्। तीन सय शिव-सेवक सूक्ष्म रूप धारण गरेर त्यस धनुषमाथि बसे।

रावणले धनुष उठाउन सकेन र भरिसभामा उसको शेखी टुट्यो। यसो भएपछि अन्य राजाहरू पनि सावधान भए। जब महाबलवान् रावणलाई हार खानुपर्‍यो भने हाम्रो पो के तागत ! धनुष उठाउनलाई सब अकमकाउन थाले।

विश्वामित्रले रामचन्द्रलाई धनुष उठाउने आज्ञा दिनुभयो। अनि रामले प्रणाम गरेर आशीर्वाद लिएर धनुषभङ्ग गर्नलाई निस्कनु भो।

सीताजी प्रार्थना गर्न लागिन्, 'यस पटक धनुष पुष्प जस्तो भइदेओस्।' रामजीले धनुषलाई प्रणाम गरेर उठाउनुभयो र ताँदो चढ़ाउन तान्नु भएको थियो त्यो दुइ टुक्रा भइहाल्यो।

विश्वामित्रले भन्नुभयो—'अब सीताजी बाहिर आऊन्। हामी उनको दर्शन गर्छौं।' सीताजी वरमाला लिएर बाहिर आइन्।

यता रामचन्द्र सोचमा पर्नुभयो, 'माता-पिताको आज्ञा विना विवाह कसरी गरूँ ?' सुन्दर राजकन्या विजय माला लगाइदिन आइन्, तर माता-पिताको आज्ञाविना रामचन्द्रले त्यसलाई स्वीकार गर्न चाहनुभएन। सीताजी माला पहिराउन प्रयत्न गरिरहेकी छन् तर रामचन्द्रजी उनीभन्दा अलिक अल्गो भइदिंदा माला पहिराउन सकेकी थिइनन्, हार पहिराउनका निमित्त उनले जसै हात लम्काएकी थिइन् चुरामा रामको प्रतिविंब देखिन लागेपछि उनी तल्लीन भइन्। रामचन्द्र शिर निहुराउनु हुन्नथ्यो। यस्तो देखेर विश्वामित्र नजीक आई कारण सोध्नुभयो। अनि रामले भन्नुभयो—

'मेरा लक्ष्मण अविवाहित छन् उनको पनि विवाह गर्नुपर्छ र त्यो पनि मभन्दा पहिले।' राम आफ्नो सानो भाइलाई बिर्सनु हुन्न।

विश्वामित्र भन्नुहुन्छ—'मेरो रामको जति प्रशंसा गरे पनि त्यो कमै हुन्छ।'

राजा जनकले घोषणा गरे आफ्नी अर्की पुत्रीको विवाह लक्ष्मणका साथ गरिने छ। राचन्द्रलाई आनन्द लाग्यो र सीताजीको वरमालालाई उहाँले स्वीकार गर्नुभयो।

जनक राजाका सेवक कुम-कुम, पत्रिका लिएर अयोध्या आए। दशरथजीले पत्रिका पढ्नु भयो। वैदिक विधिपूर्वक विवाह सम्पन्न गर्नका निमित्त अयोध्याका प्रजाका साथ जनकपुर आउने निमंत्रण थियो। दशरथजीको हृदय आनन्दले भरियो। उहाँले जनक सेवकहरूलाई पुरस्कार दिन थाल्नुभयो तब ती सेवकहरूले भने—हामी यसलाई स्वीकार गर्न सक्दैनौं, किनभने हामी कन्यापक्षका हौं।

प्रातःकालमा वशिष्ठ तथा अयोध्याका प्रजासाथ राजा दशरथले जनकपुरको दिशातर्फ प्रस्थान गर्नुभयो। बाटामा शकुन पनि राम्रै भए। दुइ पवित्र ब्राह्मणरू भेटिए तथा शिरमा पानीको माटाको गाग्री र बालकलाई डोऱ्याइरहेकी सौभाग्यवती नारी पनि भेट भइन्।

जन्ती ( बरियाँत ) जनकपुर आइपुग्यो। जनक र दशरथको मिलन भयो। राम-लक्ष्मणलाई लिएर विश्वामित्र पनि आउनुभयो। दुबै छोराहरूले पितालाई दर्शन गरे।

नारदजीले विवाहको मुहूर्त भने—'मार्गशीर्ष मासको शुक्ल पक्षको पञ्चमी र समय गोधूलि वेलामा।'

जन्ती धनतेरसका दिन आएका थिए र वसन्त पञ्चमीपछि फर्किएका थिए।

रघुनाथजीको जन्तीमा कामदेव घोड़ा बनेर आए। काम अश्वमा बसेर राम विवाह गर्न जानुभयो। जब साधारण मनुष्य विहा गर्न जान्छ तब काम उसैमाथि सवार भइहाल्छ।

शुकदेवजी वर्णन गर्नुहुन्छ—'राजन्, परमानन्द भएको छ।'

भगवान्‌लाई सुवर्णरचित सिंहासनमा विराजमान गराइयो।

एक-एक राजकुमारलाई एक-एक कन्याको दान दिनु छ। सबै ब्राह्मण मङ्गलाष्टक भन्न थाले।

रामो राजमणिः सदा विजयते रामं रमेशं भजे।
रामेणाभिहता निशाचरचमू रामाय तस्मै नमः॥
रामान्नास्ति परायणं परतरं रामस्य दासोऽस्म्यहं।
रामे चित्तलयः सदा भवतु मे भो राम मामुद्धर॥

विधिपूर्वक राम-सीताको विवाह भयो।

जनकले भने—मैले कन्याको दान दिएको छु।

राम—'प्रति गृह्णामि', म स्वीकार्दछु। राम सरल स्वभाववाला हुनुहुन्छ।

अब लक्ष्मणजीको पालो आयो। लक्ष्मणजीले भने—'हामी क्षत्रिय हौं। हामी दान लिँदैनौ, दिन्छौं। म प्रतिगृह्णामि भन्दिनँ।'

ब्राह्मण—'तपाईंका ठूला दाजुले भन्नु भएको छ।' रामचन्द्र उनलाई संझाउनथाल्नुभो 'लक्ष्मण, यो तर भन्नै पर्छ।'

लक्ष्मण तपाईं अरू जे भन्नुहुन्छ त्यो गर्न तयार हुनेछु। तर म कन्यालाई दानको रूपमा स्वीकार गर्न सक्तिनँ।

विश्वामित्रले उनलाई संझाए 'ती शब्दहरूको उच्चारणविना विवाह-विधि पूर्ण हुँदैन। गुरुजीले लक्ष्मणलाई सम्झाएपछि लक्ष्मणले भने—प्रतिगृह्णामि।'

विवाह-विधि सम्पन्न भयो। वर-वधू भोजन गर्न थाले। भोजनको समय यदि केही मनोरञ्जन गरियो भने भोजन राम्ररी रुच्दछ। जनकपुरका स्त्रीहरू यताउति नजिकै बसेर विनोद गरिरहेछन्। यी युवक भाग्यशाली रहेछन्। अन्यथा यस्ता रूपवती कन्याहरू यिनलाई कहाँ भेटिन्थे। दशरथजीका कोही सन्तानै थिएनन्। यो तर बेस भयो उनका पत्नीहरूले खीरको प्रसाद खाएर यो वृद्धावस्थामा पनि उनलाई सन्तान प्राप्त भयो।

लक्ष्मणजीलाई यो ठट्टा मन परेन। उहाँले भन्नुभयो—अयोध्यामा खीरको अहाराले सन्तान प्राप्त हुँदा रहेछन्, तर जनकपुरीमा आएर हामीले यो थाहा पायौं यहाँ स्त्रीहरूलाई त्यसो पनि नगर्नुपर्ने रहेछ। यहाँ तर पृथ्वीतलबाट सन्तान उत्पन्न हुँदा रहेछन्।

विवाहका पछि 'एकी-बेकी' नाउँ गरेकी खेल खेलियो, जबसम्म पति-पत्नीको स्वभाव एक हुन सक्तैन, तबसम्म विवाहित जीवन सफल हुन सक्दैन। दुइ शरीर तर एक मन मात्रै विवाह हो। विवाहका पछि दुवै एकै भइहाल्छन्। अद्वैतको सिद्धान्तलाई विवाह पहिलो खुड्किलो हो।

सीताजीले मुट्ठीभित्र कौड़ी लुकाएर सोधिन्—'एकी या बेकी ? ( अर्थात् मुट्ठिभित्र एक कौड़ी छ वा दुइटा ? ) रामले भने—एकी। सखीहरू हाँस्न थाले। भन्न लागे आजसम्म एकलै थियो अब बेकी ( दुइ ) भयौ, फेरि पनि भन्दछौ एकी।' लक्ष्मणले भने—'ठूलो दाजुको कुरा बिल्कुलै ठीक छ। उहाँको भाषामा गूढ़ रहस्य छ। विहा भएपछि बेकी ( दुइ मानिस ) एक ( एक ) हुन्छन्। राम र सीता अब दुइ छैनन्, एक हुन्, अभिन्न हुन्।'

सबैलाई आनन्द भयो तर आनन्दको तृप्ति भएन। कनक-सिंहासनमा रामचन्द्र र सीताजी विराजमान छन्।

रामचरित अनन्त छ। रामको विवाह-कथा जसले प्रेमसङ्ग सुन्ला, त्यसको सदा मङ्गल हुनेछ।

विवाहको सबै विधि पूर्ण भएपछि रङ्ग-महोत्सव भयो र अब सबैले अयोध्यातर्फ प्रस्थान गरे।

चारै भाइहरूको विवाह भयो। अब मेरा आँगनमा चार-चार लक्ष्मीनारायण आएका छन्। यस्तो मानेर कौशल्याले पूजा आदि विधिले उनको हार्दिक स्वागत गरिन्।

साक्षात् महालक्ष्मी सीताजी जनकपुर छोड़ेर जान लागेकी छिन्। म गएपछि यिनीहरूको के होला ? माताजीले आफ्नो आँचलमा चामल भरेर चारैतर्फ छरिदिइन्। आज पनि मिथिलामा चामल धेरै पाक्दछ।

अयोध्याका प्रजा सीतारामको दर्शन गरिरहेछन्। अतिशय आनन्द भयो। विश्वामित्रको पनि बड़ो सम्मान भयो। घर आएपछि राजा दशरथले रानीहरूका समक्ष जनक राजाको धेरै-धेरै प्रशंसा गरे।

कन्या ( वधू )-का माता-पिताको पशंसा गर्नाले उनी प्रसन्न हुनेछिन्। तिमीले प्रेम गऱ्यौ भने अरूले पनि तिमीसङ्ग प्रेम गर्नेछन्। जनकराजाको प्रशंसा सीताजीले पनि सुनिन्।

दशरथजीले भने—'यी अर्काकी छोरी हाम्रा घर आएकी छन्—जस्ता प्रकारले हाम्रो आँखाको रक्षा परेलाले गर्छ सोही प्रकार सीताजीको पनि रक्षा गर्नु।'

वधू लरिकनीं पर घर आई।<br>
राखेहु नयन पलक की नाईं॥

सूतजी सावधान गराउनुहुन्छ।

आनन्दका दिन अलि छिटै बितिजान्छन्। रामचन्द्रजी सत्ताईस वर्षको हुनु भयो र सीताजी अट्ठार वर्षकी।

एक दिन दशरथ राजसभामा विराजमान थिए। उनको मुकुट अलिकति टेढ़ो भयो। दर्पणमा हेरे तब मुकुटका साथ-साथ उनले यो पनि देखे उनका कानका केही कपाल सेता हुन थालेका रहेछन्। कानको कपाल सेतो हुन थाल्यो भने संझ वृद्धावस्था धेरै बढ़ेर गइरहेछ। दशरथले सोचे, 'यी सेता केश मलाई उपदेश दिइरहेछन् तिमी अब अतिशय वृद्ध भएछौ। रामको राज्याभिषेक किन गर्दैनौ ? राम-सीताको राज्याभिषेक मैले आफ्नै आँखाका सामुन्ने गरें भने असल होला। त्यसो तर मेरा सबै इच्छाहरू पूर्ण भइसकेका छन् यही एकमात्र बाँकी रह्यो।'

इच्छाहरूको कुनै अन्त छैन। त्यसकारण यसलाई त्यागेर भगवद्भजन गर्नु उत्तम हो।

दशरथ राजाको इच्छाका विरुद्ध कसले के भन्न सक्छ र। दशरथको राज्य त्यसो तर प्रजातन्त्र हो। मंत्रीगण र महाजनहरूको अनुमति विना रामको राज्याभिषेक गर्न सकिँदैन। प्रजाको पनि

इच्छा थियो राम राजा बनून्। राजा दशरथले मन्त्रीगण तथा महाजनहरूलाई भने, 'यदि तपाईंहरूले अनुमति दिनुहुन्छ भने राजपद दिने विधि हामी गरौं।'

मन्त्री सुमन्तले भने—'धन्य हो। हामी पनि यही चाहन्थ्यौं तर संकोचवश बोल्न सकेका थिएनौं।'

त्यसै समयमा राजसभामा वशिष्ठजीको आगमन भयो। सबैले उनको सत्कार गरे। दशरथले उनलाई प्रणाम गरेर भने—'प्रजाको इच्छा छ रामको राज्याभिषेक गरियोस्। तपाईंको हामी आज्ञा चाहन्छौं।'

वशिष्ठजी—'राजन्, विचार चाहिँ राम्रो हो।'

दशरथजी—'महाराज, कुनै शुभ मुहूर्त भन्नुहोस्।'

वशिष्ठजीले सोचे आजको मुहूर्त बताऊँ, तर उनी जान्दथे आज उनको राज्याभिषेक हुन पाउँदैन। त्यसकारण उनले भने—'राम जुन दिन, जहिले पनि राज्यपद ग्रहण गर्नुहुन्छ त्यही श्रेष्ठ दिन हो।'

वशिष्ठजीको गूढ़ार्थ वाणी दशरथजीले बुझ्न सकेनन्। उहाँले भोलिपल्टै राज्याभिषेकको तयारी गर्ने आज्ञा दिए।

मन्त्री सुमन्त्रले भने—'राजन् ! सबै तयारी भैसकेको छ।'

दशरथजी—'वशिष्ठजी, रामलाई यो समाचार तपाईंले दिनुभएका खण्डमा असल हुने थियो। तपाईं कुलगुरु हुनुहुन्छ।'

तब वशिष्ठजी रामचन्द्रजीको आवासमा जानुभयो। रामले भन्नुभयो—'तपाईंले मकहाँ आएर मलाई पवित्र गरिदिनु भयो।'

वशिष्ठजी—'तिमी विनयका मूर्ति हौ। त्यसकारण यस्तो कुरा स्वाभाविकै हो। भोलि तिम्रो राज्याभिषेक हुन्छ।' राज्याभिषेकको कुरा सुनेर सबैजना आनन्दित भए, तर राम भने केही उदास देखिनुभो। उहाँले वशिष्ठजीलाई सोध्न थाल्नुभयो—'के मलाई एक्लै राजा बन्नु छ ?'

वशिष्ठजी—'राजा तर एउटै मात्र हुन्छ।'

रामजी—'होइन, होइन हामी चारै भाइहरूको राज्याभिषेक हुनुपर्छ। मेरा भरत, लक्ष्मण र शत्रुघ्नलाई पनि राजा बनाउनुहोस्।'

वशिष्ठले मन्द-मन्द हाँसेर भन्नुभयो—'म तिमीलाई कसरी संझाऊँ राजा एउटै व्यक्तिलाई बनाइन्छ। जो जेठो हुन्छ ऊ मात्र राजा हुन्छ र तिमी जेठा भयौ। सबैको यही इच्छा भयो सीताजीका साथ तिम्रो राज्याभिषेक होस्। भोलिदेखि रामराज्यको आरम्भ होला।'

त्यहाँ लक्ष्मण पनि आइपुगे। रामले उनलाई भन्नुभो—'भाइ, पिताजी भोलि मलाई राजा बनाउन लाग्नुभएको छ। म नाममात्रको राजा रहनेछु। अन्यथा राज्य तिमीहरू सबैको हो।'

राम सबैका अन्तर्यामी हुनुहुन्छ तर लक्ष्मण रामको पनि अन्तर्यामी हुनुहुन्छ। रामलाई लक्ष्मण बहुतै प्रिय हुनुहुन्छ त्यसैले उहाँ भन्नुहुन्छ, 'लक्ष्मण, ती राज्यलक्ष्मी तिम्रै हुन्। तिमीले जसो

परमार्थमा यदि केही भूल भयो भने शायद क्षमा गर्दछन् तर व्यवहारको सानोभन्दा सानो भूल पनि मानिस क्षमा गर्न सक्दैन। परमात्माको ठूलो भूल पनि क्षमा गर्दिन्छन्। व्यवहार बड़ो कठोर छ। व्यवहारमा अत्यन्त सावधान हुनुपर्छ।

व्यवहार गर तर व्यवहारमै चाहिँ नडुब। जबसम्म साधु-महात्मालाई मुठीभर अन्नको जरूरत पर्छ तबसम्म उनलाई पनि गृहस्थीको भाँति व्यवहार गर्नुपर्छ। जबसम्म शरीर छ, व्यवहार छोड्न सकिँदैन। व्यवहार गर तर त्यसभन्दा टाढ़ै बसेर।

व्यवहार गर्दाखेरि आत्मस्वरूपसँग सम्बन्ध नराखेमा पाप हुन्छ। मनका दुइ भेद छन्—सूक्ष्म र स्थूल। मनको स्थूल अंश चाहे व्यवहारसँग लागिराखोस् तर उसको सूक्ष्म अंशलाई चाहिँ भगवान्सँगै लगाइराख्नुपर्छ। जब पनिहारी ( पानीको घैंटो शिरमा राखेर हिंड्ने ) आफ्नो शिरमाथिको पानीको घैंटो उठाएर हिँड्छे, तब उसको स्थूल मन सखीहरूको कुरामा लागिरहन्छ तर सूक्ष्म मन चाहिँ पानीको घड़ामै अड्किरहन्छ।

परमार्थ सरल छ, तर सांसारिक व्यवहार बड़ो संकुल छ। व्यावहारिक कामकाजका समयमा भगवान्लाई कहिल्यै नबिर्सनु।

जस्ता प्रकारले स्त्री आफ्ना बालकमा आफ्नो सूक्ष्म मन राखेर घरको कार्यभार सम्हाल्दछे सोही प्रकार सूक्ष्म मनलाई परमेश्वरका साथ छोड़ेर व्यवहार गर्‍यौ भने सफल हुनेछौ।

कौशल्याकी दासीले मन्थरालाई छेड़ हानेपछि उसको मनमा मत्सर जागेर आयो। ऊ ईर्ष्याको अग्निमा पिल्सिन थाली। त्यसले कैकेयी नजिक आएर स्त्री चरित्र गर्न शुरू गर्दिई। कैकेयीको अगाड़ि ठूलो स्वरले रुन थाली। कैकेयीले सोधिन्—'किन रुन्छेस् हँ तँ ! के लक्ष्मणले तँलाई कुनै सजाय दिए कि क्या ?'

मन्थरा तर विना केही भनी सोझै रोइरहेकी थिई। कैकेयीका हृदयमा रामका निमित्त स्नेह छ र उनी रामको कुशलमङ्गल सोद्धछिन्। 'राम कुशलसाथ छन् ?' त्यसो तर दुलहीको कुशलताको सोधपूछ गर्नुपर्ने हो तर राममा अतिशय स्नेह भएर उनको मात्रै समाचार सोधिरहिछन्।

मन्थरा भन्नलागी—'अँ, राम आनन्दमा हुनुहुन्छ। आनन्दमा किन नहुनु ? भोलि उनको राज्याभिषेक हुने भइरहेछ।' कैकेयीले मन्थराबाट यो समाचार सुनेपछि उसलाई मालाको उपहार दिइन्। कैकेयीको मनमा अहिलेसम्म कलिले प्रवेश पाएको थिएन, तर मन्थराले सो माला फ्याँकिदिई। सबै आनन्दित थिए, तर मन्थरा भने बेचैन थिई।

कैकेयीले भनिन्—'तँ मूर्ख रहिछस्। सूर्यवंशको यही परम्परा छ जेठो छोराले राजा हुने। मैले रामको कतिपटक परीक्षा गरें। उनी कौशल्याभन्दा पनि बढ़ी प्रेम मलाई गर्छन्।' कैकेयी सोझी छन्। मन्थराको स्पर्श भएपछि मात्र उसको पनि मनमा पाप जाग्ने भयो। मन्थराले स्त्री चरित्र देखाउन शुरू गरिदिई। रुँदै पृथ्वीमा पछारिँदै, स्वाँक-स्वाँक गर्दै भन्न थाली—'चाहे राम राजा

भन्नेछौ त्यस्तै हुनेछ।' लक्ष्मणलाई अत्यन्त आनन्द भयो। उनलाई स्वयं राजा हुने इच्छा छँदै थिएन। दाजु सिंहासनमा राज हुनुहोला र म चामर लिएर सेवा गर्ने छु। लक्ष्मणको बन्धुप्रेम दिव्य छ।

आज सारा नगरलाई सुशोभित गरिएको छ। वशिष्ठजीको आज्ञानुसार दशरथले पनि आज्ञा दिए। हृदय आनन्दले उम्लिरहेछ। दशरथको राज्यकालको यो अन्तिम राजसभा हो। यो सूर्यवंशको पवित्र सिंहासन हो। जुन राज्यासनमा कहिले रघु, भगीरथ, दिलीप आदि पनि बसेका थिए, त्यसलाई प्रणाम गर्दै भने—'आजसम्म म तिम्रो काखमा थिएँ। भोलि मेरा राम त्यहाँ छन्। उनको रक्षा गर्नू।'

सारा अयोध्यामा कुरा फैलियो। सारा नगरमा आनन्दको लहर दगुर्‍यो, तर देवहरूलाई दुःख भयो। यदि रामले भोलि राज्यपद ग्रहण गरे भने रावणको नाश कसले गर्ला ? रावण र उसका राक्षसले धेरै सताइरहेछन्। देवहरूले विघ्नेश्वरी देवीको आह्वान गरे। माताजी आउनुभयो।

देवहरूले विघ्नेश्वरीदेवीसँग भने—'अयोध्यामा गएर रामको राज्याभिषेक प्रसङ्गमा केही बाधा उपस्थित गर्नुहोस्। राम तर सुख-दुःखभन्दा टाढ़ा हुनुहुन्छ। उहाँ आनन्दरूप हुनुहुन्छ र दशरथको पनि सद्‌गति हुनेवाला छ।'

महात्माहरूले भनेका छन्—'कसैको सम्पूर्ण सुख तर कालले पनि हेर्न स्कदैन।' राजा दशरथको सुखलाई कालको अशुभ नजर लागिसक्यो।

कालले माता विघ्नेश्वरीमा प्रवेश गर्‍यो। विघ्नेश्वरी अब विचार गर्न थालिन् अब के गरूँ ? कसको शरीरमा प्रवेश गरूँ ? विचार गर्दै-गर्दै उनको मनमा मन्थराको संझना भयो। मन्थराको जन्म कैकेय देशमा भएको थियो। विघ्नेश्वरीले मन्थरामा प्रवेश गरिन्। मन्थरा अयोध्यानगरमा घुम्दै नगरको साज-श्रृङ्गार हेर्नथाली। उसले कसैलाई सोधी—'यो कुनचाहिँ उत्सवको निमित्त तयारी भइरहेछ ?' मानिसहरूले भने—'के तिमीले अहिलेसम्म शुभ समाचार पाएकी छैनौ ? भोलि राजकुमार रामचन्द्रजीको राज्याभिषेक हुने भइरहेछ।'

महात्मा भन्दछन्—'कौशल्याबाट एउटा भूल भयो।' तब एउटी दासी दगुर्दै आई र कौशल्यालाई राज्याभिषेकको समाचार सुनाई तब उहाँले आनन्दित भएर दासीलाई एक मोतीको हार दिनुभयो र भन्नुभयो भोलि मेरो छोरा राम राजा बन्यो भने तिमीलाई दुइ-तीन गाउँ बिर्ता दिने छन्। रामले तिमीलाई मैलेजस्तै सम्मान दिनेछन्। दासी आनन्द मानेर घरतर्फ जान लागेकी वेलामा बाटामा मन्थरासँग भेट भयो। मन्थराले आनन्द मानेको कारण सोधी। दासीले भनी—'भोलि राम राजा हुनेछन्। हेर मात्र सही, माता कौशल्याले मलाई यो मोतीमाला दिएकी। राजा रामले भोलि मलाई दुइ गाउँ बिर्ता दिनुहुनेछ। म कौशिल्याकी दासी जो हुँ। तिमीले तर केही पनि पाइनौ।'

कौशिल्या आफ्नी दासीलाई थोर बहुत दिइन् तर आफ्नी सखीका दासीहरूलाई केही पनि दिइनन्। मन्थरा आदिलाई पनि केही न केही दिएको भए त्यो विघ्न टर्न सक्थ्यो।

बनून् या भरत। मलाई के लिनु-दिनु छ ? म तर दासीकी दासी रहने हुँ। जसको भलाई गर्न खोज्छु उही मेरो विरुद्ध भइदिन्छ, मेरो केही स्वार्थ छैन। कुरा तिम्रै बिग्रिरहेछ। म चाहन्छु तिम्रो बिग्रिन गइरहेको कुरा सुधारिदिऊँ, मेरो स्वभावै यस्तै भइगयो।'

कैकेयी मन्थराको कपटपूर्ण वाणीमा फँसिन्। मेरा निमित्त उसलाई प्रेम छ, त्यसैले ऊ मलाई भन्न आएकी छ। उनले मन्थरालाई थप्थपाइन्। कैकेयीले मन्थराको जसै स्पर्श गरिथिन् उनको मनमा कलिले प्रवेश पाइहाल्यो।

पापीको कहिल्यै स्पर्श नगर्नु। शास्त्रमा दोषहरूको वर्णन गरेको छ। कसैको स्पर्श विना कारण नगर।

कैकेयी—'मन्थरा, साँच्चि, साँच्चि भन्, तँलाई के भएको छ ?'

मन्थरा—'मलाई त्यसो तर केही भन्नु छैन तर तिम्रो जो अहित हुन गइरहेछ, त्यसलाई मैले हेर्न सकिनँ। म तिम्रो बिग्रेको कुरालाई बनाइदिन चाहन्छु मेरो तर आफ्नो कुनै स्वार्थ छैन।'

कैकेयी—'भन्न, मैले अब के गर्नुपर्‍यो ?'

मन्थरा—'कैकेयी, तिमी बड़ी सोझी छौ। तिमी मान्दछौ राजा तिम्रो हातमा हुनुहुन्छ, तर पुरुष झूठा हुन्छन्। उहाँ तिम्रो भनाइमा हुनुहुन्न, उहाँ कौशल्याको कुरामात्र मान्नु हुन्छ। कौशल्याले तिमीलाई आफ्ना बाटाबाट पन्साउन षड्यन्त्र रचेकी छन्। पन्द्र दिनदेखि रामको राज्याभिषेकको तयारी भइरहेछ तर तिमीलाई पत्तोसम्म छैन। दशरथ बड़ो कप्टी हुनुहुन्छ। उहाँ कौशल्यासँग मात्र प्रेम गर्नुहुन्छ, तिमीसँग चाहिँ प्रेम गरेको जस्तो देखाउनुहुन्छ। रामको राज्याभिषेक गर्न यति चाँड़ो किन गरिरहिएको छ ? कौशल्याले भनेकैले भरत-शत्रुघ्न मामाघर पठाइएका हुन्। देशका सबै राजाहरूलाई निम्ता पठाइसकेको छ, तर भरत-शत्रुघ्नलाई चाहिँ कसैले संझना पनि गर्दैनन्। तिमीलाई तर केही थाहै छैन। बस्, आरामसँग सुतिराख।'

कैकेयी—'हो, तेरो कुरा बिल्कुल ठीक छ। मेरो कोही पनि छैन। तैं भन् म के गरूँ अब ?'

मन्थरा अझै पनि विष वान्ता गर्दैछे। राम राजा भएपछि तिम्रो कसैले सेवा गर्ने छैनन्। लक्ष्मणलाई मन्त्रीपद दिइनेछ र भरतलाई कारावास। तिमीलाई कौशल्याको दासी बन्नुपर्नेछ, तिम्रो रानीपद खोसिलिइने छ। कौशल्याले राजालाई तिम्रो अधीन बस्न दिन चाहन्नन्। म यी सबै देख्न सक्तिनँ।

कैकेयी—'म गर्न पो के सक्छु ? तीन दिनदेखि मैले बड़ो अशुभ स्वप्ना देखिरहेछु। ती अशुभ स्वप्न उसको विधवा हुने पूर्व सूचना थियो तर उसले यो कुरा बुझ्न सकिन। ऊ यति मात्र सोच्थी मेरो भरतको दुर्दशा हुन गइरहेछ।'

मन्थरा—'बाजी अझै पनि तिम्रो हातमा छ। तिमीले राजासँग दुइ वरदान माग्नु छ। त्यो आजै तिमीले मागिहाल।'

कैकेयी—'के मागूँ म?'

मन्थरा—'एउटा वरदान यो माग पहिले भरतलाई राजा बनाउने र दोस्रो वरदान यो माग रामचन्द्रलाई चौध वर्षको वनवास मिलोस्। वस्त्राभूषणलाई त्यागीकन कोपभवनमा जाऊ। जब दशरथ तिम्रो यस रूपबाट कातर हुनेछन्, तब उनले तिमीलाई कुनै पनि वस्तु माग्न अनुरोध गर्नेछन्। उनले रामको शपथ खानेछन्। बड़ो सावधानीसाथ काम लिनु। उनी रामलाई वनवास दिन तयार चाहिँ हुँदैनन्। त्यसकारण उनलाई रामको शपथद्वारा बाँधिलिनू। 'भूपति राम शपथ जब करहिं' जब रामको शपथ खान्छन् तब आफ्ना दुइ वरदान माग्नू।'

कैकेयी यसै तर बड़ो सोझी थिइन् तर कुसङ्गले जस्तोसुकैलाई पनि बिगार्छ। कुसङ्गको कारणले मतिभ्रष्ट भयो र उनी अनर्थ गर्न तयार भइन्।

कैकेयीले कोप भवनमा गएर आफ्नो आभूषण आदि खोलेर फ्याँकि र क्रोधित मुद्रा गरेर भूइँमै निदाइन्। उनी वीरांगना थिइन् र राजालाई मन परेकी थिइन्। उनी राजसभा समाप्त भएपछि प्रतिदिन कैकेयीसँग भेट गर्न आउँथे, आज उनी आएर देख्छन् तर कैकेयीको पत्तो छैन।

राजाले कैकेयी कोपभवनमा लड़िरहेकी छिन् भन्ने समाचार पाए। उनी धैर्य धारण गरी वहाँ आए र नजिकै बसेर कैकेयीको स्पर्श के गर्न लागेका थिए उनले रिसाएर भनिन्—'मलाई नछुनु।' कैकेयीले आफ्नो पतिको अपमान गरिन्। दशरथजीले भने—'मैले तिम्रा निमित्त आनन्ददायी समाचार लिएर आएको छु। एक पटक तिमीले भनेकी थियौ तपाईं अब वृद्ध हुन लाग्नुभयो त्यसकारण रामलाई राज्यासनमा बसालेर निवृत्त हुनुहोस्। मैले तिम्रो कुरा मानिलिएँ। भोलि रामको राज्याभिषेक हुने भइरहेछ। के राय छ तिम्रो?'

भरत स्वरूप हुन् वैराग्यका र शत्रुघ्न स्वरूप हुन् सद्‌विचारका। यदि ती दुवै दशरथका नजीक भएका भए दशरथ-कैकेयीको भनाइमा लाग्दैनथे। तर दुवै भएनन्। त्यसकारण कैकेयीको भनाइमा लागिहाले।

सबै प्रकारको अनुकूलता भएर पनि यदि मन कुनै पनि विषयमा गएन भने त्यही सच्चा वैराग्य हो, भरतको वैराग्य दिव्य छ।

सम्पत्ति पाएर पनि सम्पत्तिको मोह नलागे, त्यही वैराग्य हो।

भोज्यपदार्थ नपाएमा उपवास बस्नु निरर्थक छ तर भोजनलाई मिष्ठान्न अगाड़ि होस् र पनि जसले संयम गर्दछ, त्यही वैरागी हो।

ईश्वरको चरणमा वास गर्नु नै उपवास हो। जो ईश्वरको चरणमा बस्ने इच्छा गर्दछ, त्यसले देहधर्म-भोक-प्यासको भान बिर्सनै पर्छ। भोक-प्यास बिर्सिएर मात्र ईश्वरको चरणमा बस्न सकिन्छ।

भरतजी—'वैराग्यलाई सदा आफ्ना साथ राख।' जसले आफ्ना साथमा भरतजी र शत्रुघ्न—सद्‌विचारलाई राख्दैन त्यो कैकेयी-कुबुद्धिको अधीनमा हुनजान्छ।

कौशल्या निष्काम बुद्धि हो, सुमित्रा श्रद्धा हो र कैकेयी कुबुद्धि।

कैकेयीको क्रोध कहिले ओर्लने थियो र? दशरथजीले उनलाई भने 'जे चाहिन्छ सो माग। म तिम्रो अधीन छु। मैले आजसम्म रामको शपथ लिएको छैन। आज रामको शपथ हालेर भन्दछु तिमी जे माग्छ्यौ म अवश्य दिनेछु।'

दशरथ राजा रामको शपथमा बाँधिए अनि कैकेयीले भनिन्—'तपाईंलाई संझना होला मैले दुइ वरदान तपाईंबाट पाउनु छ। म आज सोही माग्न चाहन्छु।'

दशरथ—'हरे, दुइ के चार मागिलेऊ।'

कैकेयी—'कहीं तपाईंले दिन्नँ भन्नुभयो भने?'

दशरथजी—

'रघुकुल रीति सदा चली आई।
प्राण जाय पर वचन न जाई॥'

'मेरो वचन कहिले झूठो हुन सक्दैन। जे चाहन्छ्यौ मागिलेऊ।'

कैकेयीलाई थाहा थियो राम भोलि वनवास जानेछन्। म आज शृङ्गार कसरी गरूँ? मेरो रामले रावणको नाश गरेर राज्य सँभालून्, यसैमा उनको शोभा छ।

झगड़ा पर्छ स्वार्थ र लोभका कारण। वनवासका विना जीवनमा सुवास आउने होइन। तपश्चर्याको विना जीवन सुवासित हुन पाउँदैन। राम युवावस्थामै वनवासी बने।

काम भनेको रावण हो। यो रावणले सबैलाई रुवाउँछ। सबैलाई रुवाउने रावण हो। रावण (काम) जीवमात्रलाई रुवाउँछ। यस्तो रावणलाई मार्नका निमित्त तपश्चर्याद्वारा जीवनमा सात्त्विकता प्राप्त गरिलिनुपर्छ।

कैकेयीको कुबुद्धि मात्र रामको वनवासका निमित्त कारणभूत हो।

कैकेयीले प्रथम वरदान मागिन् भरतको राज्याभिषेक होस्।

मन्थराले कैकेयीलाई भनेकी थिई यदि रामको वनवासको कुरा पहिले भन्यौ भने राजा मूर्च्छित हुनेछन् र यदि मृत्यु भयो भने दोस्रो वरदान बाँकी रहने छ।

दशरथले भने—'तिम्रो इच्छा छ भने भरतको राज्याभिषेक गरौंला। अब दोस्रो वरदान माग।'

कैकेयीले भनिन्—

'तापस वेष विसेषि उदासी।
चौदह बरिस रामु वनवासी॥'

यो दोस्रो वरदानलाई सुनेर राजा निस्तेज भई मूर्च्छित भए। उनी मूर्च्छावस्थामै 'सीताराम, सीताराम' भन्न थाले। मूर्च्छाबाट जागा भएपछि भन्न थाले—कैकेयी, तिमीले यो के मागेकी? मेरो रामलाई वनमा किन पठाइरहेकी छौ तिमी? उसले तिम्रो के अपराध गरेको छ? राम जस्तो सरल बालकलाई वनमा कसरी पठाऊँ? मेरो रामलाई मेरो नजरबाट टाढ़ा नपार। म रामका विना बाँच्न सक्दिनँ।

जिए मीन बरु वारि बिहीना।
मनि बिनु फनिकु जिऐ दुःख दीना॥
कहउँ सुभाउ न छल मन माहीं।
जीवनु मोर राम बिनु नाहीं॥

संभव छ माछा पानीविना बाँच्न सक्ला या सर्प मणिका विना दुःखी भएर बाँच्न सक्ला तर सफा-सफी भन्दछु रामका विना बाँच्न मेरा निमित्त अशक्य छ। मेरो जीवन रामदर्शनको अधीन छ।

अब म केही बढ्ता बाँच्ने होइन। तिमीलाई र मलाई मानिसले के भन्लान्? कैकेयी, भरतको राज्याभिषेक चाहे गरौंला तर रामलाई अयोध्यामै बस्न देऊ। मलाई लाग्दछ तिमीलाई नभनीकन राज्याभिषेकको तयारी भइरहेछ र तिमी रिसाएकी छौ तर, साँच्चै भन्छु कौशल्याले मसँग केही भनेकी छैनन्।

कैकेयी—कौशल्या र राम कस्ता छन् त्यो म राम्ररी जान्दछु। तपाईं आफ्नो वचन पूरा गर्न किन कातर हुनुहुन्छ? तपाईंको रघुकुलरीति कहाँ गयो?

दशरथले कैकेयीलाई मनाउन निकै कोशिश गरे तर ऊ कहाँ मान्नेवाली थिइन्।

अन्तमा बड़ो दुःखसाथ राजा दशरथले भने—'कैकेयी, तिम्रो पनि के दोष? मेरो कालले तिम्रो रूप लिएर आएको छ। अब पनि भन्छु, मानिदेऊ। आफ्नो रामको विना म एकक्षण पनि बाँच्न सक्दिनँ।' तर कैकेयी अब निष्ठुरी भैहालेकी थिइन्। उनी मानिनन्।

दशरथजीले भने—'अलच्छिनी, मेरो सामुन्नेबाट हट। मलाई विश्वास छ भरत कहिले पनि राजा बन्ने होइन। चौध वर्षपछि रामनै राजा बन्ने छ। आज विधाता प्रतिकूल छ। रामको राज्याभिषेक हेर्नको निमित्त म जीवित रहन पाउने छैन।'

दशरथ राजा सूर्यनारायणलाई मनाउन थालेर भने—आजको रात अब कहिल्यै समाप्त हुन नपाओस् र रामलाई वनमा जान नपरोस्।

उनी शिवजीसँग पनि प्रार्थना गर्न लागे—हे शंकर भगवान्! रामलाई प्रेरणा दिनुहोस् मेरो आज्ञालाई उसले उल्लङ्घन गरोस् र वनगमन नगरोस्।

प्रातःकाल भयो। राजा जागा भएका छैनन्। मन्त्री सुमन्त्र आए। उनी कैकेयीको राजमहलमा आएर हेर्छन् तब दशरथजी मूर्च्छित लडिरहनुभएको थियो। उनले कुरा बुझे कैकेयीबाटै केही कपट भएको छ। उनले कैकेयीलाई सोधे—'महाराज किन अहिलेसम्म जागा हुनुभएको छैन?'

कैकेयीले रिसाएर भनिन्—'मलाई केही थाहा छैन। सारा रात 'राम-राम' गर्दै हुनुहुन्छ। त्यसकारण रामलाई गएर सोध।'

त्यसपछि सुमन्त्रले रामकहाँ गएर भने 'पिताजी तपाईंलाई संझिरहनुभएको छ।' रामले कैकेयीको आवासमा गएर पिताको स्थिति देखेर कैकेयीलाई सोध्नु भो—'मेरा पिताजीलाई के भएको छ? मलाई समाचार किन नपठाएको?'

कैकेयी—'म तिमीलाई के भनूँ? आफ्नो पिताको दुःखको कारण तिमी मात्र हो। मैले उहाँसँग दुइ वरदान माँगें। उहाँ पहिल्यै वचनबद्ध भइसक्नुभएको थियो। वरदान सुन्नासाथ उहाँ अचेत भइहाल्नुभयो।'

वरदान सुनेपछि रामचन्द्रले मातालाई प्रणाम गरे र भने—'माता कैकेयी, तपाईं मेरा निमित्त कसरी पक्षपात गर्नुहुन्छ? मलाई वनमा ऋषि मुनिहरूको सत्सङ्गको लाभ होस् र मेरो कल्याण होस् भन्ने हेतुले तपाईंले मलाई वनमा पठाइरहनुभएको छ। भरतभन्दा पनि ज्यादा प्रेम तपाईंले मलाई गरिरहनुभएको छ।'

कैकेयीको निष्ठुरताको कुनै सीमानै रहेन।

'राम' शब्द सुन्नासाथ दशरथजीको आँखा खुल्यो। रामले प्रणाम गरेपछि दशरथले अँगालो मारे—'राम, मलाई छोड़ेर कहीं नजाऊ।'

रामचन्द्रजी पिताजीलाई धैर्य दिंदै संझाउन लाग्नुभो—'तपाईं स्वयं धर्म धुरन्धर हुनुहुन्छ! तपाईंलाई कसले के संझाउन सक्छ? चौध वर्षको समय एकदम छिटै बितिजाने छ। तपाईंको दर्शनका निमित्त म फर्केर आउनेछु। तपाईंको आशीर्वादले वनमा मेरो कल्याणै होला। मलाई बड़ो आनन्द लागिरहेछ मेरो प्रिय भाइ राजा हुने भइरहेछ।'

यसपछि अब रामचन्द्र कौशल्याकहाँ आउनुभो। आमाको मन भारी भयो। राम्रो आसनमा बसालेर दही अक्षताले पर्सिएपछि भन्न थालिन्—'बेसै भयो तिमी आयौ। आज तिम्रो राज्याभिषेक होला। वशिष्ठजीले राजतिलक गर्नुहुनेछ। राजसभामा धेरै बेर बस्नुपर्ला त्यसकारण अहिल्यै भोजन गर।'

रघुनाथजीले गम्भीरतापूर्वक आमालाई भन्नुभो—'पिताजीले भरतलाई अयोध्याको राज दिनुभएको छ र मलाई वनवास।'

कौशल्याले सबै कुरा सुनिन् र उनी दुःखले स्तब्धजस्ती भइन्। यस्ता कुरा उनको हृदयमा बाणजस्तो बिझ्न गयो। उनलाई जो दुःख भयो त्यसको वर्णन शब्दहरूमा कसरी गर्न सकिन्छ?

## कहि न जाइ कछु हृदय विषादू।

तर कौशल्याले आफूलाई सम्हाल्दै भनिन्—'भरत राजा बनून्, तिमी वनवासी बन, ठीकै छ तर तिमी गएपछि पिताजीको के हुने होला ? आजै स्थिति यस्तो भैगएको छ—'

## बड़भागी बनु, अवध अभागी।

म तिम्रा साथ वनमा जान सक्दिनँ किनभने मेरो पातिव्रत्य धर्मले अनुमति दिँदैन।

पुत्र, वनको देवताले तिम्रो रक्षा गरून्।

यसै वेला सीताजी पनि त्यहाँ आइपुगिन्, आफ्नी सासूलाई दण्डवत् गरेर भूईंमा नजर राख्दै त्यहाँ उभिइरहिन्।

कौशल्याले रामलाई भनिन्—'बाबु, यिनी मेरी कुलवधू मात्र होइनन् साक्षात् लक्ष्मी हुन्। मलाई तर आशा थियो प्रेम-लता फुल्ला, फल्ला।'

बाबु, यदि तिमी वनमा जान्छौ भने जान सक्छौ तर मेरी सीता मसँगै बस्छिन्। मेरो आफ्नो छोराले जतिसुकै कष्ट उठाए हुन्छ तर अर्काकी छोरीलाई कत्ति दुःख दिनुहुन्न। आफ्नो परेलाले जसरी आँखाको रक्षा गर्छ सोही किसिमबाट सीताको पनि मैले रक्षा गर्नुपर्छ।

## राखहुँ पलक नयन की नाईं।

रामले सीतालाई भने—'तिमी यहाँ घरैमा बसिदियौ भने मातालाई प्रसन्नता हुनेछ। सासू-ससुराको सेवा गर्नु पनि तिम्रो धर्म हो। वनमा राक्षस पनि हुन्छन्। वनवासमा धेरै कष्ट हुन्छ। वनवास केवल मलाई दिएको छ। तिमी यहीं बसेर सबैको सेवा गर्नु।'

सीताजी मनमा सोचिरहेकी थिइन् प्राणनाथका साथमा मेरो शरीर र प्राण दुवै जान पाउने हो वा केवल प्राण मात्रै।

## कि तनु प्राण कि केवल प्राना।

धैर्यसँग सीताले भनिन्—'तपाईंको कुरा ठीकै छ तर नारीको आधार एक मात्रै हुन्छ। यदि तपाईंलाई यस्तो विश्वास छ तपाईंको विरहमा चौधह वर्षसम्म म बाँच्न सक्छु भने मलाई यहाँ छोड़ेर जान सक्नुहुन्छ। तपाईंको विरहमा मेरो प्राण गए म भाग्यशाली हुन्छु तर मेरो शरीरमा पनि कृपा रहोस्।

अरू के भनूँ तपाईं स्वयं अन्तर्यामी हुनुहुन्छ।'

रामचन्द्रजीले सोच्नुभयो यसलाई यहाँ बस भनेर अति आग्रह गरें भने यिनले प्राण त्याग गरिदेलिन्। 'ठीक छ, म तिमीलाई आफ्ना साथ लैजाने छु।'

कौशल्या—'बाबु, मेरी सीतालाई क्षणमात्र पनि एक्लै नछोड्नु। म तिम्रो यो मनोहर युगलको दर्शन अब फेरि कहिले पाउँला ?'

त्यसै वेला लक्ष्मणजी त्यहाँ आइपुगे, रामले उनलाई भने—'लक्ष्मण, मातापिताको भलिभाँति सेवा गर्नू।'

लक्ष्मण—'मेरा मातापिता तपाईंनै हुनुहुन्छ। यदि तपाईंले मेरो त्याग गर्नुहुन्छ भने म कसको शरणमा जाऊँ मलाई नत्याग्नुहोस्। पानीविना माछा शायद बाँच्न सक्छ, तर म रामसीताका विना बाँच्न सक्दिनँ।'

राम पनि जान्नुहुन्थ्यो लक्ष्मण उहाँका विना बाँच्न सक्दैनन्। त्यसकारण उहाँले लक्ष्मणलाई भन्नुभयो, 'माता सुमित्राको आज्ञा मागेर आऊ।'

लक्ष्मणजीले आमासँग सबै कुरा गरे। सुमित्राले भनिन् 'कैकेयी, तैंले तर अयोध्यालाई भत्काइदिइस्।' लक्ष्मणलाई भनिन्, 'गच्छ तात यथा सुखम्।'

लक्ष्मण तिमीलाई मात्र आफ्नो सेवाको लाभ दिन भनी राम वनमा गइरहेछन्। अनन्य भावले तिमीले राम-सीताको सेवा गर्नू।

पुत्रवती जुवती जग सोइ।
रघुपति भगत जासु सुत होइ॥

लक्ष्मण, मेरो अनुमति छ—

अवध तहाँ जहँ राम निवासु।

उर्मिला आइपुगिन्। एक शब्द पनि बोल्न सकिनन्। मनै मनले प्रणाम गरिन्।

सीता, राम र लक्ष्मण दशरथकहाँ गए। दुःखसंतप्त पिताजीलाई राम धैर्य दिँदै भन्न लागे—पिताजी, शान्त हुनुहोस्। हामी वन गइरहेछौं। हामीले आज्ञा पाऔं, आशीर्वाद पाऔं।

यस वेलाको वर्णन कसले गर्न सक्छ ?

दशरथ तर मूर्च्छितजस्तै थिए। कैकेयी भन्न लागिन्—मेरो आज्ञा पिताको आज्ञा हो। उहाँ स्वयं केही भन्न सक्नुहुन्न।

कैकेयीको आज्ञाबाट वल्कल ल्याइयो। राम, लक्ष्णण र सीता आफ्नो राजसी पोशाक त्यागेर वल्कल धारण गर्ने तयारीमा लागे। यत्तिकैमा वहाँ वशिष्ठजी आइपुगे। उनले सीताजीको वल्कल खोसेर कैकेयीलाई भने—'तिमीले रामलाई वनवास दिएकी छौ, सीतालाई होइन। सीता हाम्री राज्यलक्ष्मी हुन्।'

अयोध्याका प्रजा दुःखका कारण व्याकुल भए।

रामले जनतालाई भन्नुभो—'मेरा माता-पिताको सेवा गर। जसले उहाँहरूको सेवा गर्ला उही मलाई प्रिय हुनेछ। वशिष्ठजीले तपाईं सबैको रक्षा गर्नुहुनेछ।'

तर प्रजाहरू भन्न थाले—'जहाँ हाम्रो राम हुनुहुनेछ, हामी उहीं जान्छौं।'

राम, लक्ष्मण, सीताले वनतर्फ प्रस्थान गरे। कैकेयीले भनिन्—'राम गयो तर साथसाथै अयोध्यालाई पनि उजाड़ पारेर गयो।'

जहाँ तेरो मेरो, आफ्नो पराईको भेद-भाव छ वहाँ भगवान् बस्न सक्नुहुन्न।

दशरथ मूर्च्छाबाट जागे र राम वनतर्फ लागेको समाचार पाए।'अहो ! मेरा राम गए तर मेरो प्राण किन अहिलेसम्म बाँकी रहेको होला ?'

## अजहुँ न निकसे प्राण कठोर।

मंत्रीजी, मेरो सुवर्ण रथ लैजाऊ। रामलाई भन हिँड़ेर नजानु, रथमै बसेर जानु। यो मेरो आज्ञा हो। दुइ चार दिन उनलाई वनको भ्रमण गराउनु र फेरि सबैलाई अयोध्या फर्काएर ल्याउनु। यदि राम फर्केर आएनन् भने सीतालाई चाहिँ अवश्य लिएर आऊ।

दशरथको यस आज्ञालाई शिरोधार्य गरेर मन्त्री सुमन्त्र, रथ लिएर रामकहाँ आएर भने—'तपाईंको पिताको आज्ञा छ वन पैदल होइन रथमा बसेर जानू। अयोध्या उजाड़ भयो।'

सबै तमसानदीको किनारा आइपुगे। मध्यरात्रिको समय छ। सबै गाढ़ानिद्रामा छन्। रामजीले मन्त्रीलाई भन्नुभयो—'यी सबै सुतेका छन्। बिस्तारै रथ चलाउनुहोस्, जसले गर्दा यिनीहरू नबिउँझून् हामी यहाँबाट हिँड़िदिऊँ ?' भगवान् शङ्करलाई प्रणाम गरेर रामचन्द्रजीले त्यहाँबाट अगाड़ि प्रस्थान गर्नुभयो।

बिहान भएपछि रामको रथ शृङ्गवेरपुर नजिक आइपुगेको थियो।

यता प्रजाजनहरू बिउँझेर हेर्छन् तर रामको कहीं पनि पत्तो थिएन। ती सबै व्याकुल भएर विलाप गर्न थाले।

शृङ्गवेरपुरका राजाले रामको आगमनको समाचार पाए। गुहक त्यहाँ आए। प्रभुले गुहकको स्वागत गर्नुभो। गुहकले रामचन्द्रजीलाई निवेदन गरे—'मेरो राज्य तपाईंकै हो। म कहाँ जाऊँ। मेरो नगरलाई पवित्र गरिदिनुपर्‍यो।'

रामचन्द्रजी—'चौध वर्षसम्म म कुनै नगरमा पनि प्रवेश गर्न सक्तिनँ।'

एक दिन व्रत गर्नुभयो, दोस्रो दिन फलाहार। रामचन्द्रजीले मन्त्रीलाई भन्नुभयो—'अब तपाईं अयोध्या फर्केर जानुहोस्। विपत्तिका समयमा पनि महापुरुष धैर्यरहित हुँदैनन्। मेरा पिताजीलाई मेरो दण्डवत् विन्ति गरिदिनू।'

सुमन्त्र—'सीताजीलाई तब मेरासाथ पठाइदिनुहोस्।' सीताजी दशरथजीको ठूलो आधार हुनुहुन्थ्यो।

सीताजी—मन्त्रीजी ! म जान्नँ। मैले जनकपुरीको वैभव पनि देखेकी छु र अयोध्याको पनि देखें। म त्यहाँ जान्छु जहाँ मेरा पतिलाई बस्नुपर्छ।

सुमन्त्र एक्लै फर्किए। रामले राजा गुहकद्वारा वटवृक्षको दूध झिकाएर कपालमा हाली जटा बनाउनुभयो। रघुनाथजी तपस्वी हुनुभयो। गुहकले यो दृश्य देख्न नसकेर मूर्च्छावश भूइँमा लड़े।

गङ्गापारि तर्नु थियो। गङ्गाकिनारा आइपुगे। लक्ष्मणजीले केवटलाई बोलाएर सोध्नुभयो—'के तिमीले हामीलाई पनि तारिदिन्छौ ?' केवटले आफ्नो नाउबाटै भन्न थाल्यो, 'म तिम्रो मर्म बुझ्दछु।'

लक्ष्मणजी—'हे भाई, कुनचाहिँ मर्म जान्दछौ ?'

केवट—'रामका चरणको धूलोको स्पर्शले पत्थरकी अहल्या सजीव भइन्। मेरो नाउ काठको छ। रामचरण स्पर्शले मेरो नाउ पनि यदि स्त्री बन्यो भने मैले आफ्नो कुटुम्बको परिपालन कसरी गर्न सकुँला र यो अर्की स्त्रीलाई के गरूँला ? यदि मेरो नाउमा तपाईं बस्न चाहनुहुन्छ भने मलाई पहिले रामचन्द्रजीको चरण धुने अनुमति दिनुहोस्। उहाँको चरण धोएर धूलो सफा गरेर मात्र म उहाँलाई आफ्नो नाउमा बस्न दिन्छु।'

केवटको प्रेमपूर्ण वचन सुनेर रघुनाथजी साह्रै प्रसन्न हुनुभयो। उहाँले केवटलाई आफ्नो नजिक बोलाउनुभयो। काठको भाँड़ो लिएर ऊ पनि आयो र भन्न लाग्यो—'मेरो इच्छा छ तपाईंको चरण पखालूँ।'

रामचन्द्र सोचिरहनुभएको छ मेरा दुवै गोड़ाका स्वामी यहीं छन्, अब तेस्रो आइपुग्यो। वशिष्ठजीले न्याय गरिदिनुभएको थियो। निर्विकारी लक्ष्मण दक्षिण चरणको सेवा गर्नेछन् र सीताजी बायाँ चरणको।

केवट भाग्यशाली थियो। उसले दुवै चरणको सेवा गर्न सक्यो। गङ्गाजलले दुवै गोड़ा पखाल्न थाल्यो। बड़ो लगनसाथ पाउ पखाल्यो। 'मेरो इच्छा पूर्ण हुन दिनोस्।'

जिन चरननकी चरन पादुका भरत रह्यो लौ लाई।
सोइ चरन केवट धोइलिन्हें तव हरि नाव चलाई॥
भजमन रामचरण सुखदाई॥

यो केवट पूर्वजन्ममा क्षिर समुद्रमा कछुवा थियो। उसले नारायणको चरण सेवा गर्न चाहन्थ्यो। लक्ष्मीजी र शेषले अनुमति दिएनन्। आज लक्ष्मीजी सीता बनेकी छन् र शेष लक्ष्मण। अगिल्लो जन्ममा तपाईंले मलाई नारायणको चरण सेवा गर्न दिनुभएको थिएन। आज तपाईं दुवै उभिरहनुभएको छ र म सेवा गरिरहेछु।

माझीले राम, लक्ष्मण, सीतालाई गङ्गापारि गरिदियो। माझीले उनीहरूलाई साष्टाङ्ग प्रणाम गऱ्यो। रामजीले सोच्नुभयो यसलाई केही दिनुपर्छ, तर के दिऊँ मसँग केही छैन। सीताजीले

रामजीको मनोभाव थाहा पाइन्। उनले आफ्नो औंठी रामलाई दिइन्। रघुनाथले त्यो औंठी केवटलाई दिन लाग्नुभयो। 'म तिमीलाई दामको रूपमा होइन सेवाको उपहारको रूपमा यो दिँदैछु।'

केवटले भन्यो—'मेरो प्रतिज्ञा छ साधु-सन्तहरूलाई विना दाम पार लगाउने।'

श्रीराम—'प्रसादको रूपमा लिइदेऊ।'

केवट—'आजको प्रसङ्ग प्रसाद लिनेजस्तो छैन। चौध वर्षको वनवासको समाप्तिपछि जब तपाईंको राज्याभिषेक होला अनि म प्रसाद लिनेछु।'

केवटले औंठी लिन बारम्बार नामंजूर गर्दा लक्ष्मणजीले पनि उसलाई लेऊ भनेर आग्रह गर्न थाले।

अनि केटवले भन्यो—'म र राम एउटै जातिका हौं। म आफ्नो भाइसँग दाम कसरी लिऊँ?'

केवटले केवटसँग तारेको दाम के लिन्छ?

लक्ष्मणले क्रोधित भएर भने—'के बरबराएको तैले? के हामी एक जातिका हौं?'

केवट—'मेरो र तपाईंको होइन, तर मेरो र रामचन्द्रजीको जाति एक हो।'

म गङ्गा नदीको केवट हुँ। मानिसलाई गङ्गापार तारिदिन्छु, तर रामचन्द्रजी संसार सिन्धुको केवट हुनुहुन्छ, मानिसलाई संसार-सागर पार गरिदिनु हुन्छ। यस जीवलाई पनि संसारसागरको किनारा लगाइदिनु होला।

**जासु नाथ सुमिरत एक बारा।**
**उतरहिं नर भवसिन्धु अपारा॥**

राज्याभिषेकका समयमा केवट आउन सकेको थिएन किनभने रामचन्द्र विमानद्वारा अयोध्या फर्कनुभएको थियो। तर रामचन्द्रजीले उसलाई संझिएर गुहकद्वारा प्रसाद पठाइदिनु भएको थियो।

अब तीनैजना अगाड़ि बढ्न थाले। सीताजी साहसिक, विवेक र सङ्कोचले हिँड्थिन्। अगाड़ि राम हिँड़िरहनुभएको थियो। बीचमा सीताजी र पछाड़ि लक्ष्मणजी। राम र लक्ष्मणका बीचमा हिँड़िरहेकी सीताको शोभाको के कुरा गरौं?

**ब्रह्म जीव विच माया जैसी।**

मानौं जीव र ब्रह्मका बीच माया हिँड़िरहेकी जस्तो लाग्थ्यो।

गोरेटो बाटो बड़ो साँगुरो थियो। लक्ष्मण काँढ़ामाथि हिँड़िरहेका थिए। रामले हेर्न सकेनन्। उनले लक्ष्मणलाई अगाड़ि गरे र स्वयं सीताको पछाड़ि भए।

बाटामा बास बस्ने गाउँका मानिस दर्शनार्थ आए। स्त्रीहरू सीताजीलाई वन्दना गर्दै जाँदै गर्थे।

गाउँले आपस्तमा कुरा गर्थे—'यस्ता सुकुमारहरूलाई वनमा पठाउँदा कैकेयीलाई लाज पनि लागेन ?'

गाउँका स्त्रीहरूले सीतालाई सोधे—'यी दुइ तपाईंका को पर्छन् ?'

सीताजीले भनिन्—'जो गोरा छन्, ऊ मेरा देवर हुनुहुन्छ। रामको परिचय शब्दले दिइनन्, आँखाको ईशाराले दिइन्।'

श्रुतिले पनि परमात्माको वर्णन निषेधपूर्ण गरेको छ—'न इति, न इति।'

राम-सीता दुर्भासनमा सुते। गुहक र लक्ष्मणजी पहरा दिन थाले।

गुहकले कैकेयीका बारेमा कटु वचन सुनाए तब लक्ष्मणजीले उसलाई संझाउन लाग्नु भयो, यो उपदेश 'लक्ष्मण-गीता' नाउँले प्रसिद्ध छ।

सुखस्य दुःखस्य न कोऽपिदाता।

मनुष्यलाई उसको कर्मले मात्रै सुख या दुःख दिन्छ। यस सृष्टिको आधार कर्म हो। यसै कारणले ज्ञानी महात्माहरू कसैलाई पनि दोषी मान्दैनन्।

रामचन्द्रजी स्वेच्छाले वनवासी बनेका हुन्। सीतारामको चरणारविन्दको नित्य स्मरण परमार्थ हो।

सखा परम परमारथु एहू।
मन क्रम वचन राम पद नेहू॥

सुखदुःखको कारण जसले आफूभित्र खोज्छ, त्यो सन्त हो। ज्ञानी पुरुष सुख-दुःखको कारण बाहिर खोज्दैनन्। मनुष्यको सुख-दुःख दाता बाहिर कोही छैन। यो कल्पना मात्र पनि भ्रामक हो— मलाई सुख-दुःख कसैले दिइरहेछ। यस्तो कल्पनाले मात्र अरूका प्रति वैरभाव जगाउँछ। वस्तुतः सुख या दुःख कसैले दिनै सक्दैन। यो मनको कल्पनामात्र हो। सुख-दुःख कर्मकै फल हो। सदासर्वदा मनलाई संझाऊ उसलाई जो सुख-दुःखानुभव भइरहेछ, त्यो उसैको कर्मको फल हो।

कोउ काहु सुख दुःख करदाता।
निज कृत करम भोग सबु भ्राता॥

राम तर परमानन्द हुनुहुन्छ। उसले उहाँको स्मरण गर्छ उसलाई दुःख हुँदैन, सुख हुन्छ। त्यसकारण उहाँलाई दुःख हुने कुनै प्रश्नै छैन। उनका मनमा कैकेयीका प्रति कुनै मनोदुःख छैन। रामलाई कर्मको बन्धन छैन, उहाँ कर्मभन्दा टाढ़ा हुनुहुन्छ। ती आफ्नो इच्छाले मात्र प्रकट हुन्छन्। जीवलाई आफ्नो कर्मको कारण जन्म लिनुपर्छ। ईश्वर स्वेच्छाले प्रकट हुनुहुन्छ।

तैपनि परमात्मा लीला गर्न प्रकट हुनुभएको छ, त्यसकारण कर्मको मर्यादामा रहनुहुन्छ। जगत्का सामुन्ने एक आदर्श राख्नुहुन्छ, स्वयं परमात्मा भएर पनि कर्मको बन्धनमा हुनुहुन्छ। उहाँ स्वेच्छाले अवतरित हुनुभएको छ। जीव आफ्नो कर्मले जन्म लिन्छ।

रामकथा कैयौं ग्रन्थहरूमा वर्णित गरिएको छ। कैकेयीले रामलाई वनवास दिइन्। कौशल्या मातालाई अति दुःख भयो। रामचन्द्र भन्नुहुन्छ—'यो मेरै कर्मको फल हो। पूर्वजन्ममा मैले कैकेयीलाई दुःख दिएको थिएँ, त्यसैको यो फल हो। मैले परशुरामावतारमा जो गरें त्यसको फल यस अवतारमा पाइरहेछु।' पूर्वजन्ममा कैकेयी जमदग्नि ऋषिकी पत्नी रेणुका थिइन्। परशुराम उनैका पुत्र थिए।

एक पटक गन्धर्व चित्रसेन कैयौं अप्सराहरूका साथ सरोवरमा विहार गरिरहेका थिए। रेणुकाले त्यो दृश्य देखेपछि उनको मनमा विकार जागेर आयो र केही असन्तोष पनि। यी अप्सराहरूलाई जस्तो सुख मिलिरहेछ, त्यस्तो कहिल्यै मैले पाएकी छैन। रेणुकालाई फर्कनमा अबेर भयो। जमदग्निले थाहा पाए रेणुकाको मनमा व्यभिचार उत्पन्न भयो। जमदग्नि खिन्न भए। उनले छोरालाई भने—'तेरी आमाले पाप गरेकी छ, त्यसको हत्या गरिदे।' पिताको आज्ञा सुनेर विना विचार गरी परशुरामले रेणुकाको शिरोच्छेदन गरिदिए।

रामचन्द्र कौशल्यालाई संझिरहनुभएको छ उस जन्ममा मैले आमालाई दुःख दिएको थिएँ। त्यसैले यस जन्ममा उनले मलाई दुःख दिइरहिछन्।

महात्मा यहाँसम्म भन्छन् रामले बालीको हत्या गरेका थिए र त्यही बाली कृष्णावतारका समयमा पारधिको रूप लिएर आयो र भगवान्लाई उसको वाणद्वारा प्राण त्याग्नुपर्‍यो।

गरेका कर्महरूको फल भोग्नै पर्छ।

सारा रात लक्ष्मणजी र गुहकले कुरा गर्दा-गर्दै पहरा दिइरहे। ब्राह्म मुहूर्तमा रामचन्द्रजीले स्नानादिबाट निवृत्त भएर शिवजीको पूजा गर्नुभो।

आफ्नो जीवनमा केही नियम हुनुपर्छ। जसको जीवनमा शुभ सङ्कल्प छैन, त्यो पशुभन्दा पनि अधम हो। नियमको पालनको अभावमा मनुष्य पशुभन्दा पनि गएगुज्रेको हुन्छ।

रघुनाथले जगत्का सामुन्ने आदर्श राख्नुभयो आफू स्वयं ईश्वर भए पनि भगवान् शङ्करको पूजा गर्नुहुन्छ।

गुहकलाई फर्क भनियो तर उनी मानेनन् तब रामचन्द्रजीले भन्नुभयो—'ठीक छ, हामी चित्रकूट पुगौं तब फर्कनू।'

भगवान् विस्तार-विस्तार अगाड़ि बढ़िरहनुभएको छ। प्रयागराज आइपुग्यो र वहाँ भरद्वाज मुनिको आश्रममा पुग्नुभयो।

तिमी भरद्वाज बन्यौ भने तिमीकहाँ पनि भगवान् आउनुहुनेछ। भरद्वाज अर्थात् उपदेशलाई कानमा भरिलिनु।

यस जगत्का कुराहरूमा धेरै ध्यान दिनाले केही लाभ छैन, बरू भक्तिमा विक्षेप हुन जान्छ। भरद्वाज ज्यादा बोल्नुहुन्न। उहाँ बराबर रामकथा सुन्नुहुन्थ्यो र रामचरणको बड़ो अनुरागी हुनुहुन्थ्यो। राम-सीता-लक्ष्मणको आगमनबाट उहाँ ज्यादै खुशी हुनुभयो। वरपरका अन्य ऋषिहरू पनि आउन थाले। भरद्वाज भन्नुहुन्छ—'आजसम्मको कड़ा साधनाको फल पाइयो। सबै साधनाको फल हो भगवान्को दर्शन। भगवान्को प्रत्यक्ष दर्शनका विना शान्ति छैन।' भगवान्ले एक रात उनकै आश्रममा बिताउनुभयो।

भोलिपल्ट प्रातःकालमा रामले मुनिलाई भन्नुभयो—'बाल्मीकि आश्रमको बाटो देखाउनका निमित्त कुनै मुनिकुमारलाई हाम्रा साथ पठाइदिनुहोस्।' दुइ-चार ऋषिकुमार साथ-साथ आए। सबै बाल्मीकि आश्रममा आइपुगे।

बाल्मीकिले समाधि भाषामा रामकथा लेखेका छन्। रामजीको प्राकट्यको पूर्व बाल्मीकिले रामायण लेखिसकेका थिए। उनी आदिकवि हुन्। उनकै मुखबाट सर्वप्रथम श्लोक प्रकट भएको थियो। यसभन्दा अघि कुनै श्लोकै थिएन। प्रथम श्लोक क्रौंचवधसम्बन्धी हो। कुनै व्याधाले एक क्रीड़ारत क्रौंच जोड़ीमा बाण हान्यो र एउटा चरा मरिहाल्यो। बाल्मीकि यस दृश्यलाई देखेर बहुतै दुःखी भए। उनले त्यस व्याधालाई श्राप दिए। यस श्लोकको दुइ अर्थ छ। एक सामान्य र दोस्रो रामसम्बन्धी।

बाल्मीकि आश्रममा श्रीराम, जानकी र लक्ष्मण आउनुभयो। श्रीरामले बाल्मीकिलाई भन्नुभयो—'तपाईं त्रिकालदर्शी हुनुहुन्छ।'

बाल्मीकि—'यो सत्सङ्गको फल हो। म पैले भिल्ल थिएँ। मानिसहरूलाई लुटिरहन्थें। कुटुम्बलाई पाल्नका निमित्त पापाचार गर्थें। नारदजीको सत्सङ्गले मेरो जीवन बदलिदियो।'

एक पटक नारदजी बाटामा भेटिनुभयो तब मलाई सोध्नुभयो—'तँ कसका निमित्त पाप गरिरहेछस्?' मैले भनें—'आफ्ना कुटुम्बका निमित्त।'

नारदजी—'के तेरा कुटुम्बका सबै मानिस तेरो यस पापका निमित्त पनि अंशियार हुन्छन्?'

मैले भनें—'किन हुन्नन्? ती सबै मेरा पापका अंशियार हुन्।'

नारदजी—'तँ आफ्नो घर जा र सबैलाई सोध् तेरो पापमा तिनीहरूले हिस्सा लिन्छन् कि लिँदैनन्?'

मैले आफ्नो घर आएर पत्नी र सन्तानलाई भनें—तिमीहरू सबैका निमित्त मैले पाप र अत्याचार गर्नुपर्छ, त्यसकारण तिमीहरू पनि मेरो पापको हिस्सेदार हौ। त्यसो भन्दा ती सबैले भने—'हामी किन बनौं हिस्सेदार? जसले पाप गर्छ त्यसले पापको फल भोग्नुपर्छ। तिम्रा पापहरूसँग हाम्रो के लिनु-दिनु छ र?'

त्यसो भनेको सुन्दा मेरो आँखा खुल्यो। ती सबैमाथि मलाई ग्लानि भयो। मेरो मोह, मेरो भ्रम अब नष्ट भइसकेको थियो। मैले नारदजीका समक्ष सबै विस्तार गरें। तब उहाँले मलाई राम

नामको मन्त्र दिनुभयो, तर म पापी र अनपढ़ थिएँ। मेरो मुखबाट 'राम-राम' को साटो 'मरा-मरा' निस्किरहेको थियो। राम-नामको जप ठीकसँग गर्न सकिनँ। मैले उल्टै जप गरिरहें। तर प्रभुले ममाथि कृपा गरेर मेरो उद्धार गरिदिनुभयो।

सोइ जानइ जेहि देहु जनाई।
जनत तुम्हहि तुम्हइ होइ जाइ॥

तपाईं कृपा गरेर जसलाई आफ्नो स्वरूपको ज्ञान गराउनुहुन्छ उसैले तपाईंलाई चिन्न सक्छ। तपाईंलाई चिनेपछि त्यो पनि तपाईंकै स्वरूप बन्दछ।

तुलसीदासजीले रामायणमा पूर्णाद्वैतको वर्णन गरेको छ। अगाड़ि भगवान् र भक्तमा कुनै भेद रहन जाँदैन।

रामचन्द्रजीले बाल्मीकिजीसँग भन्नुभयो—'हामी वनमा बस्न चाहन्छौं। हामी कहाँ बसौं? हामीलाई कुनै राम्रो स्थान बताउने कृपा गर्नोस्।'

बाल्मीकि—'तपाईं कहाँ हुनुहुन्न? जहाँ तपाईं हुनुहुन्न त्यस्तो एउटा स्थान पनि छैन। तपाईं सबै स्थानमा हुनुहुन्छ। तपाईं भक्तहरूका हृदयमा पनि हुनुहुन्छ।'

यी चौपाइहरूमा भनेअनुसार लक्षण तपाईंमा आयो भने भगवान् तपाईंको हृदयमा पनि वास गर्नुहुनेछ।

जिनके श्रवण समुद्र समाना। कथा तुम्हारि सुभग सरि नाना॥
भरहिं निरन्तर होहिं न पूरे। तिनके हिय तुम कहुँ गृह रूरे॥
काम क्रोध मद मान न मोहा। लोभ न छोभ न राम न द्रोहा॥
जिनके कपट दंभ नहिं माया। तिनके हृदयँ बसहु रघुराया॥
सबके प्रिय सबके हितकारी। दुःख सुख सरिस प्रसंसा गारी॥
कहहिं सत्य प्रिय वचन विचारी। जागत सोवत सरन तुम्हारी॥
तुमहिं छाँड़ि गति दूसरि नाहीं। राम बसहु तिनके उर माँही॥
जननी सम जानहि परनारी। धनु पराव विष तें विष भारी॥
जे हरषहिं पर संपति देखी। दुखित होहिं पर विपति विसेखी॥
जिन्हहिं राम तुम प्रान पियारे। तिन्हके मन सुभ सदन तुम्हारे॥

स्वामि सखा पितु मातु गुरु, जिन्हके सब तुम्ह तात।
तिन्हके मन-मन्दिर बसहु, सीय सहित दोउ भ्रात॥